# कर्क लग्नमा-सुनौला तारीखहरू

सन् २००१ को वर्षमा ता० ६/१/२००१ देखि समय केही दुर्बल रहला। ता० ३/२/२००१ बाट समय सप्रन्दै जान सक्तछ। ता० १९/३/२००१ बाट समय बिस्तार-बिस्तार सप्रला। ता० २/५/२००१ बाट ३०/५/२००१ सम्ममा समय राम्रो रहने छ। ता० ३१/५/२००१ बाट व्यय बढी होला। ता० २६/७/२००१ बाट धनमा सफलता पाए पनि भाग्यमा न्यूनता रहने छ। ता० ३१/१२/२००१ सम्ममा सफलता र अनेक झ्याउलाहरू रहिरहने सम्भावना देखिन्छ।

कु० नं० ३६९

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

सन् २००२ को वर्षमा- ता० १/१/२००२ बाट समय कमजोर रहने छ। ता० २२/२/२००२ बाट समय सप्रदै जानेछ र उन्नति भइरहला। ता० १३/३/२००२ बाट भाग्यमा केही न्यूनता आउन सक्दछ। ता० २३/५/२००२ बाट फेरि भाग्योन्नति आरम्भ हुनेछ। ता० २५/६/२००२ बाट आयभन्दा व्यय बढी रहने छ। ता० १०/८/२००२ बाट भाग्योन्नतिको उत्तम सफलता र उन्नति रहिरहने छ। त्यसपछि ता० ३१/१२/२००२ सम्ममा समयमा केही न्यूनता चल्दै रहला। यो वर्ष राम्रो देखिन्छ।

कु० नं० ३७०

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नमा उत्तम तारीखहरू

सन् २००३ को वर्षमा-ता० १/१/२००३ बाट समय विपरीत चल्नेछ। ता० १८/२/२००३ बाट भाग्यको शक्तिमा सफलता रहला र उन्नति भइरहने छ। ता० २३/३/२००३ बाट विभिन्न प्रकारका सफलता र अनेक झ्याउला एवं हानिहरू आइलाग्नेछ। ता० १७/७/२००३ बाट समय सफलता र उन्नतितिर लम्कने छ। ता० ३०/८/२००३ बाट धन र मान-सम्मानमा वृद्धि होला। ता० १८/१०/२००३ बाट घरको सुख-शान्तिमा बाधा पर्न सक्दछ। ता० २०/११/२००३ बाट सद्बुद्धि र सन्तान पक्षबाट उन्नति र सफलता प्राप्त होला। ता० ३१/१२/२००३ सम्मको समय प्रायशः उत्तम रहने छ।

कु० नं० ३७१

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

सन् २००४ को वर्षमा- ता० १/१/२००४ बाट समय केही दुर्बल अर्थात् कमजोर रहला। ता० ३/४/२००४ देखि भाग्य सप्रन्दै जानेछ। ता० १/५/२००४ देखि भाग्योन्नतिको उत्तम समय प्रारम्भ हुनेछ र सबैतिरबाट धनागम होला। ता० १३/६/२००४ बाट समय बढी व्यय गराउने रहला। व्यय घटाउन कठिन पर्नेछ। ता० २०/७/२००४ बाट सर्वोत्तम समय लाभदायक रहला। ता० २/९/२००४ बाट समय केही कष्टदायक रहने छ। ता० ४/१२/२००४ देखि ता० ३०/१२/२००४ सम्ममा भाग्यको सुख र मनको शान्ति बनिरहने छ।

कु० नं० ३७२

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नमा उत्तम तारीखहरू

सन् २००५ को वर्षमा- ता० १/१/२००५ बाट समय केही राम्रो केही नराम्रो र नाफा-नोक्सान मिसिएको चल्नेछ। ता० ६/४/२००५ बाट भाग्योदय आरम्भ होला र इच्छित उन्नति हुँदैं जानेछ। ता० १७/७/२००५ बाट धनको पक्ष बलियो भएर जाला तापनि केही कष्टले छाड्ने छैन। ता० २३/८/२००५ बाट भाग्यको उत्तम समय आरम्भ होला। ता० १७/१०/२००५ बाट केही मानसिक कष्ट र शारीरिक रोगले दुःख दिनन्। ता० १६/११/२००५ बाट बुद्धि द्वारा इच्छित सफलता प्राप्त होला। ता० १२/१२/२००५ बाट सफलता केही दुर्बल वा कमजोर रहने छ।

कु० नं० ३७३

५　３　६　४　२　७　१　८　१०　१२　९　११

सन् २००६ को वर्षमा- ता० १/१/२००६ बाट भाग्यको बल कमजोर र अशान्तिदायक रहने छ। ता० १५/१/२००६ बाट गृहस्थी र व्यापारमा इच्छित सफलता प्राप्त होला। ता० ७/२/२००६ बाट भाग्यमा केही न्यूनता आउन सक्तछ। ता० ४/३/२००६ बाट भाग्यमा आंशिक सुधार आउला। ता० २३/४/२००६ बाट भाग्यमा सफलता आउला। ता० २३/४/२००६ बाट आय कम र व्यय बढी रहने छ। ता० १७/७/२००६ बाट केही लाभमा सफलता प्राप्त होला। ता० ८/८/२००६ बाट उन्नतिमा अनेक बाधा आउलान्। ता० १४/११/२००६ बाट धन, मान, र यशको सफलता मिल्ला।

कु० नं० ३७४

५　३　६　४　२　७　१　८　१०　१२　९　११

# कर्क लग्नका उत्तम तारीखहरू

सन् २००७ को वर्षमा- ता० १/१/२००७ बाट घरेलू सुखहरूमा वृद्धि रहला। शत्रु स्थानमा प्रभाव बढ्ला। ता० २१/१/२००७ बाट आयमा केही न्यूनता आउला। ता० १५/२/२००७ बाट सुख र सफलता रहने छ। ता० २३/३/२००७ बाट राम्रो-नराम्रो दुवै स्थिति चलिरहने छ। ता० १४/४/२००७ देखि भाग्योदयको समय उत्तम रहने छ। ता० १५/६/२००७ बाट बर्ता धन-व्यय रहने छ। ता० १५/७/२००७ बाट समय सप्रन्दै जानेछ। ता० ७/११/२००७ बाट उन्नतिको समय आउने छ। ता० १५/१२/२००७ देखि ३०/१२/२००७ सम्म समय केही सामान्य रहे पनि कुनै कुराको कष्ट हुने छैन।

कु० नं० ३७५

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

विशेष सूचना– योभन्दा पहिले जुन-जुन ग्रह लाभदायक वा सुख-शान्तिदाता भनेर लेखिएका छन् एवं जन्म कुण्डली भित्र जुन श्रेष्ठ ग्रहहरूको फल बताइएको छ, ती सवैमा यो कुरा अवश्य ध्यान राख्नु पर्दछ कि जब-जब गुरू, मंगल, शुक्र वा अन्य कुनै ग्रह सूर्यबाट अस्त हुन्छन् तब-तब ती उत्तम ग्रहरू पनि भने जस्तो लाभ गर्न समर्थ हुन्नन्। अतः कुनै पनि फलादेश गर्दा यस कुराहरूको विचार गर्नु आवश्यक छ।

कु० नं० ३७६

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

# कर्क लग्न हुनेहरूको प्रतिकूल समय ज्ञान

कु० नं० ३७७

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

(सबै कालको लागि)

तल लेखिएका ग्रह, जब-जब यी राशिहरूमा आउने छन्, तब-तब ती वर्षहरूमा महीनाहरूमा र दिनहरूमा प्रतिकूल समय रहने छ भन्ने जान्नु होला।

---

**सूर्य**- मिथुन, तुला, धन र कुम्भ।
**चं०**- मिथुन, वृश्चिक, धन र कुम्भ।
**मं०**- मिथुन, कर्क, धन र कुम्भ।
**बु०**- सिंह, धन, कुम्भ, र मीन।
**गु०**- मिथुन, धन, मकर, र कुम्भ।
**शु०**- मिथुन, धन, कुम्भ र कन्या।
**श०**- मिथुन, सिंह, धन, कुम्भ र मेष।
**रा०**- सिंह, धन, कर्क, मकर र कुम्भ।
**के०**- कर्क, सिंह, मकर, कुम्भ र मिथुन।

---

***सूचना***- वर्ष दिनको फलादेश जान्नका लागि शनि, गुरु, राहु र केतु यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। महीनाको फलादेश जान्नका लागि सू०, बु०, शु०, मं०, यी चार ग्रहहरूबाट गणना गर्नुपर्दछ। प्रतिदिनको फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्न आरम्भ गर्नु पर्दछ। जब कहिले कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब त्यो ग्रह न्यून फलदातामा गनिन्छ।

# कर्क लग्न हुनेहरूको अनुकूल समय ज्ञान

(सदैव कालको निम्ति)

कु० नं० ३७८

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा पञ्चाङ्गमा देखापर्छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा- लाभप्रद, सुख-शान्तिदायक र आरोग्यदायक फल प्रदान गर्दछन्।

सूर्य- मेष, वृष, कर्क, सिंह, कन्या, वृश्चिक र मीन।
चं०- कर्क, सिंह, कन्या, तुला, मकर, मीन, मेष र वृष।
मं०- मेष, वृष, सिंह, कन्या, तुला, वृश्चिक, मकर र मीन।
बु०- कर्क, कन्या, तुला, वृश्चिक, मकर, मेष र वृष।
गु०- कर्क, सिंह, कन्या, तुला, वृश्चिक, मकर, मीन र मेष।
शु०- वृष, कर्क, सिंह, तुला, वृश्चिक, मकर, मीन र मेष।
श०- वृष, कर्क, कन्या, तुला, वृश्चिक, मकर, र मीन।
रा०- मिथुन, कन्या, मीन र वृषभ।
के०- कन्या, धन, वृषभ र मीन।

*सूचना-* वर्षको फलादेश जान्नका लागि शनि, गुरू, राहु, केतु यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। महीनाको फलादेश जान्नका लागि सू०, बु०, मं०, शु० यी चार ग्रहहरूबाट जान्नुपर्दछ। फेरि प्रतिदिनको फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ। अनि भिन्न-भिन्न विषयहरूको पूर्ण ज्ञान गर्नका लागि 'अखण्ड भाग्योदय दर्पण' मा हेरे जानिन्छ।

# कर्क लग्नान्तर-सूर्यफलम्

जुन व्यक्तिको कर्क राशिका सूर्य लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस धेरै प्रतापी, धनवान, तेजस्वी र सुरक्षा एवं प्रभावको शक्ति सम्पन्न होला। स्त्री पक्षबाट र व्यापारिक पक्षबाट बढी लाभमा पनि मनमनै नीरसता अनुभव गर्नेवाला, साथै केही अपठेरो पनि अनुभव गर्ने खालको र शरीरद्वारा धनको शक्ति पाउनेवाला, धेरै कुटुम्ब भएको र केही नाम र चर्को मिजास भएको एवं शरीरमा केही बन्धन झैं पाउनेवाला, मान र इज्जत प्राप्त गर्नेवाला तथा निकै ठूला-ठूला योजनाहरू बनाउनेवाला र ती योजनाहरू सफल तुल्याउन प्रयत्नशील रहने खालको होला।

कु० नं० ३७९

५ ३
६ ४सू. २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको सिंह राशिका सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस ठूलो धनवान र धेरै कुटुम्बवाला तथा धनको कारणले नै जीवनको दिनचर्यामा अलि-अलि अशान्ति अनुभव गर्नेवाला, धनको शक्तिले केही अपठेरो परे पनि केही गूढ तत्त्वको केही फाइदा प्राप्त गर्नेवाला, आयको दिनचर्यामा केही नीरसताको आभास र धनाढ्य व्यक्तिको झैं रहन-सहन भएको होला, धनको तर्फबाट ठूलो प्रभावी शक्ति राख्नेवाला, धनको संग्रह शक्तिलाई नै बढी महत्व दिने खालको र आफ्नू धनको प्रभावी तागतले धनको वृद्धि गर्नेवाला इज्जतदार होला।

कु० नं० ३८०

५सू. ३
६ ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको कन्याराशिका सूर्य तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो र राम्रो पुरुषार्थको शक्ति प्राप्त गर्नेवाला, आफ्नू पुरुषार्थले नै

कु० नं० ३८१

५ ३
६सू. ४ २
७ १
८ १० १२
९ ११

धन कमाउन जान्नेवाला, निकै यश-कीर्ति पाउनेवाला, धनले नै धर्मको पनि उन्नति गर्न जान्नेवाला, निकै ठूलो भाग्यमानी कहिने खालको होला। दाजू-भाइ दिदी-बहिनी धेरै भएको र कठोर परिश्रम गर्नेवाला, आफ्नू बाहुबलले कुनै चमत्कारिक काम गर्नेवाला तथा ठूलो प्रभावको महान् शक्ति प्राप्त गर्नेवाला, प्रभावको शक्तिले नै धन कमाउनेवाला, अनि आफ्नू ठूलो साहस र शक्तिले ठूला-ठूला सफलता र गौरव पाउने खालको होला।

जुन व्यक्तिको तुला राशिको सूर्य लग्नबाट चतुर्थ स्थानमा छ भने त्यो मानिस धनको कारण परेर कष्ट अनुभव गर्नेवाला, तथा सुख-शान्तिको

कु० नं० ३८२

५ ३
६ ४ २
७सू. १
८ १० १२
९ ११

स्थानबाट व्यर्थ अशान्ति वा बन्धन पाउने खालको होला। फेरि मातृ-स्थानमा केही न्यूनता र पिता-स्थानमा आंशिक वृद्धि पाउने वाला, व्यापार आदिमा मान-प्रतिष्ठाको वृद्धि पाउनेवाला, घरमा नगद सम्पत्तिमा कमी पाउनेवाला तथा भूमि-भवन आदिसित सम्बन्धित कुनै कष्टको अनुभव गर्नेवाला, राज-समाजमा मान-सम्मान पाउनेवाला, कुटुम्ब स्थानबाट केही न्यूनता र अशान्ति प्राप्त गर्नेवाला, त्यही अशान्तिबाट नै धन कमाउनेवाला, अनि जीवनमा आराम पाउने खालको होला।

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य पाँचौं स्थानमा छ भने त्यो मानिस निकै बर्ता बुद्धिमान र धेरै धन कमाउन जान्नेवाला, अकस्मात बढी लाभ पाउनेवाला, ठूलो परिवारको स्वामी हुने लायक र निकै दूरदर्शिताले काम गर्नेवाला, बढी प्रभावशाली र गहकिलो वाणी बोल्ने तथा तीक्ष्ण बुद्धिले विचार गर्ने खालको होला। सन्तान पक्षबाट केही बन्धन पाउनेवाला र आफ्नू बुद्धिको सामुन्ने अन्यको बुद्धि-विचारलाई न्यून मान्नेवाला, विद्या स्थानमा महानता र प्रभावको शक्ति पाउनेवाला, दिमागले निकै गन्हुँगो काम लिन जान्ने र अलि खरो मिजासको साहसी होला।

कु० नं० ३८३

५ ३
६ ४ २
७ १
८सू. १० १२
९ ११

जुन व्यक्तिको धनराशिका सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस महान् प्रभावशाली र परिश्रमी तथा कर्मको शक्तिले धन कमाउने, अनेक कष्ट र शत्रुहरूको पनि कुनै वास्ता नराख्ने तथा तिनै कष्ट र शत्रु पक्षबाट लाभ कमाउन जान्ने खालको होला। बढी धन व्यय गर्नेवाला, जुन वेला पनि धनको न्यूनता अनुभव गर्नेवाला, धन-प्राप्तिमा केही परतन्त्रता पाउनेवाला, मावली पक्षबाट केही प्रभाव पाउनेवाला, रोग-दोष, भय आदिमा काबू पाउनेवाला, कुटुम्ब-सुखमा न्यूनता भेट्ने र धनको तागतले प्रभावको ठूलो वृद्धि र इज्जद कमाउने खालको होला।

कु० नं० ३८४

५ ३
६ ४ २
७ १
८ १० १२
९सू. ११

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धनको कष्ट भए पनि दैनिक व्यापारमा लागि रहनेवाला, व्यापारको काममा केही झ्याउलाहरू र कष्ट सहेर धन प्राप्त गर्ने खालको होला। स्त्री पक्षबाट केही लाभ र आंशिक कष्ट अनुभव गर्नेवाला, अनि धनवान्हरूमा गणना गरिनेवाला, पत्नी पक्षमा द्रव्यकै कारणले केही नीरसताको योग परेको तथा व्यापारमा इज्जत कमाएको र इन्द्रिय सम्बन्धी भोगादिक सुखहरूमा केही बन्धन वा नीरसताको योग परेको तथा लौकिक कार्यहरूमा निकै प्रभावले आफ्नू काम सपार्न जान्ने खालको होला।

कु० नं० ३८५

५ ३
६ ४ २
७ १
८ १०सू. १२
९ ११

जुन व्यक्तिको कुम्भ राशिको सूये लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस निकै कष्टसाध्य युक्तिहरू द्वारा धन कमाउन सक्नेवाला, धनको न्यूनता अनुभव गर्नेवाला र कोही मृतक अथवा पैतृक धन वा अपुताली पाउने तथा कहिले काहीं अकस्मात् धन-हानि पनि खप्ने खालको होला। अनि धन आफूसंग जम्मा गर्नमा आफूलाई निकै असमर्थ ठान्नेवाला, धनको विषयमा केही न्याय विरूद्ध काम पनि गर्न सक्नेवाला तथा धनको वृद्धि गर्नका लागि केही गुप्त प्रभावको शक्तिले पनि काम जान्नेवाला र जीवनको दिनचर्यामा केही नीरसता युक्त धनाढ्यको ढाँचा गर्नेवाला, फेरि धन प्राप्तिको लागि केही विदेशको सम्बन्ध पनि पाउने खालको होला।

कु० नं० ३८६

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११सू.

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यमानी र ठूलो धर्मात्मा तथा बर्ता धनवान् एवं भाग्यको

कु० नं० ३८७

५ ३
६ ४ २
७ १
८ १० १२ सू.
९ ११

शक्तिले धन पाउनेवाला, अनि निकै ठूलो पुरुषार्थ गर्नेवाला, दाजू-भाइ दिदी-बहिनी भएको र आफ्नू दूरदर्शिताको शक्तिले लाभ कमाउन जान्नेवाला, गहीरो प्रभावको शक्तिले पनि बढी धन कमाउनेवाला, अनि धेरैं मान-सम्मान, इज्जत कमाउनेवाला, धर्मले धनको वृद्धि पाउनेवाला, गहीरो तत्त्वको ज्ञान भएको र त्यसैले धर्मद्वारा धनको वृद्धि गर्नेवाला, ईश्वरमा विश्वास राख्ने तथा अन्यायले उपार्जिक धनलाई तुच्छ ठान्ने र निकै साहस हिम्मत भएको होला।

जुन व्यक्तिको मेष राशिका सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रभाव पाउने खालको र भूमि-भवन आदिको बढी वास्ता

कु० नं० ३८८

५ ३
६ ४ २
७ १सू.
८ १० १२
९ ११

नगर्ने तथा धनको ठूलो स्वामी हुने खालको होला। पिता स्थानबाट बढी उन्नति गर्नेवाला र पिताकै स्थानबाट ठूलो सम्मान र लाभ प्राप्त गर्ने तथा व्यापारमा अथवा कुनै इज्जतको कार्यबाट खूब धन कमाउनेवाला, तथा मातृस्थानबाट केही कष्ट अनुभव गर्ने एवं सुख-शान्तिमा केही बाधा पाउनेवाला, निकै ठूलो प्रभावशाली कर्म गर्नेवाला, राज-समाजबाट सम्मान र धनको खूब शक्ति भेट्नेवाला तथा ठूलो कुटुम्ब भएको र प्रतापी एवं प्रभावशाली होला।

जुन व्यक्तिको वृषराशिका सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस लाभ स्थानको योगले धनको शक्ति प्राप्त गर्नेवाला, फेरि रूपियाँले नै रूपियाँ कमाउन जान्ने खालको होला। धन प्राप्तिको स्थानमा वृद्धिले केही उत्तम काम बनाउन जान्ने र सन्तानबाट सहयोग पाउने तथा केही नीरसतायुक्त कुटुम्बको लाभ प्राप्त गर्नेवाला, आमदानीको स्थानबाट पनि आंशिक नीरसताले युक्त धन लाभ र रत्न आभूषण आदि पाउने तथा तीक्ष्ण बुद्धि भएको, विद्या र सन्तानमा केही गहीरो भाव पाउनेवाला, आफ्नू स्वार्थमा अमूल्य-अमूल्य कुरा भन्न जान्ने प्रभावी वक्ता होला।

कु० नं० ३८९

५ ३
६ ४ २सू.
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको मिथुन राशिको सूर्य बाह्रौं स्थानमा छ भने त्यो मानिस बर्ता धन-शक्ति व्यय गर्नेवाला, तथा धन संग्रह गर्न नसक्ने खालको होला। बाहिरी अन्य स्थानबाट धन प्राप्त गर्नेवाला र खर्चको तागतले काम बनाउने, शत्रु स्थानमा प्रभाव राख्नेवाला, अनेक रोग वा कष्ट झ्याउलाहरूबाट रक्षित रहनेवाला तथा धन र कुटुम्बको न्यूनताका कारणहरूले दुःखको योग अनुभव गर्नेवाला एवं बाहिरीया मानिसहरूसित बर्ता मेल-मिलाप वा प्रभावको शक्ति पाइरहने र स्थानीय प्रभावको न्यूनता पाउनेवाला तथा व्यय स्थानबाट शक्ति प्राप्त गर्ने खालको होला।

कु० नं० ३९०

५ ३सू.
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नान्तर चन्द्रफलम्

जुन व्यक्तिको कर्क राशिको चन्द्रमा लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस गौरवर्ण राम्रो सलक्क परेको शरीर भएको र सदैव प्रसन्न चित्त,

कु० नं० ३९१

५　३
६　४चं.　२
७　१
८　१०　१२
९　११

दृढ आत्मा तथा मनमा काबू राख्न सक्ने र स्वाभिमानी, तत्त्वज्ञानी तथा गृहस्थीको परिस्थितिमा पूरा ध्यान दिने र आफ्नू दैनिक कार्य वा व्यापारमा निकै चनाखो रहने, बर्ता भोगेच्छा भएको र इच्छित भोग पाउनेवाला, आफ्नू मनपर्दी गर्ने तथा स्वच्छन्दता-युक्त रहने खालको होला। स्त्री स्थानमा केही नीरसता पाउनेवाला, तथा ख्याति प्राप्त एवं विख्यात र स्थिर चित्तको होला।

जुन व्यक्तिको सिंह राशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस खूब धन कमाउनेवाला, तथा तन-मनले धनले कुटुम्बको वृद्धि

कु० नं० ३९२

५चं.　३
६　४　२
७　१
८　१०　१२
९　११

चाहनेवाला र बृद्धिको लागि काम पनि गर्नेवाला, जीवनमा उच्चकोटिको दिनचर्या राख्ने खालको र आयुको वृद्धिमा पूर्ण ध्यान दिनेवाला तथा पुरातत्त्वको खोजीमा लागिरहने र केही अपठेरो अनुभव गर्नेवाला तथा लौकिक प्रणालीको उन्नति गर्न अघिसर्ने खालको र राम्रो शरीर भएको मनमनै म ठूलो भन्ने अभिमान भएको, समाजमा सम्मान प्राप्त गर्नेवाला र लौकिक काममा नै जीवन लगाइराख्ने ठूलो इज्जतदार र स्वार्थी खालको होला।

जुन व्यक्तिको कन्या राशिको चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो पुरुषार्थ गर्नसक्ने, तन-मनले उन्नतिका लागि प्रयत्न गरिरहने र सदैव प्रसन्न चित्त रहनेवाला तथा धर्मलाई नमान्ने एवं भाग्यको भरमा निर्भर रहने खालको होला। दाजू-भाई दिदी-बहिनीलाई बर्ता स्नेह-माया गर्नेवाला, सुन्दर शरीर पाउनेवाला तथा उत्साहको महान् शक्ति प्राप्त गर्ने खालको, ठूलो साहसको शक्तिद्वारा विजयी हुनसक्ने र बढी यश प्राप्त गर्नेवाला तथा शान्तिपूर्वक दत्तचित्त भएर आफ्नू काम गर्नेवाला र न्याय एवं ईश्वरमा आस्था राख्ने तथा आत्मबल बढी भएको होला।

कु० नं० ३९३

५ ३
६चं. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक आफ्नू स्थानमा निवास गर्ने र सुन्दर शरीर भएको तथा भूमि-भवनको सुख प्राप्त गर्नेवाला एवं मान-प्रतिष्ठा बर्ता पाउने खालको होला। ठूलो व्यापार गर्ने र आफू हाँस्ने र अर्कालाई पनि हँसाउन जान्ने तथा माता-पितालाई उचित सम्मान दिने एवं विदेश जाने इच्छा नभएको, राम्रा-राम्रा काम गर्ने भएको, अनि राज-समाजबाट मान-प्रतिष्ठा प्राप्त गर्ने, शान्तिपूर्वक प्रसन्न मनले दिन बिताउने र मनोयोगको शक्तिले लौकिक वा घरेलू सम्बन्धमा उत्तम सफलता पाउने होला।

कु० नं० ३९४

५ ३
६ ४ २
७चं. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या बुद्धिमा कमी, सन्तान पक्षबाट केही कष्ट अनुभव गर्ने र हृदयमा केही अशान्ति अनुभव गर्ने खालको होला। धन प्राप्तिको निम्ति बढी चेष्टा र प्रयत्न गर्नेवाला, लाभको विषयमा आफूभित्र अनेक उन्नति गर्नेछु भन्ने भावना राख्नेवाला र केही संकीर्ण विचारवाला तथा कुराकानी वा भाषणद्वारा आफ्नू मनोभाव पूरा बुझाउन नसक्नेवाला, मनबुद्धिमा दुर्बलतायुक्त ज्ञान राख्नेवाला, असत्यले लाभ कमाउनेवाला, शरीर सौन्दर्यमा कमी भएको र पुड्को खालको होला।

कु० नं० ३९५

५ ३
६ ४ २
७ १
८चं. १० १२
९ ११

जुन व्यक्तिको धनराशिका चन्द्रमा लग्नबाट षष्ठस्थानमा छ भने त्यो मानिस शरीरमा केही दुर्बलता र आंशिक रोगको योग परेको, निकै अपठेरा प्रयत्नहरूको प्रभाव पार्न खोज्नेवाला, केही परतन्त्रता युक्त स्थितिमा निवास गर्ने खालको होला। तन-मनले केही अशान्ति पाउनेवाला र कहिले काहीं मावलीमा बस्न मनपराउनेवाला, बढी धन व्यय गर्न खोज्ने तथा शत्रुबाट र अन्यान्य कष्ट झ्याउलाहरूको मनमनै भय मान्नेवाला, केही घेरामा वा झंझटहरूमा रहनाले आफूलाई निःसहाय झैं अनुभव गर्नेवाला, सामान्य कद-काठीको र पातलो-दुब्लो शरीर भएको, केही बांगो चालले हिड्ने भए पनि ठूलो हिम्मत भएको होला।

कु० नं० ३९६

५ ३
६ ४ २
७ १
८ १० १२
९चं. ११

जुन व्यक्तिको मकरराशिका चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस केही प्रशंसा प्राप्त गर्ने र दैनिक कार्यहरू निकै उत्साहले गर्नसक्ने तथा काम वासनाहरूमा लिप्त रहने खालको होला। भोग विलासको इच्छा गर्ने र पाउने पनि होला। राम्री पत्नी भएको र कोमल अगंवाला, शरीरको सौन्दर्य र स्वाभिमानको पूरा विचार राख्ने भएको तथा आफ्नू व्यक्तित्वलाई केही परतन्त्रतामा राखेर पनि कुनै-कुनै बेला केही काम सपार्नेवाला र स्त्रीलाई बढी महत्त्व दिनेवाला वा लौकिक प्रणालीमा उत्तम सफलता पाउनेवाला, आत्मबलले दैनिक व्यापारको विशेष आनन्द प्राप्त गर्ने खालको होला।

कु० नं० ३९७

५ ३
६ ४ २
७ १
८ १०चं. १२
९ ११

जुन व्यक्तिको कुम्भ राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस ठूला-ठूला विपत्ति सहन सक्नेवाला, बराबर परदेश गइरहनेवाला, शरीरमा सौन्दर्यको केही कमी अनुभव गर्ने र अनेक कष्टहरूद्वारा वा गुप्त रीतिहरूले आफ्नू उन्नति गर्नेवाला, केही पुरातत्वको खोजीमा लागिरहने र धन प्राप्तिको बराबर ध्यान राख्नेवाला र कुटुम्बको वृद्धि चाहने खालको होला। जीवनको उपस्थित समयबाट लाभ प्राप्त गर्नेवाला र केही नजाती बाटोमा हिड्न मनपराउने र जीवनको दिनचर्यामा सहायक हुने जस्तो केही गम्भीर वस्तुको लाभ पाउने र खिन्न मनको होला।

कु० नं० ३९८

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११चं.

जुन व्यक्तिको मीन राशिका चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी र राम्रो धर्मात्मा तथा प्रशस्त ललाट भएको तथा ईश्वरमा विश्वास राख्ने एवं सुन्दर शरीर भएको, प्रसन्न चित्त रहनेवाला, निकै पुरुषार्थ गर्नसक्ने, दाजू-भाई दिदी-बहिनीलाई विशेष मनपराउने तथा तत्त्वज्ञान प्राप्त गर्नेवाला र सुयश कमाउने खालको होला। पुण्य संचय गर्न जान्ने र दैवी बल प्राप्त गर्नेवाला र भाग्यलाई विशेष महत्व दिनेवाला एवं लौकिक प्रणालीमा सफलता पाउनेवाला एवं आत्मबलद्वारा दैनिक व्यापारको बढी आनन्द पाउने खालको होला।

कु० नं० ३९९

जुन व्यक्तिको मेष राशिका चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस ठूलो वैभवशाली र माता-पिताको स्थानबाट लाभ पाउनेवाला, ठूलो रोजगार व्यापार गर्नेवाला, निकै ठूलो धनाढ्य व्यक्ति झैं रहन-सहन भएको, सबै सुखका साधन प्राप्त गर्ने भएको, भवन-भूमिको इच्छा भएको, सधै म ठूलो हुँ भन्ने इच्छा राख्ने खालको होला। राम्रो कर्म गर्नेवाला, राम्रो शरीर पाएको एवं प्रशंसा पाउने खालको होला। प्रभाव शक्ति पाउने र राज-समाजमा ठूलो सम्मान पाउनेवाला, मनोबलको तागतले ठूलो उन्नति गर्ने र प्रभुत्व भएको होला।

कु० नं० ४००

जुन व्यक्तिको वृष राशिका चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस स्थूल र प्रभावशाली राम्रो शरीर भएको, तन-मनले निरन्तर धन कमाइरहने तथा ठूला-ठूला लाभ पाउने, बुद्धिमा केही तीखो कुरा राख्नेवाला होला। केही लुकाउने युक्तिले कुराकानी गर्ने र 'म ठूलो' भन्ने अभिमानले रहनेवाला, निकै ठाँट पार्ने भएको र धन कमाउनमा निकै तेजिलो एवं केही न्यूनता वा केही बेवास्ताको योग परेको र मनभित्र धेरै बडी उमंग उत्साह भएको र विद्याको पनि केही न्यूनता एवं वास्ता नराख्ने खालको साहसी होला।

कु० नं० ४०१

५ ३
६ ४ २चं.
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको मिथुन राशिका चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस शरीरमा केही कमी वा कमजोरी पाउनेवाला, अन्य बाहिरी स्थानमा बस्ने र बाहिरी स्थानबाट सम्मान पाउनेवाला, मानसिक वा शारीरिक कष्ट अनुभव गर्नेवाला, शत्रु स्थानमा केही प्रभाव कायम राख्ने चेष्टा भएको र त्यही कुरा मनमा राख्नेवाला, बढी धन व्यय गर्नेवाला, मनोबलको तागतले अन्य स्थानसित सम्बन्धित काम गर्नेवाला, मनमा उदासीनता भएको र केही निकै परको कुरा विचार गर्नेवाला, हृदयमा केही दुर्बलताको योग परेको र केही भ्रमित चित्त भएको र अशान्त हृदय होला।

कु० नं० ४०२

५ ३चं.
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू मान-प्रतिष्ठामा केही न्यूनता अनुभव गर्ने र माता-पिताको स्थानमा केही कमी सहित शक्ति प्राप्त गर्ने दैनिक व्यापार र स्त्री स्थानको वृद्धिमा विशेष ध्यान दिने भएको एवं देह स्थानमा केही कमी वा दुर्बलता मात्रै खालको, वृद्धि सुख र सन्तान पक्षमा केही चिन्तित रहने भएको, विद्यामा कमी पाउनेवाला, जीवनमा केही नीरसता मात्रै खालको तथा ठूला-ठूला महान् कार्य गर्ने योजना तयार पार्नेवाला, अनि केवल आशावादी उन्नतिको हर्षोल्लासमा मन रमाउनेवाला, अनि केही काम पनि गरौं कि नगरौं भन्ने गुप्त शक्तिमै समय बिताउनेवाला र बढी भोगेच्छा राख्नेवाला होला।

कु० नं० ४०३

५ ३
६ ४मं. २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको सिंह राशिको मंगल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस पिता-स्थानको शक्तिबाट भर पाएर बुद्धिद्वारा आफ्नू जीवनमा ठूलो र अमूल्य काम गर्नेवाला तथा प्रशस्त धन कमाउनेवाला एवं निकै उन्नति गर्ने खालको होला। भाग्यमानी सन्तान पाउनेवाला तथा धर्मस्थान र भाग्यस्थानको विशेष ध्यान राख्नेवाला, धेरै विद्या संग्रह र धन आर्जन गर्नेवाला, राज-समाज र कुटुम्ब स्थानमा इज्जत पाउनेवाला तथा जीवनको दिनचर्यामा केही अशान्ति अनुभव गर्नेवाला, आफ्नू बुद्धिको चातुर्यले बढी लाभ कमाउने वाला र तत्काल उत्तर दिने अर्थात हाजिर जवाब, गुणग्राही, मानयुक्त होला।

कु० नं० ४०४

५मं. ३
६ ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको कन्या राशिका मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो प्रतापी र राज समाजमा धेरै ठूलो इज्जत पाउनेवाला,

कु० नं० ४०५

५ ३
६मं. ४ २
७ १
८ १० १२
९ ११

बुद्धिबल र कर्मबलले समाजमा अधिकार राख्नेवाला, पिता-स्थानको उन्नति र नाम प्राप्त गराउनेवाला, अनि शत्रु स्थानमा बढी प्रभाव राख्नेवाला, र आफ्नू कर्मद्वारा बुद्धियोगले उन्नतिको निरन्तर चेष्टा गरिरहनेवाला, तथा आफ्नू उन्नति गर्नका लागि मनभित्र सामर्थ्य राख्नेवाला, हिम्मत हारेर कहिल्यै निराश नहुने खालको तथा आफ्नो सफलताहरूको बाटोमा विरुद्धावस्थाको स्थिति आउनासाथ दाजु-भाइ, सन्तान र पिता, धर्म र अधर्म कसैको पनि वास्ता नराख्नेवाला, तथा समाजलाई आमा, सन्तान ठान्ने, कार्य-कुशल र विजयी होला।

जुन व्यक्तिको तुला राशिका मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस बुद्धि-व्यापार एवं ठूला-ठूला कारबारले प्रसस्त धन कमाउने

कु० नं० ४०६

५ ३
६ ४ २
७मं. १
८ १० १२
९ ११

वाला र लौकिक एवं गृहस्थीको काम गर्नमा बर्ता प्रवीणता-दक्षता राख्नेवाला, आफ्नू दैनिक कार्य प्रवीणताको योगले नै धेरै लाभ प्राप्त गर्नेवाला र आफ्नू स्थानमा एवं स्त्री पक्षमा ठूलो प्रभाव र सम्मान प्राप्त गर्नेवाला तथा पिता, पुत्र एवं आमासित सहयोग र सुख पाउनेवाला तथा बर्ता भोगेच्छा भएको एवं प्रभावशाली कार्य गर्नेवाला र राजसमाजमा सम्मान प्राप्त गर्नेवाला तथा विशेष भोग विलास प्राप्त गर्ने खालको प्रतापी व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिका मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस राजनीतिक विद्याको सम्बन्धमा विशेष ज्ञान प्राप्त गर्ने खालको तथा पिता र पुत्रको विशेष शक्तिको बलद्वारा सदैव मगनमस्त रहनेवाला, लाभको भन्दा खर्चको बढी योजना राख्नेवाला र जीवनको दिनचर्यामा केही नीरसता अनुभव गर्ने भएको र केही बाधाहरू सहित गूढ तत्त्वको खोजी गर्नेवाला र केही अन्यान्य स्थानहरूबाट विशेष सम्बन्ध राख्नेवाला तथा हुकुम चलाएर कुरा गर्ने खालको होला। आफ्नो र पिताको शक्तिले उन्नति र सम्मान प्राप्त गर्नेवाला, निकै प्रभावशाली एवं जीव विचार राख्ने इज्जतदार व्यापारी होला।

कु० नं० ४०७

५ ३ ६ ४ २ ७ १ ८मं. १० १२ ९ ११

जुन व्यक्तिको धन राशिका मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस ठूलो पराक्रमी साहसी होला। बुद्धि र राजनीतिक युक्तिहरू द्वारा आफ्नू प्रताप र गौरवलाई कायम राख्न सक्ने तथा शत्रु र रोगमा विजय पाउनेवाला, अनि केही 'म ठूलो' भन्ने अनुचित बल प्रयोग गर्नाले आफ्नू शरीरमा विपत्तिको अनुभव गर्नेवाला तर त्यस विपत्तिको किंचित वास्ता नगर्नेवाला, शरीरमा केही दुर्बलता अनुभव गर्नेवाला, भाग्य र उन्नतिको निकै ध्यान राख्नेवाला, तथा बुद्धिलाई बांगो-टिगो चालले र तेर्सो काइदाले गर्जेर कुरा गर्ने, आफ्नू स्वार्थ बनाउन जान्ने र बढी धन खर्च गर्नेवाला, पिता र सन्तान पक्षबाट अलि-अलि अशान्ति पाउने, विद्या र बुद्धिमा कमी भए पनि भेद-बुद्धिमा अत्यन्त बाठो होला।

कु० नं० ४०८

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९मं. ११

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो र शानदार व्यापार गर्ने खालको होला। बुद्धि योग र पत्नीको भाग्य द्वारा उन्नति प्राप्त गर्नेवाला, बर्ता लागिपरेर कुनै दैनिक कार्यक्रमलाई निकै तत्परता साथ पूरा गरेर उन्नति र यश प्राप्त गर्नेवाला, निकै उत्साह र प्रभाव भएको पत्नी पाउनेवाला, राज-समाजमा र ठूला-ठूला स्थानहरूमा इज्जत प्राप्त गर्ने खालको, आफ्नू शरीरमा केही दुर्बलता अनुभव गर्ने खालको र बढी भोग-विलासको शक्ति पाउनेवाला, धन-वृद्धि गर्नमा बर्ता चेष्टा गर्नेवाला, पिता-पुत्रको सहारा पाउने र निकै प्रभावशाली होला।

कु० नं० ४०९

५ ३ ६ ४ २ ७ १ ८ १०मं. १२ ९ ११

जुन व्यक्तिको कुम्भ राशिका मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पुत्रको हानिको योग परेको र महान् गुप्त एवं कठिन कर्महरू गर्ने खालको र विद्या थोरै पाउनेवाला र परदेश आदि अनेक कष्टहरू को योगहरूले सदैव चिन्तित भएरै कर्म गर्दै जानेवाला, तथा असत्य र लुकाउने शक्तिद्वारा काम बनाउन जान्नेवाला, अलि कटु बोल्नेवाला, अलि-अलि गलत बाटोमा हिंड्ने खालको र धन, आमदानी तथा बाहुबलको निकै शक्ति राख्नेवाला, बुद्धिको अभिमान भएको, सम्मान प्राप्तिमा अनेक कष्टको योग परेको अनि राज–समाजको सम्बन्धमा असन्तोष पाउनेवाला, उन्नतिको निम्ति कठोर श्रम गर्ने र अल्छी स्वभावको होला।

कु० नं० ४१०

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११मं.

जुन व्यक्तिको मीन राशिका मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यशाली तथा पिता-पुत्रको सुख प्राप्त गर्नेवाला एवं बुद्धि र कर्मको शक्तिद्वारा सम्मान पाउनेवाला, पूर्व संचित कर्महरूको फल प्राप्त गर्नेवाला, धर्म-कर्म बुझ्नेवाला र हिसाब एवं गणितको राम्रो जानकारी राख्नेवाला, शास्त्र र नीतिका कुरा निकै चातुर्यले वर्णन गर्नेवाला तथा बर्ता धन व्यय गर्नेवाला, भूमि-भवनको सुख प्राप्त गर्ने साधनबाट सम्मान पाउनेवाला, उत्तम विद्या ग्रहण गर्नेवाला, तथा चाक्लो ललाट भएको, व्यापार आदि उच्च कर्मबाट लाभ प्राप्त गर्नेवाला, भाग्यस्थानबाट उन्नति पाउनेवाला कीर्तिवान् र दूरदर्शी होला।

कु० नं० ४११

५ ३ ६ ४ २ ७ १ ८ १० १२ मं. ९ ११

जुन व्यक्तिको मेष राशिका मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो बुद्धिमान तथा राज्य गर्न सक्ने खालको होला तथा समाजमा अधिकार प्राप्त गर्नेवाला, निकै बुद्धिमान तथा फाइदाको कर्तव्य कर्मको सम्बन्धमा धारा-प्रवाह बोल्न जान्नेवाला तथा निकै ठूलो मान-सम्मान पाउनेवाला एवं ठूलो कर्तव्यपरायण रहनेवाला तथा पिता र पुत्रको महानता पाउनेवाला एवं देहको स्थानमा केही दुर्बलता वा केही कमी राख्नेवाला, उत्तम वेषभूषा धारण गर्नेवाला, महान् प्रभावशाली बन्द-व्यापार गर्न जान्नेवाला, आफ्ना नियमहरूको सुचारूरूपले पालन गर्नेवाला, शरीरको पनि ठीक वास्ता नगर्नेवाला एव दिमागको तातो हुनाले हुकुम चलाएर काम लिनेवाला, प्रतापी र प्रभावशाली होला।

कु० नं० ४१२

५ ३ ६ ४ २ ७ १मं. ८ १० १२ ९ ११

जुन व्यक्तिको वृष राशिका मंगल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू बुद्धि र व्यापारको तागतले खूब धन कमाउने खालको तथा पिता र पुत्रको स्थानबाट लाभ पाउनेवाला एवं धन संग्रह गर्ने र धन प्राप्त गर्न महान् प्रयत्न गर्नेवाला तथा शत्रुस्थानबाट पनि प्रभाव पाउनेवाला, अनि व्यापार आदिको अनेक शक्तिहरू द्वारा धन लाभ गर्नेवाला र खूब मान-सम्मान पाउने खालको होला। अनेक बाधामा विजय पाउने र विद्या तथा सन्तानको तागतले उन्नति गर्ने राज-समाजबाट निकै धन पाउनेवाला, निकै प्रभावशाली र स्वार्थयुक्त होला।

कु० नं० ४१३

५ ३ ६ ४ २मं. ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको मिथुन राशिको मंगल बाह्रौं स्थानमा छ भने त्यो मानिस मान-सम्मानमा हानि पाउनेवाला र पिता एवं पुत्रको केही कष्ट अनुभव गर्नेवाला, विद्या र बुद्धिमा केही दुर्बलता पाउनेवाला तथा अन्य बाहिरी स्थानहरूबाट सम्बन्ध राखेर काम गर्नेवाला, बढी धन-व्यय गर्नेवाला तथा स्त्री आदि भोगहरूलाई विशेष मनपराउनेवाला, दैनिक व्यापारमा बढी आमदानी गर्नेवाला, कुनै पनि काम शुरू गर्ने इच्छा नभएको तथा केही उल्टो-सोझो कुरा गरेर आफ्नू काम बनाउनेवाला, तथा ठूलो कारवारमा हानि पाउनेवाला र बढी परिश्रम गरेर उन्नति गर्न जान्नेवाला, साहसी र पुरुषार्थवादी होला।

कु० नं० ४१४

५ ३मं. ६ ४ २ ७ १ ८ १० १२ ९ ११

# कर्क लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको कर्क राशिका बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस स्वयं आफ्नू शरीरले पुरुषार्थोन्नति गर्नेवाला, तथा शानदार धन व्यय गर्नेवाला र बाठो व्यापारी, हिम्मतवाला भएर पनि आफूभित्र दुर्बलता अनुभव गर्ने खालको तथा केही अन्य स्थानको सम्बन्धबाट बल प्राप्त गर्नेवाला र गृहस्थ एवं व्यापारमा ठूलो शक्ति लगाउन जान्ने भएको होला। दाजु-भाइ र दिदी-बहिनीको पक्षमा केही कमीयुक्त सुख-लाभ पाउनेवाला, मानयुक्त कोमल स्वभाव भएको दुर्बलता एवं सबलता साथसाथै राख्न सक्नेवाला। अन्य बाहिरी स्थानहरूको सम्बन्धमा महान् विवेक शक्तिले काम लिन जान्नेवाला एवं बाहिरी स्थानहरूमा आउने-जाने शीलवान् होला।

कु० नं० ४१५

जुन व्यक्तिको सिंह राशिका बुध लग्नको दोस्रो स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउनेवाला तथा धनको कोष स्थानमा घटी-बढीको कारणहरूले पूर्ण शक्ति नपाउनेवाला, बाहिरी सम्बन्ध योगद्वारा पुरुषार्थी होला। दाजु-भाइ दिदी-बहिनीको अपूर्ण सुख पाउनेवाला तथा जीवनको दिनचर्यामा केही धाक जमाउनेवाला एवं व्ययलाई रोक्ने चेष्टा गर्नेवाला तथा आफ्नै बाहुबलले धनको वृद्धि र धन-हानिको योग उत्पन्न गर्नेवाला, इज्जत कमाउनेवाला, धन कुटुम्बको वृद्धिका लागि नै आफ्नू विवेक शक्तिको प्रयोग गर्नेवाला, अनि गूढ युक्तिले काम गर्न जान्ने होला।

कु० नं० ४१६

जुन व्यक्तिको कन्या राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस धेरै ठूलो पुरुषार्थ गर्नेवाला, तथा पुरुषार्थको सामुन्ने भाग्यको बललाई दुर्बल मान्नेवाला, र बाहिरी सम्बन्धहरूबाट बढी शक्ति पाउनेवाला तथा दाजु-भाइ, दिदी-बहिनीको योग पाउनेवाला, तर भाइ-बहिनीको सम्बन्धमा र बाहुबलको प्रकट शक्तिमा केही भित्री दुर्बलताको योग पाउनेवाला, धर्ममा थोरै विश्वास गर्नेवाला, राम्रो कद-काठीको बढी खर्च गर्ने शक्ति भएको होला। विवेक र महान् साहस, हिम्मतको बलले ठूलो उत्साहको योग परेको होला। सौम्य शक्तिको बलमा प्रभाव र साहस प्राप्त गर्नेवाला होला।

कु० नं० ४१७

५ ३
६बु. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक आफ्नू काम गर्ने र खर्च चलाउने तथा सुखको प्राप्तिको स्थानमा आनन्दका साथसाथै केही सुखको न्यूनता अनुभव गर्नेवाला तथा माता-पिताको स्थानमा न्यूनता पाउनेवाला, भूमि-भवनको लागि आंशिक शक्ति पाउनेवाला, आफ्नू स्थानबाट नै अन्य स्थानहरूको कार्य साहस र शान्तिपूर्वक गर्ने, दाजु-भाइ, दिदी-बहिनीको थोरै सुख भेट्टाउनेवाला, अन्य स्थानको सम्बन्धमा विवेक र परिश्रमको शक्ति र त्यसको फलले सुखका साधन पाउनेवाला र राज-समाजको सम्बन्धमा केही सफलता र असफलता प्राप्त गर्ने होला।

कु० नं० ४१८

५ ३
६ ४ २
७बु. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या बुद्धिको स्थानबाट शक्ति-बल प्राप्त गर्नेवाला तथा विद्या स्थानबाट नै धन व्यय गर्नेवाला र बाहिरी शक्तिका कारणहरूले बुद्धियोगद्वारा लाभ पनि प्राप्त गर्नेवाला, सन्तान पक्षमा दाजु-भाइ, दिदी-बहिनीमा केही कमीका साथै सुखको अनुभव गर्नेवाला र बाठो, बुद्धिमान र आफूले भनेका कुराको गलती स्वीकार नगर्नेवाला, सबै कुरालाई यता-उता घुमाएर चातुर्यले मैले भनेको ठीक हो भनेर सिद्ध गर्न जान्नेवाला, बुद्धियोगले कहिले काहीं हानिको योग पाउनेवाला, आफ्नू मस्तिष्क भित्र केही शक्ति र केही दुर्बलता मिश्रित प्रभाव पाउने र निकै बाठो होला।

कु० नं० ४१९

५ ३ ६ ४ २ ७ १ ८बु. १० १२ ९ ११

जुन व्यक्तिको धन राशिका बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस अन्य बाहिरी स्थानहरूको सम्पर्कबाट केही बन्धन पाउनेवाला, खर्च गर्नमा अपठेरो अनुभव गर्नेवाला, परतन्त्रता युक्त झ्याउलोको काम गर्ने र खर्चले केही कष्ट सहेर पनि बढी खर्च गर्ने मन भएको, शत्रु स्थानबाट केही विवेकको शक्तिले शीलयुक्त भएर काम गर्नेवाला र दाजु-भाइ, दिदी-बहिनीको पक्षमा झ्याउलो र कमजोरी पाउनेवाला, केही अशान्तप्रद रहने र अन्य केही गुप्त विवेक भएको होला।

कु० नं० ४२०

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९बु. ११

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस बाहिरी स्थानहरूको योगले र नित्यको परिश्रम र सुचारू ढंगको कर्मले दैनिक व्यापार गर्दै रहेर खर्चको शक्ति प्राप्त गर्नेवाला, दाजु-भाइको भन्दा दिदी-बहिनीको राम्रो सुख प्राप्त गर्नेवाला, स्त्री-स्थानबाट केही न्यूनताका साथै साहस एवं शक्तिको पनि योग पाउनेवाला, व्यापारको घेराबाट सम्मान पाउनेवाला, व्यापारमा केही शक्ति र कमजोरी मिश्रित योग पाउनेवाला, शरीरमा केही शक्ति घट-बढको योग पाउनेवाला तथा लौकिक कार्यहरूमा विवेक शक्तिले सफलता पाउनेवाला, बडो बाठो व्यक्ति होला।

कु० नं० ४२१

५ ३ ६ ४ २ ७ १ ८ १०बु. १२ ९ ११

जुन व्यक्तिको कुम्भ राशिका बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू बल-पुरुषार्थमा न्यूनता पाउनेवाला, र गुप्त शक्तिले काम सिद्ध पार्ने खालको तथा विवेकको योगले र विदेशको योगले बढी परिश्रमद्वारा खर्च चलाउनेवाला, धन प्राप्तिको लागि कठिन भन्दा पनि कठिन काम गर्नेवाला तथा दाजु-भाइ, दिदी-बहिनीको वियोग सहनेवाला, धेरै परको युक्तिद्वारा आफ्नू काम बनाउन जान्नेवाला, बांगो-टिंगो काम गर्न अधिसर्नेवाला,शीलद्वारा गुप्त रीतिले काम गर्न जान्ने खालको होला।

कु० नं० ४२२

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११बु.

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट नवम स्थानमा छ भने त्यो मानिस ईश्वरमा केही अविश्वास गर्नेवाला तथा दाजू-भाई र दिदी-बहिनीको

कु० नं० ४२३

अपूर्ण सुख प्राप्त गर्नेवाला, भाग्यको दुर्बलता पाउनेवाला भए पनि बर्ता पुरुषार्थ गर्ने खालको होला। धर्मको केही हानि र केही कमजोरी पाउनेवाला, अन्यान्य स्थानहरूबाट पनि आंशिक दुर्बलता पाउनेवाला, खर्चको न्यूनताले गर्दा भाग्यलाई दोषी मान्नेवाला, उचित रीतिले सनातन धर्मको पालन गर्न नसक्ने होला। समाजवादी व्यवस्थालाई मान्नेवाला र भाग्य एवं यशको हानि पाउनेवाला, धन-वृद्धिमा न्यूनता पाउनेवाला र संकीर्ण विवेकी होला।

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस विवेक शक्तिको द्वारा राम्ररी काम गर्नेवाला, केही 'म ठूलो' भन्ने

कु० नं० ४२४

अभिमान राख्नेवाला, दाजु-भाइ र पिताको शक्तिमा आंशिक दुर्बलताको योग पाउनेवाला, आफ्नू शक्तिको शान र सुखको हेतु बढी व्यय गर्नेवाला भए पनि शान र ढाँचा देखाउनेवाला, व्यापार आदिको सम्बन्धमा केही कमजोरी पाउनेवाला तथा बाहिरी अन्य स्थानहरूको योगले केही शक्ति पाउनेवाला तथा मातृस्थानमा केही दुर्बलता पाउनेवाला र राज-समाजको स्थान सम्बन्धमा विवेकको शक्ति बर्ता प्रयोग गरेर पनि सफलतामा केही न्यूनता प्राप्त गर्ने खालको होला।

जुन व्यक्तिको वृषराशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू बाहुबलको र विवेक शक्तिको योगले तथा बाहिरी सम्बन्धहरूबाट बढी लाभ कमाउनेवाला, केही खर्चको शक्तिले पनि लाभ पाउनेवाला र लाभ स्थानमा केही कमी पनि अनुभव गर्नेवाला, बुद्धि र चातुर्यले विशेष काम सपार्न जान्नेवाला, लाभ-प्राप्तिक लागि धेरै उल्टो-सोझो कामहरू गर्नेवाला तथा सन्तान पक्षमा केही हानि र लाभ पनि पाउनेवाला, बुद्धिद्वारा केही उल्टो र केही सोझो काममा पनि व्यर्थ विवाद गर्नेवाला, दाजु-भाइ, दिदी-बहिनीबाट सामान्य लाभ पाउनेवाला, केही बल र पुरुषार्थ प्राप्त गर्ने, बढी खर्च गर्ने खालको होला।

कु० नं० ४२५

५ ३
६ ४ २बु.
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो व्ययको शक्ति राख्नेवाला, दाजू-भाई र दिदी-बहिनीबाट केही हानि पाउनेवाला र तिनीहरूसित केवल टाढाको सम्बन्ध राख्नेवाला होला। आफ्नू दाजू-भाइसित केही हानि पाउनेवाला होला। आफ्नू संचित शक्ति खर्च गरिदिनेवाला, सबै थरिका पुरुषार्थमा कमी पाउनेवाला, अन्यान्य स्थानहरूको सम्बन्धबाट काम चलाउनेवाला, खर्चको शक्तिले शत्रु स्थानमा प्रभाव राख्ने र रोग एवं कष्टको लागि पनि केही शक्तिको प्रयोग गर्नेवाला र खर्चको स्थानमा कहिल्यै पनि कुनै प्रकारको बाधा नगर्नेवाला र आफ्नू विवेक शक्तिको प्रयोग निकै चातुर्यको साथ गर्ने र सबै काममा ढीलो गर्ने खालको होला। साहसको स्थानमा दुर्बलता पाउने र विवेकको शक्तिले नै खर्चको संचालन-शक्ति कायम राख्ने खालको होला।

कु० नं० ४२६

५ ३बु.
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नान्तर-गुरुफलम्

जुन व्यक्तिको कर्क राशिको गुरू लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस ठूलो आत्मज्ञानी, धर्मात्मा, प्रतापी, ठूलो भाग्यशाली तथा हृदयमा शूर-वीरता राख्नेवाला एवं न्याय र सत्य मनपराउने खालको तथा धर्म र अधर्मलाई राम्ररी चिन्नेवाला, ठूलो सम्मान पाउनेवाला, गौरवर्ण हुने र राम्रो देह-यष्टिवाला, प्रसस्त बुद्धिमान, चाक्लो ललाट भएको, निकै अग्लो व्यक्ति होला। धेरै सन्तानवाला, पुण्यकर्मको बलले उत्थान पाउनेवाला, स्त्री-भोगादिमा केही न्यूनता पाउनेवाला, गृहस्थीको सम्बन्धमा केही उदासीन रहनेवाला, धनी मावली भएको र प्रभावशाली, स्वार्थसिद्धिमा लाग्ने, विद्यावान, ज्योतिष-प्रेमी, धेरै बाठो, भेदकलाको शक्ति राख्नेवाला, शत्रुलाई जित्नेवाला विजयी होला।

कु० नं० ४२७

५ ३
६ ४गु. २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको सिंह राशिको गुरू लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस आफ्नू प्रभाव र भाग्यले खूब धन कमाउनेवाला, महान् प्रभावशाली कर्म गर्नेवाला र अनेक थरिका दाउ-पेंचको ज्ञान राख्ने हुनाले शत्रु स्थानबाट लाभ कमाउनेवाला, धेरै ठूलो व्यापार गर्न जान्नेवाला, लौकिक उन्नतिको निम्ति महान् परिश्रमयुक्त कर्म गर्नेवाला, प्रसस्त धन-मान पाउनेवाला, मावली पक्षबाट लाभ र इज्जत कमाउनेवाला, राज-समाज र पिता स्थानबाट केही सामान्य झ्याउलोहरू द्वारा मान, इज्जत र धनको लाभ पाउनेवाला, तथा धन र भाग्यको शक्तिले प्रभावको वृद्धि पाउनेवाला, अपठेरा युक्तिहरूद्वारा र हृदयबलद्वारा धनको वृद्धि भेट्टाउने खालको होला।

कु० नं० ४२८

५गु. ३
६ ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको कन्या राशिका गुरू लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थले उन्नति गर्नेवाला तथा स्त्री भोगादि र गृहस्थको पक्षमा सानो ठन्ने खालको होला। दाजु-भाइको शक्तिको योग पाउनेवाला तथा केही चातुर्यले धर्मको पालन गर्नेवाला र भाग्य एवं पुरुषार्थद्वारा खूब लाभ पाउनेवाला तथा केही बांगा-टिंगा युक्तिहरूद्वारा शत्रुस्थानमा सफलता प्राप्त गर्नेवाला र दाजु-भाइ, दिदी-बहिनीको स्थानमा केही उन्नति पाउनको साथै आंशिक वैमनस्यताको पनि योग पाउनेवाला, उन्नतिको शिखरमा पुग्नको विशेष चेष्टा गर्ने खालको होला। परिश्रम गर्नमा सदैव लागि रहनेवाला, प्रभावशाली तथा भोगादिक इन्द्रियहरूमा केही न्यूनता प्राप्त गर्नेवाला र गृहस्थीमा बर्ता चिन्तित रहनेवाला होला।

कु० नं० ४२९

५ ३
६गु. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिका गुरू लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भाग्यमानी जानिनेवाला र बढी खर्च गर्नेवाला तथा भाग्यको विकासका लागि गूढ युक्तिहरूमा विशेष ध्यान राख्दै त्यसमा केही नीरसताको योग प्राप्त गर्नेवाला तथा सुख प्राप्तिको वृद्धि गर्नका लागि केही दैवी-युक्तिहरूको बल द्वारा सफलता र भूमि-भवन आदिका साधन पाउनेवाला र मातृस्थानमा केही सुख-दुःखसहित प्रभाव पाउनेवाला, जीवनको दिनचर्यामा नीरसताको योग पाउनेवाला र शक्तिको अनुभव गर्नेवाला, अनि भाग्यस्थानको शक्तिबाट केही युक्तिद्वारा राजा-समाज र पिता-स्थानबाट मान पाउनेवाला तथा अन्य स्थानबाट पनि सफलताको योग परेको र शत्रु पक्षको सम्बन्धमा केही अशान्ति पाउने खालको होला।

कु० नं० ४३०

५ ३
६ ४ २
७गु. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिको गुरू लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो बुद्धिमान, धार्मिक तथा धर्मशास्त्रहरूको निकै सम्मान गर्नेवाला र ज्योतिष कलामा पूरा दख़ल राख्नेवाला तथा धेरै ठूलो सम्मान पाउनेवाला, र शरीरमा भाग्यमानी र सौन्दर्यको योग पाउनेवाला, तथा 'म ठूलो' भन्ने अभिमानको कुरा बर्ता गर्नेवाला, आफ्नो कुरा माथि पारेर प्रभाव जमाउनेवाला, दिमाग भित्र सत्यको प्रधानताका साथसाथै केही गुप्त शक्तिले पनि काम बनाएर शत्रु स्थानमा विजयी हुनेवाला, सन्तान पक्षबाट शक्तियुक्त आंशिक वैमनस्यता पाउनेवाला तथा ठूलो दूरदर्शी एवं प्रसस्त ललाट भएको र तत्त्वको खोजी गर्नेवाला, केही युक्ति जान्ने र ईश्वरवादी होला।

कु० नं० ४३१

५ ३ ६ ४ २ ७ १ ८गु. १० १२ ९ ११

जुन व्यक्तिको धन राशिका गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धर्मको ठीकसित पालन नगर्ने खालको होला। सनातन धर्मबाहेक यौटा प्रपञ्च रचित धर्मलाई मान्नेवाला तथा हृदयबल र असहयोगको न्याय शक्तिको बलद्वारा शत्रु पक्षलाई 'म ठूलो' भन्ने प्रभाव शक्तिले पराजित गर्नेवाला। यौटा ठूलो तपस्यापछि भाग्यको उन्नति पाउनेवाला, हठ्योगको शक्तिले मान र धन पाउनेवाला, मावली पक्षबाट केही शक्ति पाउनेवाला, रोग, शत्रु र झ्याउलाहरूमा भाग्यबलले विजय पाउनेवाला किन्तु भाग्यको उन्नतिको बाटोमा सदैव विघ्न-बाधाहरूको उपस्थिति पाउनेवाला, आफ्नू प्रभाव कायम राख्ने योजनाहरूको कारणले पुनर्जन्मको निम्ति धर्म संग्रह गर्ने आवश्यकताहरूलाई निर्मूल ठनेर अस्वीकार गरिदिनेवाला राज-समाजमा प्रभाव पाउनेवाला तथा बढी धन व्यय गर्नेवाला एवं प्रभावशाली तथा उन्नति पाउनका लागि महान् परिश्रम गर्ने होला।

कु० नं० ४३२

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९गु. ११

जुन व्यक्तिको मकर राशिको गुरू लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस भाग्यको उन्नतिमा र विवाहको सम्बन्धमा निकै अत्यास र कष्टहरूको योग पाउनेवाला, अल्झो र झ्याउलाहरू जस्तै दैनिक व्यापार चिन्तायुक्त भएर गर्दै रहनेवाला, त्यही कामको भरमा शरीरमा प्रभाव पाउनेवाला, केही गुप्त परिश्रम र भाग्यको बलले लाभको वृद्धि र पुरुषार्थको उन्नति पाउनेवाला, दाजु-भाइ दिदी-बहिनी भएको, धर्म पालनको सम्बन्धमा गलती गर्नेवाला, गृहस्थीको र दैनिक कामहरूमा केही अपठेरो अनुभव गर्नेवाला, स्त्रीपक्षमा र इन्द्रियादिक भोगपक्षमा केही कमी र केही दिक्कतका साथ आफ्नू काम निकाल्नेवाला, केही दुर्बल भाग्यको होला।

कु० नं० ४३३

५ ३
६ ४ २
७ १
८ १०गु. १२
९ ११

• जुन व्यक्तिको कुम्भ राशिका गुरू लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा केही दुर्बलताको योग पाउनेवाला र अनेक झ्याउला आइलाग्ने खालको होला। धर्मको पालन ठीकसित गर्न नसक्नेवाला, भाग्यको वृद्धि गर्नका लागि विदेश आदिको महान् परिश्रमी र अपठेरा कर्मको योगले काम पूरा गर्नेवाला। खूब खर्च गर्नेवाला, शत्रु पक्षको सम्बन्धमा ठूलो कठिनाईहरूले भलादमीको आडमा लुकेको शक्तिले काम लिन जान्ने, मावली पक्षबाट केही हानि पाउनेवाला, अन्य स्थानहरूको योगले शक्ति, उन्नति सुख र प्रभाव पाउनेवाला, सुयशको कमी, ईश्वरको निष्ठामा कमीको योग पाउने खालको होला।

कु० नं० ४३४

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११गु.

जुन व्यक्तिको मीन राशिको गुरू लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी, बर्ता मान पाउनेवाला र निकै बुद्धिमानीले काम गर्न जान्नेवाला, मिलेको कदवाला, सन्तान शक्ति पाउनेवाला र विद्या, विवेक एवं वाणीको शक्ति पाउनेवाला, केही ठग वृत्तिले उत्तम धर्मको पालन गर्नेवाला, भाग्यबलले शत्रुलाई पराजित गर्न जान्ने खालको होला। भाग्यस्थानमा केही बाधा पाउनेवाला, झगडा-विवाद नगर्नेवाला, भाग्यमानी मावली पाउनेवाला एवं धर्म र सज्जनताको स्थानमा सदैव आफ्नू गुप्त स्वार्थको पालन ध्यानपूर्वक गर्न जान्नेवाला, निकै बाठो व्यक्ति होला।

कु० नं० ४३५

५ ३ ६ ४ २ ७ १ ८ १० १२ गु. ९ ११

जुन व्यक्तिको मेष राशिको गुरू लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस महान् प्रभावशाली तथा ठूलो भाग्यमानी र ठूला-ठूला व्यापार समस्याहरूको गाँठो फुकाउन जान्ने खालको होला। राज-समाज र पिताको स्थानमा मान र प्रभाव पाउनेवाला, आफ्नू भोगादिक उन्नतिका लागि महान् परिश्रम र दौड-धूप गर्न सक्नेवाला र धन स्थानको खूब वृद्धि गर्न जान्ने तथा भाग्यलाई दैवी शक्तिको बलले उन्नतिको बाटोमा स्वतन्त्र ख्याति प्राप्त गर्नेवाला, आफ्नू घेराभित्र नाइके बनेर रहनेवाला, शत्रुपक्षमा निकै ठूलो प्रभाव राख्नेवाला, मावलीको शक्तिमा विशेष सम्मान पाउनेवाला र पूर्वसंचित बलले लाभ पाउनेवाला, पुनर्जन्मको लागि धर्मको वास्ता नगर्ने र सदैव स्वार्थयुक्त चाल चल्नेवाला बाठो होला।

कु० नं० ४३६

५ ३ ६ ४ २ ७ १ गु. ८ १० १२ ९ ११

जुन व्यक्तिको वृषराशिका गुरू लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिले र युक्तिहरूले खूब धन कमाउनेवाला तथा निकै पुरुषार्थ गर्नेवाला एवं दैनिक व्यापारलाई तुच्छ ठनेर केही वेवास्ता गर्नेवाला र स्त्री पक्षमा र इन्द्रिय भोगादिक पक्षमा न्यूनता पाउनेवाला तथा विद्या र सन्तान पाउनेवाला, शत्रु पक्षबाट केही सामान्य लाभ पाउनेवाला र धर्मको सम्बन्धबाट केही लाभ पाउनेवाला अनि बठ्याइँले कुरा गर्न जान्नेवाला तथा दाजु-भाइ, दिदी-बहिनीको योग पाउनेवाला, दैनिक व्यापारमा केही अपठेरो र केही तुच्छ एवं लघुताको योग पाउनेवाला र प्रत्येक किसिमले स्वार्थसिद्ध गर्नेवाला निकै बाठो र बुद्धिमान होला।

कु० नं० ४३७

| | | |
|---|---|---|
| ५ | | ३ |
| ६ | ४ | २ गु. |
| ७ | | १ |
| ८ | १० | १२ |
| ९ | | ११ |

जुन व्यक्तिको मिथुन राशिको गुरू लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने तथा भाग्यस्थानमा केही दुर्बलता पाउनेवाला र धर्म एवं न्यायको पालन गर्न नसक्ने खालको होला। गुप्त प्रभावले काम बनाउनेवाला र शत्रु पक्षबाट केही हानि-नोक्सानी पाउनेवाला, अन्य बाहिरी स्थानको सम्बन्धबाट परिश्रमको योगले भाग्य शक्तिलाई निकै कष्टपूर्वक प्राप्त गर्नेवाला र खर्चको संचालन शक्तिमा भाग्य र परिश्रमको भर-थेग पाउनेवाला, यश प्राप्तिमा केही कमी पाउनेवाला र ईश्वरको निष्ठामा पनि केही न्यूनता पाउनेवाला, बाहिरी स्थानहरूमा प्रभाव पाउनेवाला र जीवनको दिनचर्यामा-सुखप्राप्तिको सम्बन्धमा केही नीरसता पाउने खालको होला।

कु० नं० ४३८

| | | |
|---|---|---|
| ५ | | ३ गु. |
| ६ | ४ | २ |
| ७ | | १ |
| ८ | १० | १२ |
| ९ | | ११ |

# कर्क लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको कर्क राशिका शुक्र लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस माताको शक्तिबाट सुखपूर्वक लाभ पाउनेवाला, शरीरलाई राम्रो र सुखी-सफा राख्नेवाला, सुखरहित लाभ मन नपराउने खालको होला। मावलीको सम्पत्ति पाउनेवाला, स्त्री स्थानमा सुख प्राप्तिको योग पाउनेवाला, तथा दैनिक व्यापार सुखपूर्वक चलाएर सुख एवं लाभ अनुभव गर्नेवाला र इज्जत, मान प्राप्त गर्नेवाला, निकै चतुर होशियार र देहको योगबाट पनि आयको वृद्धिको कारण बनाउन जान्नेवाला, शान्त स्वभाव राख्ने भएको ठूलो आदर्श चातुर्यको योगले नै गृहस्थी र लौकिक कामहरूमा सफलता पाउनेवाला तथा शरीरको सुन्दरता मनपराउने खालको होला।

कु० नं० ४३९

५ ३ ६ ४शु. २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस लाभ प्राप्ति र धनको पक्षमा सुखयुक्त भए पनि यौटा विशेष अत्यास र झ्याउलाहरूको योग लाभको सम्बन्धमा पाउनेवाला र आमाको सुख वा मातृस्थानमा केही हानि मनमा ठान्ने वा हानि पाउनेवाला तथा धनको कोष सम्बन्धित विषयमा प्रकट दर्शाउने साटो मुकाबलामा भित्री दुर्बलता अनुभव गर्नेवाला र आफ्नू जीवनको दिनचर्यामा एक प्रकारले 'म धनी हुँ' भन्ने दर्शाउनेवाला, आयुको पूर्ण सुख पाउनेवाला अनि अनेक गूढ युक्तिहरूको प्रयोग गर्नामा सुखको अनुभव गर्नेवाला एवं लौकिक पद्धतिमा ठूलो चातुर्यले लाभ प्राप्त गर्नेवाला तथा आराम र सुखको स्वच्छन्दतामा केही बन्धनको योग परेको भए पनि इज्जतदार व्यक्ति होला।

कु० नं० ४४०

५शु. ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको कन्या राशिका शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नै बल पुरुषार्थले आमदानीमा वृद्धि गर्नमा दुर्बलता मान्नेवाला, भाग्यमा पूरा भरोसा गर्नेवाला, आफ्नू दुर्बलताले गर्दा सुखमा हानि ठनेर दुःख अनुभव गर्ने खालको होला। दाजु-भाइ र दिदी-बहिनीको पक्षमा केही कमी पाउनेवाला, धर्मबाट सुख र लाभ पाउनेवाला र धर्म एवं ईश्वरको सत्ता मान्नेवाला, मातृस्थानको तर्फबाट केही दुर्बलता अनुभव गर्नेवाला, परिश्रम र व्यवस्थाभन्दा भाग्यलाई नै ठूलो ठान्नेवाला,भाग्यमानी मानिनेवाला, भूमि-भवनको सुखमा केही न्यूनता पाउनेवाला तथा केही अल्छी स्वभावको होला।

कु० नं० ४४१

५ ३
६शु. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भूमि स्थानको महान् लाभ पाउनेवाला, भूमि-भवनबाट लाभ कमाउनेवाला, अनेक पथबाट आमदानी पाउनेवाला, धेरै थरिका राम्रा-राम्रा सुखद सामग्री तथा सुख प्राप्तिका साधन, महान् गम्भीर चातुर्यले प्राप्त गर्न जान्नेवाला, आमाको विशेष कृपा-पात्र हुनेवाला, पिता-स्थानबाट लाभ प्राप्त गर्नेवाला तथा सवारीको सुख प्राप्त गर्नेवाला र मान-प्रतिष्ठायुक्त जीवन बिताउनेवाला, राजसमाजमा सुख पाउनेवाला एवं उन्नतिको शिखरमा पुग्नका लागि अनेक थरिका चातुर्यपूर्ण राम्रा-राम्रा कार्य गर्नेवाला र शान्तिप्रिय, स्वस्थ व्यक्ति होला।

कु० नं० ४४२

५ ३
६ ४ २
७शु. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिका शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो बुद्धि राख्नेवाला, बुद्धिले अनेक लाभ प्राप्त गर्नेवाला,

कु० नं० ४४३

५ ३
६ ४ २
७ १
८शु. १० १२
९ ११

बुद्धि र वाणीमा ठूला-ठूला कलाहरू राख्न सिपालु होला तथा बुद्धिद्वारा ठूला-ठूला सुख प्राप्त गर्नेवाला, सन्तानको सुख प्रसस्त पाउनेवाला, गम्भीरता र शान्तिपूर्वक चातुर्यपूर्ण अनेक मीठा-मीठा सुखद कुरा भन्न जान्ने, इज्जतदार, मानयुक्त तथा प्रसस्त धनी होला। सुखपूर्वक विद्याग्रहण गर्नेवाला, र लाभ-प्राप्तिको सम्बन्धमा अनेक गम्भीर योजनाहरू बनाउनेवाला, सुखपूर्वक रहेर नै लाभ पाउनेवाला, धेरै बाठो र शान्तियुक्त होला।

जुन व्यक्तिको धनराशिको शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही कष्ट वा केही परतन्त्रताको योगबाट आमदानी पाउनेवाला र

कु० नं० ४४४

५ ३
६ ४ २
७ १
८ १० १२
९शु. ११

अधिक खर्च गर्ने खालको होला। मातृ-स्थानमा केही न्यूनता पाउनेवाला र सुख शान्तिमा बाधा पाउनेवाला तथा भूमि-भवनको केही कमी र केही अपठेरो मान्ने खालको होला। अनि केही रोग र शत्रुस्थानबाट लाभ पाउनेवाला एवं केही मावली पक्षबाट सुखको सानो योग पाउनेवाला, धेरै यता-उताको चातुर्यहरूले सुख र लाभको वृद्धि गर्नेवाला, शत्रुस्थानमा शान्तिपूर्ण युक्तिहरूले काम बनाउनेवाला, शत्रुसित सम्मुख भएर विवाद नगर्नेवाला, अन्यान्य स्थानहरूबाट पनि सुख र लाभको योजना पाउनेवाला, गुप्त बाठो होला।

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी तथा भाग्यको शक्तिले नै लाभ र सुखको वृद्धि गर्नेवाला, धर्मस्थानको र केही परोपकारको लाभ महान चातुर्यहरूद्वारा प्राप्त गर्नेवाला, माताको र मातृस्थानको खूब लाभ प्राप्त गर्नेवाला, भवन-भूमिको शक्ति पाउनेवाला एवं बल पुरुषार्थको शक्तिमा केही न्यूनता र केही उदासीनताको योग-पाउनेवाला, दाजु-भाइको मद्दतको वास्ता नराख्ने खालको होला। चाक्लो ललाट भएको र ईश्वरमा धेरै भर गर्ने खालको र सुखपूर्वक लाभोन्नति तथा कहिले काहीं अकस्मात् धन पाउने होला।

कु० नं० ४४५

५ ३
६ ४ २
७ १
८ १०शु. १२
९ ११

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस निकै गूढ र लामो युक्तिहरू द्वारा लाभ पाउनेवाला र लाभ प्राप्तिको लागि अन्य स्थानहरूको सम्बन्ध पाउनेवाला, आफ्नू स्थानीय सुखमा हानि तथा अन्यान्य स्थानहरूबाट सुख र लाभको सुन्दर योग पाउनेवाला र मातृ-स्थानमा केही असन्तोष पाउनेवाला आयुस्थानमा केही वृद्धि पाउनेवाला, जीवनको दिनचर्यामा निकै गम्भीर चातुर्यहरूको योगमा बढी सुख मान्ने खालको होला। धन-वृद्धिको धेरै विचार राख्ने भए पनि केही नीरसता पाउनेवाला, जीवनमा सहायक हुने खालको केही प्रथम र गम्भीर वस्तुको लाभ पाउनेवाला अत्यन्त बाठो व्यक्ति होला।

कु० नं० ४४६

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११शु.

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै रवाफ भएको र दैनिक व्यापारबाट सुखका साधन जोर्नेवाला, शरीरमा सौन्दर्यको योग पाउनेवाला, स्त्री स्थानमा पनि सुख र लाभको योग पाउनेवाला, दैनिक व्यापारकै स्थानबाट सुख र लाभको साधन निकै चातुर्यले प्राप्त गर्ने खालको होला। लौकिक र गृहस्थीका काममा गौरव र सुख-मान पाउनेवाला, मातृस्थान र भूमि स्थानबाट ठूलो भर पाउनेवाला, इन्द्रिय भोगादिकको विशेष लाभ पाउनेवाला, शान्तिपूर्वक अनेकानेक सफलता पाउने र बाठो होला।

कु० नं० ४४७

५ ३
६ ४ २
७ १
८ १० १२ शु.
९ ११

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट दशम स्थानमा छ भने त्यो मानिस माता-पिताबाट सुख र लाभ प्राप्त गर्नेवाला, राज–समाजमा मान र आनन्द पाउनेवाला एवं धेरै ठूलो र राम्रो चातुर्यपूर्ण कर्म गर्न जान्नेवाला, भूमि-भवनबाट लाभ र ऐश्वर्य प्राप्त गर्नेवाला, मान-प्रतिष्ठाको स्थायी योजनाहरू पाउनेवाला, बडो उज्जवल व्यापार गर्न जान्नेवाला, आमदानीको स्थानमा सुख र मान बाहेक अरू प्राप्ति नखोज्नेवाला, सवारी आदिको राम्रो लाभ पाउनेवाला, निकै प्रभावशाली इज्जतदार, कार्य-कुशल व्यक्ति होला।

कु० नं० ४४८

५ ३
६ ४ २
७ १शु.
८ १० १२
९ ११

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस सुखपूर्वक निस्फिक्रीसित आमदानी पाउनेवाला, भूमि-भवनको लाभ पाउनेवाला, अनेक थरिका लाभहरू स्वतः प्राप्त गर्नेवाला। विद्या ग्रहण गर्नेवाला र सन्तान सुखले प्रसन्न रहनेवाला, अनि मीठा-मीठा कुरा गरेर पनि निकै लाभ पाउनेवाला, निकै राम्रा-राम्रा सुखहरूको प्राप्तिका लागि निकै ठूलो चातुर्यको योगले धन-कमाउनेवाला, कुनै ठूलो र गम्भीर लाभको स्थानमा स्थिरताले काम लिन जान्ने प्रकृति भएको होला। सदैव शान्ति-युक्त तोकिएको आमदानीलाई नै महत्व दिने महान् बाठो व्यक्ति होला।

कु० नं० ४४९

५ ३
६ ४ २शु.
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस माताको स्थानबाट केही हानि पाउनेवाला तथा बढी धन व्यय गर्नेवाला र बाहिरी अन्य स्थानहरूको योगबाट लाभ पाउनेवाला र अन्य स्थानमा नै सुखको अनुभव गर्नेवाला र भूमि-भवनादिको किन-बेचले पनि सुख र खर्चको शक्ति पाउनेवाला र आमदानीलाई प्रायशः खर्च गरिदिनमा नै सुखको अनुभव गर्नेवाला, केही परिश्रम र प्रपञ्चको योगद्वारा पनि सुख र लाभ प्राप्त गर्नेवाला। आफ्नू मातृ-भूमिको केही हानि पाउने खालको होला। शत्रु स्थानबाट र गुप्त चातुर्यहरूले काम लिनेवाला, केही अशान्तियुक्त होला।

कु० नं० ४५०

५ ३शु.
६ ४ २
७ १
८ १० १२
९ ११

# कर्क लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको कर्कराशिको शनि लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस निकै ठूलो परिश्रमबाट दैनिक व्यापार चलाउनेवाला तथा लामू आयुष्य पाउनेवाला एवं आफ्नी यौटी पत्नीसित तृप्त नहुने वाला र इन्द्रिय भोगादिकको सम्बन्धमा बर्ता उच्च र गूढ युक्तिहरू द्वारा काम गर्न जान्नेवाला होला। व्यापारको सम्बन्धमा निकै गूढ युक्तिहरू र दैनिक उन्नति गर्नका लागि काम गर्नेवाला, कष्टमा झन बर्ता मनोयोगले काम गर्नेवाला, लौकिक उन्नतिका लागि उच्च प्रपञ्चले काम सपार्नेवाला, पिता स्थानमा र राज-समाजको सम्बन्धमा केही न्यूनता र केही उदासीनताले काम लिनेवाला वास्तविक उन्नति र मान-प्रतिष्ठामा दुर्बलता पाउनेवाला तथा दाजु-भाइको पक्षमा मद्दत दिने र लिने सम्बन्धमा केही कष्टको योग पाउनेवाला तथा शरीरमा केही अस्वस्थता र दुर्बलताको योग पाउनेवाला तथा चिन्तित रहने भए पनि साहसी होला।

कु० नं० ४५१

५ ३ ६ ४श. २ ७ १ ८ १० १२ ९ ११

कु० नं० ४५२

५श. ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको सिंह राशिका शनि लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस निकै गहीरो र गूढ युक्तिहरूको संग्रह शक्ति द्वारा दैनिक व्यापार चलाउनेवाला तथा लामो आयु भएको र स्त्री एवं गृहस्थीको सम्बन्धमा बन्धन र अशान्तिको योग पाउनेवाला एवं पुरातत्त्व शक्तिको बलले भूमिस्थानको र सुखस्थानको विशेष शक्ति पाउनेवाला तथा जीवनको दिनचर्यामा केही बन्धन र केही नीरसता वा अमीरीको योग पाउनेवाला र पूर्वसंचित धन र कुटुम्बको हानि पाउनेवाला तथा आफ्नू दैनिक परिश्रमको बलले युक्तिद्वारा लाभ पाउनेवाला, जीवनको दिनचर्याको बलले भोग प्राप्त गर्ने आनन्दी व्यक्ति होला।

जुन व्यक्तिको कन्या राशिका शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो उद्योग गर्नेवाला र आफ्नै पुरुषार्थको बलले अनेक ठूला-ठूला युक्तिहरूद्वारा दैनिक व्यापार चलाउनेवाला, जीवनको दिनचर्यामा केही आनन्दको योग पाउनेको तथा इन्द्रियभोग, सुख पाउने र आयुको शक्ति पाउने खालको होला। सन्तान पक्षमा केही कष्ट अनुभव गर्नेवाला र स्त्री भोगादिको पक्षमा प्रभावको शक्ति पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही झ्याउलो पाउनेवाला र खूब धन-व्यय गर्ने खालको होला। जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको शक्ति पाउनेवाला र धर्मसम्बन्धी केही हानि र भाग्यको केही वृद्धि गर्ने खालको ठूलो तेजस्वी व्यक्ति होला।

कु० नं० ४५३

५ ३
६श. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नो जीवनको दिनचर्यामा बडो सुखी र आनन्दको योग परेको होला। आयुको वृद्धि पाउने र पिता-स्थानमा धेरै उदासीनताको योग परेको होला। राज-समाजमा सम्मानको कमी पाउने र दैनिक व्यापारमा निकै ठूलो गम्भीर प्रपञ्चका साथ सुख प्राप्त गर्नेवाला होला। शत्रु स्थानमा सदैव केही लाभ-हानि वा उतार-चढावको योग पाउनेवाला, जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको गहीरो लाभ पाउनेवाला, शरीरमा केही व्याधि र चिन्ताको योग परेको होला। स्त्री भोगादिक र गृहस्थीको सम्बन्धमा अनेक सुखका साधनहरू पाउनेवाला, अल्झोहरूमा पनि राम्रा युक्तिहरू द्वारा विजय पाउने खालको व्यक्ति होला।

कु० नं० ४५४

५ ३
६ ४ २
७श. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस केही फिक्री वा चिन्ताहरूले गर्दा दैनिक व्यापारलाई चलाइराख्ने खालको होला। व्यापार र सन्तान तथा पत्नीका कारणहरूले मस्तिष्कमा अनेक थरिका कष्ट र झ्याउलाहरू सहनेवाला होला। स्त्री भोगादिकको सम्बन्धको प्राप्ति र वृद्धिका लागि संलग्नतापूर्वक सदैव चिन्तन र साधन गरिरहनेवाला, धनको कोष वृद्धिका लागि निरन्तर चिन्तातुर र प्रयत्नशील रहने खालको होला। आयुको अवधिमा केही लौकिक आनन्द प्राप्त गर्नेवाला, बुद्धिभित्र स्वार्थ र क्रोध तथा अपठेरा चालहरूको योग प्राप्त गर्नेवाला, केही कटु बोल्नेवाला व्यक्ति होला।

कु० नं० ४५५

५ ३ ६ ४ २ ७ १ ८श. १० १२ ९ ११

जुन व्यक्तिको धन राशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस लामो आयु पाउनेवाला, निकै ठूलो प्रपञ्चको शक्तिद्वारा र महान परिश्रमबाट केही कष्ट अनुभव गर्नेवाला, केही रोगादि र मुद्दा आदि झ्याउलाहरूले जीवनको दिनचर्यामा अनेक प्रभाव पाउनेवाला तथा प्रभावको वृद्धि गर्नका लागि महान् कष्टसाध्य र बांगा-टिंगा युक्तिहरूको प्रयोग गर्नेवाला तथा इन्द्रिय भोगादिको पक्षमा केही कमी र केही कष्ट तथा अनेक थरिका हानि पाउनेवाला, अनि मावली पक्षबाट पनि आंशिक हानि र विवाद चलाउनेवाला, जीवनलाई सहायक हुने खालका केही पहिलो र गम्भीर प्रभाव पार्ने वस्तुको लाभ पाउनेवाला तथा ठूलो प्रसिद्धि प्राप्त गर्नेवाला, शत्रु स्थानमा लुकेको आगोले आफ्नू काम सपार्नेवाला बर्ता रिसाहा खालको होला।

कु० नं० ४५६

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९श. ११

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस अनेक प्रकारले महान परिश्रमी र दैनिक व्यापारमा लागि रहने तथा स्त्री स्थानबाट प्रभाव प्राप्त गर्नेवाला, फेरि स्त्री स्थानमै केही कष्टसाध्य शक्तिको योग पाउनेवाला तथा जीवनलाई सहायक हुने खालको केही शक्ति व्यापारबाट र केही ससुरालीबाट पाउनेवाला तथा आयुको वृद्धि पाउनेवाला, स्त्री स्थानमा र भोगादिको पक्षमा केही न्यूनाधिक स्वीकृति वा अस्वीकृतिको योग पाउनेवाला तथा शरीरमा कष्ट पाउने एवं गृहस्थी र जीवनको दिनचर्यामा भाग्यमानीको योग परेको तथा केही गुप्त फाइदाले स्वार्थसिद्धि गर्ने एवं पुरातत्त्व शक्तिको बलले भूमि-भवन र सुखको वृद्धि गर्ने, धर्मको हानि गर्ने भोगी खालको होला।

कु० नं० ४५७

५ ३ ६ ४ २ ७ १ ८ १०श. १२ ९ ११

जुन व्यक्तिको कुम्भ राशिका शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा स्त्री पिता एवं पुत्रको तर्फबाट चिन्ताहरूको कारण पाउने खालको होला र जीवनको दिनचर्यामा यौटा ठूलो आनन्दको स्थिर योग पाउनेवाला र जीवनमा सहायक हुने खालको कुनै गम्भीर वस्तुको स्थाई लाभ प्राप्त गर्नेवाला किन्तु स्त्री र गृहस्थीको भोगका सम्बन्धमा केही झ्याउलाहरू सहित तथा केही गुप्त योजनाहरू द्वारा आफ्नू काम चलाउनेवाला, आयुमा वृद्धि पाउने खालको होला। राज-समाजको स्थान सम्बन्धमा उन्नतिको निम्ति केही बाधाहरूको र केही बेवास्ताको योग पाउनेवाला, सम्मानमा कमी पाउनेवाला, व्यापारको सम्बन्धमा र दैनिक रोजगारको सम्बन्धमा दुर्बलता र कष्टको अनुभव गर्नेवाला, आफ्नू दैनिक कार्यक्रमको शक्ति विकास गर्नका लागि विदेश आदिको विशेष सम्बन्ध पाउनेवाला तथा कटुवाणी बोल्ने एक गुप्त कर्मिष्ठ खालको होला।

कु० नं० ४५८

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११श.

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी झैं फाइदासाथ जीवनको दिनचर्या व्यतीत गर्नेवाला, भाग्यमानीमा गनिनेवाला, आयुमा वृद्धि पाउनेवाला, अनि जीवनमा सहायक हुने खालको कुनै पहिलो र गम्भीर वस्तुको लाभ भाग्यफलले प्राप्त गर्नेवाला तथा वास्तविक भाग्यस्थानमा केही भित्री असन्तोषले गर्दा कष्ट पाउनेवाला, दैनिक आयमा वृद्धि गर्नका लागि तथा स्त्री र गृहस्थीको सुख भोग्नका लागि कुनै राम्रो प्रपञ्चको लट्ठीले काम लिन जान्ने, आफ्नू प्रभाव कायम राख्नको लागि देखावटी सज्जनताको योगले निकै सतर्कता र तत्परताले काम लिन जान्नेवाला तथा खूब लाभ पाउनेवाला, वास्ता नराख्ने खालको होला।

कु० नं० ४५९

५ ३ ६ ४ २ ७ १ ८ १० १२ श. ९ ११

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट दशम स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा महान् कष्टको योग परेको होला। दैनिक रोजगार र व्यापारको उन्नतिका लागि ठूला-ठूला कष्टसाध्य बांगा खाले कर्म गर्नेवाला, गृहस्थी र स्त्रीको सम्बन्धमा निकै विचित्र प्रकारको साना-ठूला योजनाहरू पाउनेवाला तथा पुरातत्त्व शक्तिको बलद्वारा केही भवन-भूमि आदिको सुख पाउनेवाला, मातृस्थानको केही आडम्बरी सुख पाउनेवाला, बढी धन व्यय गर्नेवाला, राज-समाजको स्थानमा गुप्त युक्तिहरूले दैनिक व्यवसायको लाभ प्राप्त गर्नेवाला, भोग-विलासको विशेष इच्छा भएर पनि केही न्यूनाधिक योग पाउनेवाला जीवनमा सहायक हुने खालको केही पहिलो वस्तुको दुर्बलता पाउने र केही अल्छी स्वभावको होला।

कु० नं० ४६०

५ ३ ६ ४ २ ७ १श. ८ १० १२ ९ ११

जुन व्यक्तिको वृष राशिका शनि लग्नबाट एकादश स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा आयुस्थानको खूब वृद्धि पाउने खालको होला।

कु० नं० ४६१

५ ३
६ ४ २श.
७ १
८ १० १२
९ ११

जीवनमा सहायक हुने केही पहिलो र गम्भीर वस्तुको ठूलो लाभ पाउनेवाला, खूब धन कमाउनेवाला र जीवनको दिनचर्या प्रसस्त आनन्दको र दैनिक व्यापारको निकै ठूलो लाभ पाउनेवाला, देहको एक भागमा केही न्यूनता पाउनेवाला, स्त्री भोगादिको खूब लाभ पाउनेवाला र अफ्नो हक र इच्छा गरेको भन्दा बढी नाफा कमाउने वाला। सन्तान र वाणीमा कटुता पाउनेवाला एवं गूढ युक्तिहरूको आफूलाई मास्टर ठान्नेवाला तथा उदर विकारले युक्त विदेश आदिबाट खूब लाभ कमाउने खालको होला।

जुन व्यक्तिको मिथुन राशिका शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने खालको तथा जीवनमा सहायक हुने जस्तो

कु० नं० ४६२

५ ३श.
६ ४ २
७ १
८ १० १२
९ ११

पहिलो वस्तुको केही हानि पाउनेवाला तथा बाहिरी स्थानहरूको सम्बन्धबाट दैनिक व्यापारमा शक्ति प्राप्त गर्नेवाला र अनेक कष्टसाध्य युक्तिहरूले वा गुप्त उपायहरू द्वारा भाग्यको वृद्धि गर्नेवाला, आयुको स्थानमा कहिले काहीं ठूलै हानिहरूको योग पाउनेवाला, स्त्री र गृहस्थीको सुख सम्बन्धमा ठूला-ठूला दुर्बलताहरूको योग पाउनेवाला तथा इन्द्रिय भोगादिकको सुख सम्बन्धमा स्थानीय दुर्बलता पाएर केही खर्चको शक्तिले काम बनाउन जान्नेवाला र भाग्यको र धर्मको झूठो शक्तिमा केही वृद्धि पाउनेवाला तथा धनकोषको हानि पाउने र कुटुम्बको पनि हानि पाउने खालको होला।

# कर्क लग्नान्तर-राहुफलम्

जुन व्यक्तिको कर्क राशिको राहु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू देहको स्थानमा केही अरिष्ट र केही न्यूनताको योग पाउने खालको, देहकै सम्बन्धमा अनेक थरिको चिन्ता र फिक्री मात्रै भएको, अनेक ठूला चातुर्यहरू गुप्त रीतिले विचारेर प्रयोग गर्न जान्नेवाला तथा केही मानसिक कष्ट र शरीरको सौन्दर्यमा आंशिक कमी पाउनेवाला र मनमा केही डर, केही अत्यासको योग पाउनेवाला, आफ्नू व्यक्तित्वको उन्नति र जागृतिको लागि अनेक कष्टसाध्य अनधिकार चेष्टा गर्नेवाला तथा देहकै सम्बन्धमा कहिले-काहीं मरणासन्न कष्टको योग पाउनेवाला तथा ठूला-ठूला गहीरा र गुप्त युक्तिहरू द्वारा अन्त्यमा गहीरो आनन्द पाउने खालको होला।

कु० नं० ४६३

५ ३ ६ ४रा. २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको सिंह राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको कोष स्थानमा ठूलो हानि पाउने खालको होला। कुटुम्बको पनि निकै हानि आइलाग्ला र धन वृद्धिका लागि महान् तीक्ष्ण भेदयुक्त कर्म गुप्तरूपले गर्नेवाला, धन हानिले गर्दा कहिले-काहीं मस्तिष्कको भित्री भागमा मूर्छा झैं अनुभव गर्नेवाला, कठोर वेदनाको अनुभव गर्नेवाला, धन र इज्जतको रक्षाका लागि ठूला-ठूला युक्तिहरूले काम बनाउनेवाला, धनका कार्यहरूको पूर्ति गर्नका लागि कहिले-काहीं ऋण लिएर काम चलाउनेवाला, केही परेशानी र चिन्तातुर झैं रहने खालको होला।

कु० नं० ४६४

५रा. ३ ६ ४ २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस ठूलो हिम्मतको शक्तिले काम गर्न जान्ने र युक्तिहरूको शक्तिले साहस र हिम्मतमा वृद्धि पाउनेवाला धेरै-धेरै सफलता र आँटेका योजनाहरूको लाभ कमाउनेवाला, दाजु-भाइ र दिदी-बहिनीको स्थानमा केही हानि र क्लेश पाउनेवाला, आफ्नू स्वार्थसिद्ध गर्न परेमा न्याय वा अन्यायको वास्ता नगर्ने खालको होला। तर कार्यसिद्धिको मौकामा निकै ठूलो तत्परता र स्वयं उपस्थित रहेर काम लिनेवाला, बाहुबलको स्थानमा युक्ति बलले बढी सफलता पाउनेवाला, सावधान, होशियार र धैर्यवान एवं साहसी होला।

कु० नं० ४६५

५ ३
६रा. ४ २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको तुला राशिको राहु लग्नबाट चतुर्थ स्थानमा छ भने त्यो मानिस सुख शान्तिमा बाधा पाउनेवाला तथा मातृस्थानमा केही क्लेश र हानिको योग परेको होला। भूमि-भवनको स्थानमा केही हानि र न्यूनताको योग पाउनेवाला तथा निवासस्थानमा पनि आंशिक कमी अनुभव गर्नेवाला र सुखका साधनहरू प्राप्त गर्नका लागि अनेक गम्भीर र गुप्त युक्तिहरूद्वारा काम लिन जान्ने खालको एवं मस्तिष्क शक्तिको बलले सदैव सुखस्थानको स्थिर वृद्धिमा नै लागिरहनेवाला, अन्त्यमा सुखको केही नवीन बल प्राप्त गर्ने र निकै बाठो होला।

कु० नं० ४६६

५ ३
६ ४ २
७रा. १
८ १० १२
९ ११

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट अनेक झ्याउलाहरू र कष्टको योग पाउनेवाला

कु० नं० ४६७

५　३
६　४　२
७　१
८रा.　१०　१२
९　११

र विद्या स्थानमा पनि ठूला-ठूला बाधा सहिसकेपछि केही गुप्त युक्तिहरूद्वारा सफलता प्राप्त गर्नेवाला, केही असत्य बलको शक्तिले वाणीद्वारा विद्याको प्रभाव बढी देखाउनेवाला र वाणीको भित्र ठूलो वीरत्व शक्तिको परिचय दिने खालको, केही मादक पदार्थको बानी परेको र प्रत्येक शब्दहरू सतर्क भएर बोल्नेवाला भए पनि केही नीरसताको आभास प्रतीत गराउनेवाला र मस्तिष्क भित्र केही कष्टको योग परेको तर मन बलियो राख्न सक्ने खालको होला ।

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस अनेक गुप्त युक्तिहरूद्वारा काम लिन जान्नेवाला र न्याय-अन्यायको

कु० नं० ४६८

५　३
६　४　२
७　१
८　१०　१२
९रा.　११

वास्ता नराख्ने खालको होला । शत्रु पक्षको सम्बन्धमा धेरै गुप्त र बढी संकीर्ण खालको चाल चल्न जान्ने र मावली पक्षमा हानि पाउनेवाला, शत्रु र चिन्ता बढेपछि आफ्नू गुप्त युक्तिहरूको प्रयोग गरेर काम सिद्ध पार्नेवाला, प्रभावको वृद्धि गर्नका लागि अत्यन्त गुप्त शक्तिको प्रयोग गर्नेवाला, झगरा र विवादको स्थानमा केही वाद-विवादपछि सफलता पाउनेवाला, बडो होशियार मतलबी, स्वार्थी र सावधान रहने खालको होला ।

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्रीको स्थानमा केही कष्ट अनुभव गर्नेवाला तथा स्त्रीको सम्बन्धमा कहिले काहीं घोर अशान्ति र निराशाहरूको पनि योग पाउनेवाला, दैनिक व्यापारमा अनेक थरिका झ्याउलाहरू र कष्ट सहनेवाला तथा रोजगारको स्थानमा कहिले काहीं सांघातिक हानिको योग पनि पाउनेवाला एवं व्यापारको लाइनमा ठूला-ठूला अपठेरा, गुप्त युक्तिहरूले वा परिश्रमले सफलता प्राप्त गर्नेवाला, गृहस्थीको संचालन र दैनिक कामहरूमा एवं भोगादिको पक्षमा केही न्यूनताको कारणहरूले अतृप्त रहने खालको, वासनाहरूलाई अन्त्यमा पूर्तिको साधन प्राप्त गर्नेवाला, आफ्नू स्वार्थपरताले काम सिद्ध पार्ने खालको होला।

कु० नं० ४६९

५ ३
६ ४ २
७ १
८ १०रा. १२
९ ११

जुन व्यक्तिको कुम्भ राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो र महान् चातुर्यले स्वयं तत्पर रहेर काम गरेर जीवनको दिनचर्यामा शक्ति पाउनेवाला, तथा पुरातत्त्वको गहीरो वा गुप्त खोजी गरेर त्यसबाट लाभ प्राप्त गर्नेवाला, उदर वा पेटमा केही शिकायत भएको र जीवनको दिनचर्यामा केही चिन्तित रहने खालको होला। जीवनमा सहायक हुने केही पहिलो गम्भीर वस्तुको हानि पाउनेवाला, जीवनमा अनेक थरिका निराशाहरूको पछि आशाको योग पाउनेवाला, गूढ युक्तिहरूलाई झन गूढ पारेर काम सिद्ध पार्नेवाला, केही भित्री कष्टको अनुभव गर्ने खालको होला।

कु० नं० ४७०

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११रा.

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यस्थानमा ठूलो हानि र कष्टहरू पाउनेवाला, धर्मको स्थानमा वास्तविकताको न्यूनता पाएपछि पनि केही विचारहरूको भित्री निर्णयले केही सुफलको समान कामहरूमा नै धर्मको पूरा शक्ति मानेवाला, धर्मको बाहिरी नाटक राम्ररी देखाउन सक्ने खालको त्राटकी होला। भाग्यको उन्नतिका लागि गुप्त चातुर्यका ओजस्वी प्रयोग गर्न जान्नेवाला। अनेकानेक निराशाहरू पछि अन्त्यमा आशाको बलियो आधार पाउनेवाला, भाग्यबाट पनि आफ्नू युक्तिहरूको बलमा बढी लाभ पाउने बाटो उत्पन्न गर्न जान्ने खालको होला।

कु० नं० ४७१

५ ३ ६ ४ २ ७ १ ८ १० १२ रा. ९ ११

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा कष्ट अनुभव गर्ने खालको होला तथा दैनिक व्यापार आदिमा ठूला-ठूला बाधाहरू सहनेवाला, राज-समाजको स्थानमा, महान कष्टसाध्य कर्म गरिरहेपछि र कठोर विपत्ति सहिसकेपछि मान-सम्मान प्राप्त गर्नेवाला, अनि मानोन्नति र पदोन्नतिको लागि अनेक अपठ्यारा कर्महरूको गुप्त रूपले निकै दृढता साथ आफ्नू काममा लगाउनेवाला तथा मान-प्रतिष्ठाका लागि कहिले-काहीं आर्थिक वेदनाहरूको पनि योग पाउनेवाला र मस्तिष्कको भित्री भागमा बडो शाही ढंगले योजनाहरू राख्ने र कठिन परिश्रम गर्ने खालको होला।

कु० नं० ४७२

५ ३ ६ ४ २ ७ १रा. ८ १० १२ ९ ११

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आमदानीको स्थानमा धेरै धन कमाउनेवाला तथा कहिले-काहीं सित्तैंको साधन पनि प्राप्तः गर्नेवाला र लाभको अधिकता पाउनको लागि ठूला-ठूला गहीरा युक्तिहरूको गुप्तरूपले प्रयोग गर्न जान्नेवाला र लाभ प्राप्तिको स्थानको सम्बन्धमा सदैव गहीरो स्वार्थयुक्त युक्तिहरूले विचार गर्नेवाला तथा आमदानीको स्थानमा धेरै ठूलो चातुर्य र सतर्कताले काम लिन जान्ने र आफ्नू हकभन्दा बर्ता नाफा खानेवाला तथा महान् चातुर्य भएको, प्रतापी व्यक्ति होला।

कु० नं० ४७३

५ ३ ६ ४ २रा. ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट बाहौं स्थानमा छ भने त्यो मनुष्य निकै शाही खर्च गर्नेवाला तथा खर्चको स्थानमा ठूला-ठूला गहीरा उच्च योजनाहरूले काम लिन जान्नेवाला र बडो हेलचक्राइँ र सजिलैसित खर्च चलाउन सक्नेवाला र बाहिरी अन्यान्य स्थानहरूको महान् सम्बन्ध पाउनेवाला र बाहिरी सम्बन्धहरूमा ठूला-ठूला उच्च योजनाहरूको महान् अपठेरा काइदाले र गुप्त शक्तिको बल काममा ल्याएर प्रभाव पाउनेवाला, मस्तिष्कको भित्री भागमा बाहिरी सम्बन्धहरूको ज्ञानको महान् शक्ति राख्ने खालको होला।

कु० नं० ४७४

५ ३रा. ६ ४ २ ७ १ ८ १० १२ ९ ११

# कर्क लग्नान्तर-केतुफलम्

जुन व्यक्तिको कर्कराशिको केतु लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरको सौन्दर्यमा न्यूनता पाउनेवाला तथा देहमा दुर्बलता र कष्टको योग पाउनेवाला र कहिले काहीं शरीरमा कुनै सांघातिक मृत्यु-तुल्य विपत्तिको योग पाउनेवाला तथा हृदयमा मानसिक चिन्ताको योग पाउनेवाला तथा आफ्नू मनभित्र आन्तरिक मजबूती र शक्तिको योग अनुभव गर्नेवाला र गुप्त युक्तिहरूको निस्फिक्रिसित प्रयोग गर्नेवाला र अन्त्यमा केही नाम र शक्तिको स्थिर लाभ आफूभित्र प्राप्त गर्नेवाला, भित्री साहस, हिम्मत भएको र जिद्दी स्वभावको होला।

कु० नं० ४७५

५ ३
६ ४के. २
७ १
८ १० १२
९ ११

जुन व्यक्तिको सिंह राशिका केतु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धनको ढुकुटीको स्थानमा धेरै हानिहरू पाउनेवाला तथा धनको वृद्धि गर्नका लागि महान् परिश्रम गर्न सक्ने खालको होला। धनको लागि बाहुबलको भित्री शक्ति र युक्तिहरूको घोर प्रयोग गर्नेवाला, धन र कुटुम्बको स्थानमा कहिले काहीं महान् विपत्तिको घेरामा पर्नेवाला, अनि धन संग्रहमा चिन्ताको गुप्त योग पाउनेवाला, अन्त्यमा कुनै ठूलो बलको साथ धनको बाटो पाउने खालको होला।

कु० नं० ४७६

५के. ३
६ ४ २
७ १
८ १० १२
९. ११

जुन व्यक्तिको कन्या राशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू पुरूषार्थ र बाहुबलको अपार शक्ति प्राप्त गर्न सक्ने खालको होला। त्यही शक्तिको बलले महान् सफलता र उन्नति पाउनेवाला तथा धैर्यको महान् शक्तिको प्रयोग निकै गुप्त रीतले गर्न जान्नेवाला, निकै ठूलो यता-उता दौड़-धूपको शक्तिले ठूलो सफलता र साहस हिम्मत प्राप्त गर्नेवाला, आफ्नू बाहुबलको शक्तिको प्रयोग बेहिसाबसित आशायुक्त भएर सदैव गर्दै जानेवाला र आफ्नू शक्तिमा अलिकति दुर्बलता भए पनि निस्फिक्रिसित अगाडि बढ्दै जान सक्ने प्रभाव भएको होला।

कु० नं० ४७७

५ ३ ६के. ४ २ ७ १ ८ १० १२ ९ ११

जुन व्यक्तिको तुला राशिका केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुख स्थानमा र मातृस्थानमा हानि र न्यूनताको योग पाउनेवाला होला। भवन-भूमि आदिको शक्तिमा पनि धेरै न्यूनताको योग पाउनेवाला र सुख प्राप्तिका साधनहरू पाउनका लागि महान् कठोर परिश्रम र गहीरो गुप्त शक्तिको प्रयोग गर्न जान्नेवाला तथा निवास स्थानमा केही जिद्दीले र हठ्योगले गुप्त सुख अनुभव गर्नेवाला र सुखको प्रकटस्थानमा कहिले काहीं घोरसंकटको योग पाउने भए पनि महान् धैर्यको शक्तिले अन्त्यमा सुखको ठूलो मजबूती पाउनेवाला व्यक्ति होला।

कु० नं० ४७८

५ ३ ६ ४ २ ७के. १ ८ १० १२ ९ ११

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस सन्तानको सम्बन्धमा हानि र क्लेशको योग पाउनेवाला, विद्या स्थानमा गुप्त दुर्बलता र गुप्त सवलताको योग पाउनेवाला, बोल-चालमा पनि शब्दहरूको सौन्दर्यमा निकै दुर्बलता पाउनेवाला, केही झडंगे मिजासले कुरा गर्नेवाला, मस्तिष्क सम्बन्धी केही चिन्ता-फिक्रीको योग परेको व्यक्ति होला। दाजु-भाइ र दिदी-बहिनीको राम्रो सहयोग पाउनाले व्यापारमा बढी आय र ससुराली तर्फको पनि पूरा मद्दत पाउने खालको होला।

कु० नं० ४७९

५ ३ ६ ४ २ ७ १ ८के. १० १२ ९ ११

जुन व्यक्तिको धनराशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो साहस राख्नेवाला, अत्यन्त गहीरो र कठोर युक्तिहरूले काम सिद्ध पार्नेवाला, शत्रु स्थानमा प्रभावको विशेष शक्ति राख्नेवाला, जति नै ठूलो वा बलवान शत्रुलाई पनि पराजित पारेर न्यूराउने खालको र भयानक आतंक जमाउनेवाला, मावली पक्षबाट हानि पाउनेवाला, गुप्त युक्तिहरूको प्रयोग आफ्नू उन्नतिको लागि, धेरै ठूलो वेगको साथ प्रयोग गर्नेवाला, शीलको उल्लंघन गर्नेवाला, तथा स्वार्थ सिद्धिको सामुन्ने पाप-पुण्यको अलिकति पनि वास्ता नराख्नेवाला, बर्ता डरलाग्दो, बढी निर्भीक र विजयी होला।

कु० नं० ४८०

५ ३ ६ ४ २ ७ १ ८ १० १२ ९के. ११

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस आफ्नी स्त्रीको स्थानबाट कष्ट पाउनेवाला र दैनिक व्यापार भित्र अनेक झ्याउला र महान् परिश्रमको योग पाउनेवाला, अनि व्यापारको उन्नतिका लागि गुप्त परिश्रम द्वारा बाहुबलको भरमा संलग्नतापूर्वक काम गर्न जान्नेवाला, व्यापार भित्र कहिले काहीं घोर निराशाहरू पाइसक्दा पनि निरूत्साह हुन नजान्ने वाला र अन्त्यमा बडो स्थिर दृढतालाई भेट्टाउने खालको होला र इन्द्रिय भोगादिकको स्थानमा गुप्त शक्तिको महानता पाउनेवाला एवं अधिक भोग प्राप्त गर्नेवाला र एक स्त्रीद्वारा पार नपाउनेवाला, किन्तु वास्तविक स्त्री स्थानमा केही अशान्तिको योग पाएर पनि आन्तरिक धैर्यले काम लिने र लौकिक गृहस्थीको विषयमा निकै परिश्रम गर्ने खालको होला।

कु० नं० ४८१

५ ३
६ ४ २
७ १
८ १०के. १२
९ ११

जुन व्यक्तिको कुम्भराशिका केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस गूढ युक्तिहरूको कामलाई, प्राप्त बाहुबलको शक्तिले संलग्नतापूर्वक गर्नेवाला र पेट भित्र केही भित्री बीमारीको योग परेको र आयुस्थानमा अनेकानेक गहीरा खतरा पाइसकेर पनि अन्त्यमा आयुको दृढता प्राप्त गर्नेवाला र पुरातत्त्वको वर्तमान शक्तिहरूमा हानि पाउनेवाला र भविष्यको शक्ति पाउनेवाला, जीवनको दिनचर्यालाई निस्फिक्रिसित व्यतीत गर्नाका लागि महान् परिश्रम गरी-गरीकन अन्त्यमा कुनै स्थिर शक्ति भेट्टाउने खालको होला। आफ्नू दिनचर्या भित्र यौटा विचित्र र दुर्बल आनन्दको योग प्राप्त गर्ने खालको व्यक्ति होला।

कु० नं० ४८२

५ ३
६ ४ २
७ १
८ १० १२
९ ११के.

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको स्थानमा ठूला-ठूला कष्ट सहन सक्नेवाला र भाग्योन्नतिमा अनेक बाधाहरू पाउनेवाला, भाग्यस्थानमा कहिले काहीं घोर निराशाहरू पाएपछि पनि अन्त्यमा भाग्यको दृढता सम्बन्धी बाटो परिश्रमकै शक्तिले फेला-पार्नेवाला र धर्मको स्थानमा वास्तविक हानिको योग पाउनेवाला र कुनै प्रकालले कोही उग्र तामसी धर्मको पालन गर्नेवाला र आफ्नू भाग्यको वृद्धि गर्नका लागि धर्मको हानि पनि सहन गर्ने खालको होला। अनि भाग्योन्नतिको स्थानमा गुप्त बाहुबलको शक्तिद्वारा र गुप्त मन्त्रणाहरू द्वारा आफ्नू काम सिद्ध पार्न जान्नेवाला तथा देखाउनको लागि धर्मज्ञ बन्ने खालको व्यक्ति होला।

कु० नं० ४८३

५ ३ ६ ४ २ ७ १ ८ १० १२ के. ९ ११

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही हानिको योग परेको होला। पिता स्थानबाट केही छुट्टिने खालको र केही कष्ट अनुभव गर्ने खालको होला। व्यापार आदि उन्नतिका स्थानमा ठूला-ठूला बाधाहरू र झ्याउलाहरू सहन सक्ने र राज–समाजमा मान-सम्मानको उन्नतिका लागि महान कठोर परिश्रम र गुप्त शक्तिको आधारमा गर्नेवाला र मान इज्जत, सम्मानको स्थानमा, कहिले काहीं घोर अन्धकार पाए पनि गुप्त धैर्यको शक्तिद्वारा काम सिद्ध पार्न जान्नेवाला र अन्त्यमा कुनै बलियो योगलाई प्राप्त गरेर केही आन्तरिक निस्फिक्रि पाउने र कठिन कर्मेष्ठी होला।

कु० नं० ४८४

५ ३ ६ ४ २ ७ १के. ८ १० १२ ९ ११

जुन व्यक्तिको वृष राशिका केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस धेरै आमदानी प्राप्त गर्नेवाला र लाभ-हानिको स्थान मार्गमा,

कु० नं० ४८५

५ ३
६ ४ २के.
७ १
८ १० १२
९ ११

लाभको बढी वृद्धि गर्नका लागि गुप्त बाहुबलको शक्तिको महान् प्रयोग र महान् परिश्रम गर्नेवाला, लाभको स्थानमा गुप्त चातुर्यको योगद्वारा तथा बढी दृढतापूर्वक आफ्नू स्वार्थसिद्धि गर्नेवाला तथा सदैव स्वार्थयुक्त विचार गरिरहने हुनाले कुनै पनि लेन-देन भित्र केही कटु प्रयोग गर्नेवाला, केही आफ्नू हकभन्दा बढी नाफा खानेवाला, तैपनि आमदानीको सम्बन्धमा केही कमी अनुभव गर्नेवाला, ठूलो प्रयत्नशील, उद्योगी व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस व्ययको स्थानमा महान् कठिनाई र अशान्तिको योग पाउनेवाला,

कु० नं० ४८६

५ ३के.
६ ४ २
७ १
८ १० १२
९ ११

खर्चको स्थानमा कहिले काहीं घोर संकटकालको योग पाउनेवाला र बाहिरी अन्यान्य स्थानहरूको सम्बन्धमा निकै मुश्किल र कष्टहरू सहनेवाला र बाहिरी सम्बन्धमा वा खर्चको सम्बन्धमा महान् कष्टसाध्य कर्म गर्न अधिसर्नेवाला र ठूला-ठूला मुश्किलहरूबाट संकीर्ण गुप्त शक्तिको बलले, खर्च संचालन शक्ति प्राप्त गर्नेवाला र व्ययको स्थानमा केही अनुचित रीतिको पनि प्रयोग गर्न नडराउने तथा लघु धैर्यवाला पारिवारिक सहयोग प्राप्त गर्ने खालको व्यक्ति होला।

# सिंह लग्न हुनेहरूको-भविष्यका तारीखहरू

सन् १९९७ को वर्षमा गुरू षष्ठ स्थानमा नीच चल्नेछन् यसै निम्ति जीवनमा वा मस्तिष्कमा अनेक थरिका झ्याउलाहरू प्रायः बनिरहने छन्।

कु० नं० ४८७

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

ता० २८/१/९७ देखि समय कमजोर रहने छ। ता० १४/४/९७ देखि भाग्यको उन्नति हुने समय आउने छ। अनि ता० १५/७/९७ सम्म सफलता र लाभ बनिरहला। त्यसपछि फेरि कष्ट आउला। बढी व्यय रहने छ। ३/९/९७ देखि सुख र सफलता चल्ने छ। ३१/१२/९७ सम्म प्रायः भाग्यको उत्तम समय चलिरहने छ।

सन् १९९८ को वर्षमा ता० २/१/९८ देखि बुद्धि र विद्याबाट सफलता एवं लाभ रहने छ। ता० २१/१/९८ देखि उन्नतिमा बाधा पर्नेछ।

कु० नं० ४८८

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

ता० ९/२/९८ देखि समय राम्रो रहने छ। ता० २५/२/९८ देखि धनको पक्ष निर्बल रहने छ। ता० ४/५/९८ देखि भाग्यको उत्तम समय आरम्भ हुनेछ। ता० ११/६/९८ देखि समय बढी व्ययदायक र केही कष्टदायक पनि रहने छ। ता० २७/८/९८ बाट समय प्रभावशाली आरम्भ हुनेछ। ता० ३०/१२/९८ सम्म प्रायः सुख सफलता प्राप्त होला।

# सिंह लग्नमा- सुनौला तारीखहरू

सन् १९९९ को वर्षमा ता० १/१/१९९९ बाट समय केही ठीक रहने छ। ता० १४/१/९९ बाट केही दुर्बल समय रहने छ। ता० १४/२/९९ देखि गृहस्थी र व्यापारमा सफलता प्राप्त होला। ता० ९/४/९९ बाट धनको पक्ष राम्रो रहने छैन। ता० १२/५/९९ देखि ता० १६/६/९९ सम्ममा भाग्य र लाभको राम्रो उन्नति रहने छ, पछि भाग्य केही कमजोर होला। ता० १९/८/९९ देखि भाग्य सप्रदै जानेछ, मान प्रभाव बढ्ने छ। र ता० ३१/१२/९९ सम्ममा भाग्यमा सुख सफलता चल्दै रहला, उन्नति भइरहने छ।

कु० नं० ४८९

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

सन् २००० को वर्षमा ता० ६/१/२००० बाट समय केही कमजोर चल्नेछ। ता० २८/१/२००० देखि भाग्यमा सुख र सफलता रहने छ। ता० १/४/२००० बाट धनको पक्ष अलि दुर्बल रहने छ। ता० १९/४/२००० देखि भाग्यको सफलता चल्ने छ। ता० १५/७/२००० सम्ममा प्रायः भाग्य र लाभको उन्नति रहने छ। त्यसपछि समय दुर्बल र बढी खर्च हुने खालको चल्नेछ। ता०१८/८/२००० बाट समय प्रभावशाली रहने छ। ता० १/१०/२००० बाट समय उन्नतिदायक रहने छ। ता० १८/१०/२००० बाट केही कष्टको समय रहला। ता० १७/११/२००० देखि ३०/१२/२००० सम्ममा भाग्यको सफलता उत्तम प्राप्त हुनेछ।

कु० नं० ४९०

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

सन् २००१ को वर्षमा ता० १/१/२००१ बाट धनको पक्ष केही कष्टदायक रहने छ। ता० ७/३/२००१ बाट गृहस्थी एवं व्यापारमा पूर्ण सफलता रहने छ। ता० २५/३/२००१ बाट धनको पक्ष फेरि कमजो चल्नेछ। ता० १२/४/२००१ बाट भाग्योन्नतिको समय चल्नेछ। ता० २३/६/२००१ सम्ममा लाभ र सफलतामा वृद्धि हुनेछ। पछि खर्च बढ्नेछ। भाग्यमा कमजोरी रहने छ। ता० २/८/२००१ बाट ता० २४/१२/२००१ सम्ममा प्रायः भाग्यमा सफलता र अनेक सुख प्राप्तिका साधन जोरिने छन्।

कु० नं० ४९१

६　४
७　५　३
८　२
९　११　१
१०　१२

सन् २००२ को वर्षमा ता० १/१/२००२ बाट समय केही ठीक रहने छ। ता० ७/२/२००२ बाट समय केही कमजोर चल्नेछ। ता०२८/२/२००२ देखि समय केही कमजोर चल्नेछ। ता० १५/२/२००२ देखि समय क्रमशः सप्रन्दै जानेछ। ता०१७/३/२००२ बाट ३१/३/२००२ सम्म फेरि धनको अभाव बनिरहला। ता० १/४/२००२ देखि भाग्यको सफलता मिल्दै जानेछ। ता० २६/५/२००२ देखि ता० ८/७/२००२ सम्ममा प्रायः भाग्यको सफलता प्राप्त होला। त्यसपछि व्ययभार बढ्दै जानेछ। ता० ३/९/२००२ देखि लिएर ता० ३१/१२/२००२ सम्ममा प्रायः भाग्यको सफलता बनिरहने छ।

कु० नं० ४९२

६　४
७　५　३
८　२
९　११　१
१०　१२

सन् २००३ को वर्षमा ता० १/१/२००३ बाट बुद्धिद्वारा धनको सफलता रहने छ। ता०२/२/२००३ बाट धन लाभमा बाधा पर्न सक्तछ। ता० २१/२/२००३ बाट व्यापारमा सफलता प्राप्त हुनेछ। ता० ९/३/२००३ देखि धनको पक्ष कमजोर रहन सक्तछ। ता० २६/३/२००३ देखि धन र भाग्य दुवैको उन्नति हुँदै जानेछ। ता० ३१/५/२००३ देखि समय बिशेष खर्च बढाउने खालको रहने छ। ता० ३०/८/२००३ बाट समय सप्रन्दै जानेछ। ता० २६/९/२००३ बाट ता० २/११/२००३ सम्ममा भाग्योन्नतिको सर्वश्रेष्ठ समय रहने छ। पछि सामान्य नै रहन सक्तछ। ता० १/१२/२००३ सम्ममा भाग्य र सुख शान्तिको समय उपस्थित हुनेछ।

कु० नं० ४९३

सन् २००४ को वर्षमा- ता० ३/१/२००४ बाट समय केही राम्रो चल्नेछ। ता०२७/१/२००४ देखि समय केही कष्टदायक रहने छ। ता० २०/३/२००४ बाट समय सप्रन्दै जानेछ। ता०८/५/२००४ देखि भाग्यमा उन्नतिको बल बढ्ने छ। ता० ९/७/२००४बाट समय फेरि राम्रो आउने छ। ता०२/९/२००४ देखि समय भाग्योन्नतिको र लाभदायक रहने छ। ता० ४/११/२००४ बाट फेरि भाग्य केही धनाभावको रहने छ। ता०२२/१२/२००४ देखि ३१/१२/२००४ सम्ममा भाग्यको उत्तम सफलता रहने छ।

कु० नं० ४९४

# सिंह लग्न हुनेहरूको-सुनौला तारीख

सन् २००५ को वर्षमा- ता० १/१/२००५ देखि बराबर भाग्योन्नतिको समय रहने छ। ता० १३/४/२००५ बाट भाग्यको समय अलि कष्टदायक रहने छ। ता० १३/६/२००५ देखि फेरि भाग्यको उन्नति र सुखदायक समय रहने छ तापनि धनको खर्च बर्ता नै रहने छ। ता० १४/७/२००५ देखि धनको पक्ष सप्रन्दै जानेछ। ता० ५/८/२००५ बाट ता० १६/९/२००५ सम्म धनको खर्च बढ्दै जानेछ। ता० १७/९/२००५ बाट भाग्यको प्रायः उन्नति रहने छ। ता० ११/१०/२००५ बाट केही कष्टको स्थिति आउने छ। ता० ५/११/२००५ बाट ता० ३१/१२/२००५ सम्ममा भाग्य राम्ररी सप्रने छ।

कु० नं० ४९५

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

सन् २००६ को वर्षमा- प्रथम साता दिन सबै ठीक रहला। परन्तु ता० १०/१/२००६ देखि भाग्यको उन्नतिमा अनेक बाधा आउला। ता० ११/३/२००६ देखि भाग्यको उन्नति हुँदै जानेछ। ता०२३/४/२००६ बाट प्रायः भाग्यको सफलता स्पष्ट देखिने छ। ता० १६/५/२००६ बाट भाग्य र धनलाभ दुवैको स्थिति उत्तम रहने छ। ता० ३१/७/२००६ देखि धनको खर्च बढ्दै जानेछ। ता०१७/८/२००६ बाट ता० २३/९/२००६ सम्म भाग्यको सफलता बनिरहला। अगाडि केही कष्टको स्थिति आउन सक्दछ। ता० २४/११/२००६ देखि भाग्योन्नति र सुख-शान्ति रहने छ।

कु० नं० ४९६

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

सन् २००७ ई० को वर्षमा- ता० ३/१/२००७ बाट धनको पक्ष कष्टदायक र दुर्बल रहला। ता० ११/३/२००७ बाट ता० ३०/३/२००७ सम्म धन र व्यापारमा पूर्ण सफलता रहने छ। त्यसपछि धनको पक्ष कष्टकर रहने छ। ता० १०/४/२००७ बाट भाग्यमा सफलता रहने छ। ता० १३/५/२००७ देखि समय फेरि कष्टकर रहने छ। ता० १५/८/२००७ देखि भाग्यको सफलता स्पष्ट थाहा हुनेछ। ता०१२/१०/२००७ देखि घरेलू सुखका विशेष साधन जोरिनन्। ता० २७/१२/२००७ सम्म भाग्य र धन सन्तानको सफलता उपलब्ध रहने छ।

कु० नं० ४९७

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

सन् २००८ को वर्षमा ता० १/१/२००८ बाट भाग्यमा दुर्बलता रहने छ। ता० ४/३/२००८ बाट भाग्यको उन्नति हुँदै जानेछ। ता० २१/३/२००८ देख दुर्भाग्यको आगमन हुन सक्त छ। ता० २५/४/२००८ देखि फेरि भाग्यको उन्नति हुन थाल्नेछ। ता० ९/६/२००८ देखि सौभाग्य र मान प्रभावको विशेष उन्नति रहने छ। ता० १५/७/२००८ बाट हानि लाभ दुवै साथसाथै चल्नेछ। ता० २९/७/२००८ बाट धन-मानमा वृद्धि चल्नेछ। ता० १/९/२००८ देखि भाग्यको निकै दुर्बलता देखापर्ने छ। ता० १८/११/२००८ बाट ता० ३१/१२/२००८ सम्ममा भाग्य र धनको सफलता रहने छ।

कु० नं० ४९८

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

# सिंह लग्न हुनेहरूको प्रतिकूल समय-ज्ञान

कु० नं० ४९९

| | | | |
|---|---|---|---|
| ६ | | ४ | |
| ७ | ५ | ३ | |
| ८ | | २ | |
| ९ | ११ | १ | |
| १० | | १२ | |

(सदैव कालको निम्ति)

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चांगमा आउनन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा प्रतिकूल समय रहने छ।

**सू०**- कर्क, तुला, मकर र मीन।
**चं०**- कन्या, वृश्चिक, मकर, मीन र सिंह।
**मं०**- कर्क र मीन।
**बु०**- कर्क, मकर र मीन।
**गु०**- कर्क, मकर र कन्या।
**शु०**- कर्क, कन्या, मकर र मीन।
**श०**- कर्क, कन्या, मकर, मीन र मेष।
**राहु**- सिंह, कन्या, वृश्चिक, धन, कुम्भ, मीन र वृष।
**केतु**- सिंह, कन्या, वृश्चिक, कुम्भ, मीन, वृष र मिथुन।

***नोट***- कहिले काहीं जब कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब त्यो ग्रह कमजोर फल दिने खालको हुन्छ। यसको अतिरिक्त सालाना फलादेशको ज्ञान गर्नका लागि, शनि, गुरू, राहु र केतु- यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र महीनाको फलादेश जान्नका लागि सूर्य,मंगल, बुध र शुक्र यी चार ग्रहबाट हेर्नुपर्दछ र प्रतिदिनको फलादेश जान्न चन्द्रमाबाट हेर्नुपर्दछ।

# सिंह लग्न हुनेहरूको-अनुकूल समयको ज्ञान

(सदैव कालको निम्ति)

कु० नं० ५००

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२

तल लेखिएका ग्रह जब-जब यी राशिहरूमा पञ्चागंमा आउने छन् तब-तब ती वर्षहरू, महीनाहरू र दिनहरूमा उन्नतिदायक समय विद्यमान रहने छ।

---

सू०- सिंह, कन्या, वृश्चिक, धन, कुम्भ, मेष, वृष र मिथुन।
चं०- कर्क, तुला र मिथुन।
मं०- मिथुन, सिंह, कन्या, तुला, वृश्चिक, धन, कुम्भ, मेष र वृष।
बु०- मिथुन, सिह, कन्या, तुला, वृश्चिक, धन, कुम्भ, मेष र वृष।
गु०- सिंह, तुला, वृश्चिक, धन, मीन, मेष, वृष र मिथुन।
शु०- मिथुन, सिंह, तुला, वृश्चिक, धन, कुम्भ, मेष र वृष।
श०- मिथुन, सिंह, तुला, वृश्चिक, धन, कुम्भ र वृष।
राहु- मिथुन, तुला, मकर, कर्क, र मेष।
केतु- तुला, धन, मकर, कर्क र मेष।

---

*नोट-* सालाना फलादेशको ज्ञान गर्नका लागि शनि, गुरू, राहु र केतु यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र महीनाको फलादेश जान्नका लागि सूर्य,बुध, शुक्र र मंगल- यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। प्रतिदिनको फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ।

# सिंह लग्नान्तर-सूर्यफलम्

जुन व्यक्तिको सिंह राशिका सूर्य लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस निकै ठूलो प्रतापको शक्ति राख्ने खालको होला। केही प्रसिद्धि प्राप्त

कु० नं० ५०१

६ ४
७ ५सू. ३
८ २
९ ११ १
१० १२

गर्नेवाला, शरीरमा लमाई र गौरवको योग पाउनेवाला, धेरै ठूलो अभिमान र क्रोध राख्नेवाला, स्त्री स्थानमा केही न्यूनता र केही नीरसताको योग पाउनेवाला, दैनिक व्यापारको बाटोलाई हेय दृष्टिले देर्नेवाला, उत्सुकता रहित भएर नै गृहस्थीको कार्य र दैनिक व्यापारको संचालन गर्ने खालको होला। आफ्नो आनन्दमा अन्तरात्मामा मस्त रहनेवाला, इन्द्रिय भोगादिकको वास्तविक अभाव झैं वा विरोध झैं अनुभव गर्नेवाला किन्तु त्यसपछि पनि भोगादिको विशेष इच्छा राख्नेवाला, निकै स्वाभिमानी र देहाभिमानी, शूर-वीर होला।

कु० नं० ५०२

६सू. ४
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कन्या राशिका सूर्य लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस प्रसस्त कमाउनेवाला तथा ठूलो धनी कहिलेवाला र धन कमाउनमा नै लागि-परिरहने खालको तथा धन स्थानबाट नै प्रभावको ठूलो वृद्धि पाउनेवाला र शरीरमा केही बन्धन पाउनेवाला अथवा घेरिए झैं अनुभव गर्नेवाला र जीवनको दिनचर्यामा एक प्रकारले ठूलो धनीको झैं फाइदा बनाइ-राख्ने खालको होला र पुरातत्त्व स्थानबाट फाइदा तथा आत्मबलको शक्तिले उत्पन्न गर्नेवाला र आयुस्थानमा शक्ति उत्पन्न गर्नेवाला तथा मृत्युस्थानमा गौरव पाउनेवाला र कुटुम्बको प्रभाव राख्नेवाला तथा जीवनमा सहायक हुने कुनै पूर्व शक्तिको लाभ प्राप्त गर्ने खालको होला।

जुन व्यक्तिको तुला राशिका सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस धेरै उन्नति गर्ने खालको होला। पुराषार्थको वृद्धिमा असफलताहरूको

कु० नं० ५०३

६ ४
७सू. ५ ३
८ २
९ ११ १
१० १२

योग पाउनेवाला र भाग्यस्थानको निकै वृद्धि गर्न सक्नेवाला तथा ठूलो भाग्यवान मानिनेवाला र ईश्वरको शक्तिमा प्रशस्त विश्वास गर्नेवाला तथा धर्मलाई बढी महत्त्व दिने र भाग्यको उन्नति गर्नका लागि केही अनुचित प्रयत्न पनि गर्न अधिसर्न सक्नेवाला र भाग्यको दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही असन्तोष पाउनेवाला र आफ्नू बल पुरुषार्थमा केही न्यूनता पाउनेवाला र कहिले काहीं निराशाको योग पाउनेवाला साहसी होला।

जुन व्यक्तिको वृश्चिक राशिका सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानको ठूलो शक्ति प्राप्त गर्नेवाला र भूमि-भवनको सुख

कु० नं० ५०४

६ ४
७ ५ ३
८सू. २
९ ११ १
१० १२

पाउनेवाला र सुखपूर्वक आफ्नो स्थानमा बस्नेवाला तथा प्रभावको महान्‌शक्ति पाउनेवाला र माताका गुणहरूलाई ग्रहण गर्नेवाला र पिता स्थानमा र व्यापार स्थानमा केही नीरसताको योग पाउनेवाला र राजसमाजको सम्बन्धमा केही वैमनस्यताको साथै सम्बन्ध राख्नेवाला र विदेश यात्राको सम्बन्धमा आफू भित्र सफल मान्नेवाला र देह एवं आत्माभित्र भित्री कोमलता र प्रकटमा कटुता राख्ने खालको र निर्भय रहनेवाला तथा शान्ति मनपराउने क्रोधी होला।

जुन व्यक्तिको धनराशिका सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्याको स्थानमा विशेष शक्ति पाउनेवाला तथा हृदयमा महान् ज्ञानलाई धारण गर्नेवाला र वाणीले र शरीरले महान् प्रभाव प्राप्त गर्नेवाला र सन्तान शक्तिको महान् गौरव पाउने खालको र निकै अभिमानपूर्वक कुरा-कानी गर्नेवाला र आफ्नू बुद्धिलाई सबभन्दा उच्च वा ठूलो सिद्ध गर्नेवाला र लाभ प्राप्तिको वृद्धिको महान् विचार राख्नेवाला र धनको महान् लाभ पाउनेवाला तथा आत्मबलको शक्तिभन्दा पनि ठूला-ठूला परको गहीरो कुरा राम्ररी विचार्ने वा अध्ययन गर्ने खालको तथा निकै ठूलो सम्मान पाउनेवाला र प्रभावशाली विद्वान होला।

कु० नं० ५०५

६ ४ ७ ५ ३ ८ २ ९सू. ११ १ १० १२

जुन व्यक्तिको मकर राशिका सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रुहरूमाथि विजय प्राप्त गर्नेवाला, आफूभित्र महान प्रभावको शक्ति राख्नेवाला, केही प्रभावयुक्त परतन्त्रताको झैं योग पाउनेवाला, शरीरमा केही अत्यास झैं र नीरसता झैं योग परेको होला। बढी धन खर्च गर्नेवाला, बाहिरी अन्यान्य स्थानहरूमा प्रभाव पाउनेवाला, मावली पक्षमा केही नीरसताको योग पाउनेवाला, अनेक झ्याउलो विपत्ति एवं कष्टहरूको अलिकति पनि वास्ता नगर्नेवाला, दाउ-पेंचका शक्तिलाई निकै वेवास्तासित वा बडो बहादुरीद्वारा काममा ल्याउनेवाला र क्रोधी होला।

कु० नं० ५०६

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १०सू. १२

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू पुरुषार्थ र बाहुबलद्वारा धेरै धन कमाउनेवाला, तथा अनेकानेक प्रकारका लाभ प्राप्त गर्नेवाला तथा दाजु-भाई र दिदी-बहिनीको पनि लाभ प्राप्त गर्नेवाला र ठूलो भाग्य शक्तिद्वारा उन्नति गर्न अघिसर्नेवाला तथा धनको तागतले नै धर्म पनि गर्नेवाला र विवेकको महान् शक्तिले बढी उन्नति र यश-कीर्ति पाउनेवाला र आफ्नू पुरुषार्थमा बढी भरोसा राख्ने खालको होला। ईश्वरमा पनि खूब निष्ठ र विश्वास गर्ने तथा उत्साहको महानता पाउनेवाला र धन-वृद्धिका कारणहरूले केही बन्धन युक्त झैं हेर आफ्नू काम गरिरहने खालको बाठो व्यक्ति होला।

कु० नं० ५३९

६ ४
७बु. ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धनको संग्रह शक्तिबाट ठूलो सुख प्राप्त गर्नेवाला र सुखपूर्वक विवेक शक्तिको द्वारा आमदानी र धनागम गर्न जान्नेवाला, अनि भवन-भूमिको उपयुक्त र राम्रो शक्ति प्राप्त गर्नेवाला तर घरमा बसी-बसी सुखपूर्वक प्रत्येक आवश्यकताहरूको पूर्ति पाउनेवाला तथा ठूला-ठूला राम्रा-राम्रा वस्त्र आभूषण इत्यादिको शक्ति प्राप्त गर्नेवाला तथा धनको शक्तिबाट ठूला-ठूला व्यापार गर्नेवाला, अनि राज-समाजमा प्रसस्त इज्जत कमाउनेवाला र आमाको सम्बन्धमा सुख प्राप्तिको सम्बन्धमा केही बन्धन-युक्त लाभको योजना भेट्टाउनेवाला, र पिताको स्थानबाट धनको लाभ पाउने निकै बाठो खालको होला।

कु० नं० ५४०

६ ४
७ ५ ३
८बु. २
९ ११ १
१० १२

जुन व्यक्तिको धन राशिक बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस अनेक विद्यामा निपुण हुनेवाला तथा बुद्धिको भित्र महान् कला राख्नेवाला र विद्या बुद्धिको योगले खूब धनार्जन गर्न जान्नेवाला तथा ठूला-ठूला महान् अमूल्य लाभ पाउनेवाला र सन्तान पक्षबाट विशेष लाभ पाउनेवाला, विवेकको महान् शक्तिद्वारा ठूला-ठूला बहुमूल्य योजनाहरू बनाउनेवाला, तथा दिमागी शक्तिले सदैव स्वार्थसिद्धिमा लागि रहने खालको तथा मान र इज्जत कमाउनेवाला एवं कोमल वाणीद्वारा आफ्नो अर्थ झिक्न जान्ने खालको बाठो व्यक्ति होला।

कु० नं० ५४१

६ ४ ७ ५ ३ ८ २ ९बु. ११ १ १० १२

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस अलि परतन्त्रता युक्त कर्मको बलले धनको प्राप्ति गर्न जान्नेवाला र केही गुप्त एवं घुमाउरो विवेकको शक्तिबाट पनि धन लाभ पाउनेवाला र धन संचय गर्ने स्थानमा केही न्यूनता वा दुर्बलता पाउने खालको होला। अनि धनको सम्बन्धमा केही झ्याउलो वा कष्ट सहनेवाला र शत्रु एवं रोगको सम्बन्धमा केही धनबाट लाभ उठाउन जान्ने र खूब खर्च गर्नेवाला र शत्रु पक्षमा र विवाद झगडामा केही लाटो जस्तो कीमती योजनाहरू द्वारा काम सिद्ध पार्नेवाला र केही अन्यान्य स्थानहरूको सम्बन्धमा पनि लाभ प्राप्त गर्नेवाला निकै बाठो होला।

कु० नं० ५४२

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १०बु. १२

जुन व्यक्तिको कुम्भराशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धनको तागतबाट तथा विवेक शक्तिद्वारा दैनिक व्यापारमा धेरै ठूलो सफलता एवं वृद्धि प्राप्त गर्नेवाला र खूब धन कमाउन जान्ने खालको होला। ससुरालीबाट फाइदा पाउनेवाला र स्त्री एवं गृहस्थीको स्थानमा धनको तागतले ठूलो आनन्द पाउनेवाला किन्तु साथ-साथै केही बन्धन झैं अनुभव गर्नेवाला र मान-सम्मान पाउने तथा कुटुम्बको शक्ति प्राप्त गर्नेवाला र भोगादिकको बढी लाभ पाउने भएको तथा आमदानीको दैनिक शक्तिको खूब लाभ कमाउनेवाला धनी, बाठो र सौन्दर्ययुक्त प्रतिष्ठित व्यापारी होला।

कु० नं० ५४३

६ ४
७ ५ ३
८ २
९ ११बु. १
१० १२

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धन स्थानबाट बढी हानि पाउने खालको र महान् कष्टसाध्य कर्महरू द्वारा धनागम गर्नेवाला तथा धन प्राप्तिका लागि अनेक थरिका अन्यान्य स्थानको योगले र केही गूढातिगूढ न्यून कर्महरूको योगले काम सिद्ध पार्न जान्नेवाला र जीवनलाई सहायक हुने खालको पुरातत्त्व धन शक्तिको बढी दुर्बलता पाउनेवाला र जीवनको दिनचर्यामा र आयुस्थानमा केही अशान्तिको कारण पाउने खालको र धनको वृद्धि गर्नका लागि विवेक शक्तिको संकीर्ण क्रियाको सदैव प्रयोग गर्नेवाला महान् गुप्त युक्तिहरूको बल राख्ने भएको, केही चिन्तित जीवन बिताउने खालको व्यक्ति होला।

कु० नं० ५४४

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२बु.

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको तागतले इच्छित धन कमाउने खालको होला। अनेक थरिका आवश्यकताहरूको पूर्तिका लागि साधन स्वत: प्राप्त गर्न जान्नेवाला, धर्मको शक्तिले विवेकद्वारा पनि धन कमाउन तत्पर रहनेवाला, धनको शक्तिले धर्मको पनि पालन गर्दै रहनेवाला, धेरै यश-कीर्ति र सफलता प्राप्त गर्नेवाला, ईश्वरको भरोसा र विश्वास गर्नेवाला, दाजु-भाइ दिदी-बहिनीको पनि लाभ पाउनेवाला, धनको शक्तिले पुरूषार्थको वृद्धि गर्न जान्नेवाला, धन प्राप्त गर्नका लागि न्याय-अन्यायको विचार राख्नेवाला, पूर्वसंचित पुण्यहरूले गर्दा धेरै सफलता शक्ति प्राप्त गर्नेवाला, माननीय र इज्जतदार, निकै बाठो व्यक्ति होला।

कु० नं० ५४५

६ ४ ७ ५ ३ ८ २ ९ ११ १बु. १० १२

जुन व्यक्तिको वृष राशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानबाट इच्छित धनागम गर्नेवाला, रोजगार व्यापार आदिबाट विवेक शक्तिद्वारा खूब धन कमाउनेवाला, धनको तागतले व्यापारको वृद्धि गर्नेवाला, राज-समाजमा ठूलो इज्जत पाउनेवाला तथा पिता स्थानको कारबारमा एवं धनोन्नतिको पक्षमा केही बन्धनयुक्त एवं सम्मानयुक्त काम गर्न जान्नेवाला तथा मातृपक्षमा लाभ प्राप्त गर्नेवाला र भूमि-भवनको शक्ति प्राप्त गर्नेवाला र धनको तागतले अनेक थरिका सुखका साधन प्राप्त गर्नेवाला तथा अनेक प्रकारका ऐश्वर्य युक्त पदार्थ प्राप्त गर्ने खालको प्रतिष्ठित व्यक्ति होला।

कु० नं० ५४६

६ ४ ७ ५ ३ ८ २बु. ९ ११ १ १० १२

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस महान् लाभ प्राप्त गर्नेवाला र खूब इच्छित धन कमाउनेवाला। आमदानीको स्थानमा केही गौरवयुक्त बन्धनझैं अनुभव गर्नेवाला र विवेकको महान् शक्तिद्वारा नाना थरिका लाभ प्राप्त गर्नेवाला र अनेक प्रकारका आवश्यकताहरूको आपूर्ति स्वतः प्राप्त गरिलिनेवाला र सन्तान पक्षबाट पनि लाभ प्राप्त गर्नेवाला तथा विद्याको स्थानमा धेरै थरि कला तथा धन कमाउने ठूलो शक्ति प्राप्त गर्नेवाला र नवीन लाभको सम्बन्धमा निकै ठूलो र अमूल्य कुरा बोल्न जान्नेवाला, बढी चातुर्यको प्रशंसा गर्नेवाला र ठूलो इज्जतदार धनवान व्यक्ति होला।

कु० नं० ५४७

६ ४ ७ ५ ३बु. ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको कर्क राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै धन खर्च गर्ने खालको र धन स्थानको दुर्बलता एवं हानिको योग पाउनेवाला र बाहिरी अन्य स्थानहरूको योगद्वारा धन प्राप्तिको साधन पाउनेवाला, र खर्चका योगहरूले पनि धन प्राप्तिका साधन उपलब्ध गराउने खालको होला। धन संग्रहलाई महत्व नदिएर धनको खर्च द्वारा नै धनाढ्यको योग प्राप्त गर्नेवाला र विवेकको महान् शक्तिबाट खर्चको संचालन शक्ति प्राप्त गर्नेवाला, शत्रु र रोग एवं अनेक झ्याउलाहरू हटाउनमा पनि मनको सहायताले काम सिद्ध पार्नेवाला, धनको ढुकुटीमा अभाव पाउनाले केही कष्ट अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० ५४८

६ ४बु. ७ ५ ३ ८ २ ९ ११ १ १० १२

# सिंह लग्नान्तर- गुरुफलम्

जुन व्यक्तिको सिंह राशिको गुरु लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आयुको वृद्धि पाउनेवाला र धेरै थरि विद्या ग्रहण गर्नेवाला, जीवनलाई सहायक हुने कुनै पुरातत्त्व शक्तिको लाभ हृदयको बलले प्राप्त गर्नेवाला, सन्तान शक्तिको लाभ पाउनेवाला, जीवनको दिनचर्यालाई निकै ठूलो धनी जस्तै प्रभाव देखाएर व्यतीत गर्नेवाला, अन्तर ज्ञानको तर्फ पनि निकै ठूलो जान्ने झैं कुरा-कानी गर्नेवाला, भाग्यमानी कहिने र शरीर भित्र निकै प्रभाव वृद्धि र सौन्दर्यको केही न्यूनता पाउने खालको र केही भित्री गूढ युक्तिहरूको सम्मिश्रण गरेर महान् पाण्डित्यको शक्ति दर्शाउने, गृहस्थिक वातावरणमा नीरसता पाउने होला।

कु० नं० ५४९

६ ४
७ ५गु. ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कन्याराशिको गुरु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस निकै ठूलो धनीको जस्तै जीवन-यापन गरेर समय व्यतीत गरिरहने खालको होला। धनको ढुकुटीमा केही हानि र केही न्यूनता पाउनेवाला, जीवनको दिनचर्यामा केही बन्धनयुक्त रहेर उन्नति र सम्मानको वृद्धि गर्नमा ठूलो प्रयत्न गर्नेवाला, पिताको स्थानमा र सन्तानको सम्बन्धमा केही झ्याउलो वा कष्ट अनुभव गर्नेवाला, संग्रह गर्ने र जीवनमा सहायक हुने खालको केही पहिलो र गम्भीर वस्तुको लाभ प्राप्त गर्नेवाला, धनको वृद्धि गर्नमा प्राण-पणले लागिरहने र लामु आयु पाउने खालको होला।

कु० नं० ५५०

६गु. ४
७ ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको तुला गुरु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस उन्नति प्राप्त गर्नका लागि महान् प्रयत्न र निकै पुरुषार्थ गर्नेवाला र लामू आयुवाला तथा दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही क्लेशको योग प्राप्त गर्न जान्नेवाला तथा विद्या ग्रहण गर्न सक्नेवाला तथा सन्तान शक्तिको सम्बन्धमा केही नीरसता-युक्त लाभ पनि पाउनेवाला, बुद्धि र विद्याको शक्तियुक्त गुप्त र गूढ युक्तिहरू द्वारा धेरै लाभ-शक्ति प्राप्त गर्नेवाला, दैनिक व्यापारको भित्र केही अभाव झैं अनुभव गर्नेवाला, जीवनमा सहायक हुने खालका केही 'म ठूलो' भन्ने नीरसता-युक्त शक्ति प्राप्त गर्नेवाला, भाग्यवान मानिने र धैर्यवान् होला।

कु० नं० ५५१

६ ४
७गु. ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको वृश्चिक राशिको गुरु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यालाई धेरै ठूलो सुखपूर्वक व्यतीत गर्नेवाला। जीवनलाई सहायक हुने खालको केही पूर्ण गम्भीर वस्तुको लाभको योग पाएर सुखी हुनेवाला, लामू आयु पाउनेवाला तथा केही मातृस्थानको सुखमा हानि पाउनेवाला, अन्य शहरहरूको योगले शक्ति र सुख प्राप्त गर्नेवाला र केही न्यूनताका साथै सन्तान-शक्ति प्राप्त गर्नेवाला र गूढ विद्याको महान् शक्ति प्राप्त गरेर शक्तिभन्दा बढी खर्च गर्नेवाला तथा बाहिरी स्थानहरूको सम्पर्कमा निकै ठूलो प्रभाव पार्नेवाला, स्थानीय सुखमा विघ्न-बाधा भए पनि आनन्दले समय बिताउने खालको होला।

कु० नं० ५५२

६ ४
७ ५ ३
८गु. २
९ ११ १
१० १२

जुन व्यक्तिको धनराशिको गुरु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो गूढ युक्तिहरूको संग्रहात्मक विद्यालाई राम्ररी जान्नेवाला तथा केही बाधाहरूले युक्त संतान सुख प्राप्त गर्नेवाला, कुराकानीमा केही अनुचित प्रयोग गरेर धन-लाभ र सम्मान प्राप्त गर्नेवाला र विद्या ग्रहण गर्नमा एवं सन्तान सुख पाउनमा मस्तिष्क भित्र केही चिन्ताको योग पाउनेवाला, पुरातत्त्व शक्तिको बलले केही भाग्यमानी ठानिनेवाला, लामू आयु भएको तथा समाजमा सम्मान पाउने खालको होला। जीवनमा समयलाई आनन्दले काट्नेवाला तथा दिमागमा अनेक योजनाहरू पालेर राख्न जान्नेवाला, सदैव पुरातत्त्व शैलीले कुराकानी गर्ने खालको होला।

कु० नं० ५५३

६ ४ ७ ५ ३ ८ २ ९गु. ११ १ १० १२

जुन व्यक्तिको मकर राशिको गुरू लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यामा भयंकर अशान्ति र बाधा झैं अनुभव गर्ने खालको तथा सन्तान कष्ट सहन सक्ने भएको र मस्तिष्क थाक्ने गरी गर्नुपर्ने काम परसारेर जीवनको निर्वाह शक्ति प्राप्त गरेर धनको वृद्धि गर्नमा विशेष प्रयत्न गर्नेवाला तथा बढी भेदपूर्ण कुरा र मिथ्या कुरालाई काममा ल्याउन जान्ने, गुप्त बाठो, अशान्त हृदय, जीवनको आनन्दको योगमा प्रसन्न रहने खालको होला।

कु० नं० ५५४

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १०गु. १२

जुन व्यक्तिको कुम्भ राशिका गुरू लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै कष्ट साध्य उपायले बुद्धि र विदेशको योगद्वारा दैनिक व्यापार गर्ने खालको होला। स्त्री-स्थानमा अनेक झ्याउलो र नीरसताको योग प्राप्त गर्नेवाला, व्यापारको संचालित शक्ति प्राप्त गर्नका लागि ठूला-ठूला बाधा, कष्ट, अपठेरो, तगारो आदि भोग्नसक्नेवाला। लामू आयु प्राप्त गर्नेवाला र विद्या, सन्तानको पनि सुख प्राप्त गर्नमा अनेक कष्ट र बाधाहरू सहने खालको र हृदयको प्रापंचिक विचार शक्तिद्वारा बराबर लाभ पाइरहनेवाला र दाजु-भाइ दिदी-बहिनी र पुरुषार्थ-शक्तिको सम्बन्धमा केही नीरसता पाउनेवाला, भोगादिको अनुचित लाभ पाउने इच्छा भएको केही मानयुक्त व्यक्ति होला।

कु० नं० ५५५

६ ४
७ ५ ३
८ २
९ ११गु. १
१० १२

जुन व्यक्तिको मीन राशिको गुरू लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लामू आयु भएको र सन्तान कष्ट सहन सक्ने खालको र विद्या स्थानमा केही न्यूनता र केही अनावश्यक प्रपंचको महानता पाउनेवाला तथा मस्तिष्कमा केही परेशानी मानिरहनेवाला तथा जीवनमा सहायक हुने केही पुरातत्त्वसित सम्बन्धित र बौद्धिक शक्तिको महानता पाउनेवाला र जीवनको दिनचर्यामा आनन्दको अनुभव गर्ने खालको होला। बढी धन व्यय गर्नेवाला, मातृस्थानमा केही हानि पाउनेवाला तथा सुख स्थानमा न्यूनता वा दुर्बलता पाउने र अन्य बाहिरी स्थानहरूसित सम्बन्धमा विशेष ज्ञान र विशेष प्रभावको योग पाउने, धन-वृद्धि गर्न खोज्ने अनि केही बांगा कुरा गर्ने कूटनीतिज्ञ व्यक्ति होला।

कु० नं० ५५६

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२गु.

जुन व्यक्तिको मेष राशिको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस धेरै थरिका विद्याहरू ग्रहण गर्ने खालको तथा सन्तान-शक्ति निकै प्राप्त गर्नेवाला। अनि जीवनलाई सहायक हुने र केही पूर्वसंचित शक्तिको भाग्यबलले नै भर पाएको मात्रेवाला, भाग्यभित्र केही झ्याउलो अनुभव गर्नेवाला र केही विद्याको गुप्त शक्तिको बलले भाग्यको केही शक्तिको विकास गर्ने बाठो, मान प्राप्त गर्नेवाला, केही बांगो-टिगो फाइदाले ठूलो धार्मिक कुराहरू बोलिरहनेवाला र दूरदर्शिताको शक्ति पाउनेवाला, यश प्राप्तिमा केही न्यूनता पाउनेवाला, जीवनको समय निकै भाग्यमानी र ठूलो बुद्धिमानीले व्यतीत गर्ने खालको व्यक्ति होला।

कु० नं० ५५७

| | | | |
|---|---|---|---|
| | ६ | ४ | |
| ७ | ५ | | ३ |
| | ८ | २ | |
| ९ | ११ | | १गु. |
| | १० | १२ | |

जुन व्यक्तिको वृष राशिको गुरु लग्नबाट दसम स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही न्यूनताको योग पाउनेवाला र जीवनको पूर्ण समय चातुर्य र महान् गुप्त वा कूटनीतिले काम सिद्ध पार्न जान्नेवाला र राज-समाजमा सम्मान पाउनेवाला र त्यो सम्मानका लागि निकै परिश्रम गर्नेवाला अनि केही बांगा-टिगा युक्तिले कुरा गर्नेवाला, आयुको शक्ति पाउनेवाला तथा धन-वृद्धिका लागि ठूलो प्रयत्न गर्नेवाला, मातृस्थान र सुख स्थानमा केही प्रभाव पाउने र उन्नतिको निम्ति कष्टसाध्य उपायहरू प्रयोग गर्ने तथा हृदयको शक्ति काममा ल्याउन जान्ने, स्वाभिमानी र कार्य-कुशल होला।

कु० नं० ५५८

| | | | |
|---|---|---|---|
| | ६ | ४ | |
| ७ | ५ | | ३ |
| | ८ | २गु. | |
| ९ | ११ | | १ |
| | १० | १२ | |

जुन व्यक्तिको मिथुन राशिको गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस शत्रुद्वारा वृद्धि पाउने र विद्या प्राप्त गर्ने तथा सन्तानबाट शक्ति प्राप्त गर्ने खालको होला। जीवनको सारा समय प्रसन्नतापूर्वक बिताउनेवाला, अनि जीवनलाई सहायक हुने किसिमको केही पूर्व संचित शक्ति वा बुद्धिबाट लाभका युक्तिहरू द्वारा निकै धनको लाभ प्राप्त गर्नेवाला तर लाभको प्रकट स्थानमा केही विघ्न-बाधाको योग पाउनेवाला र स्त्री एवं गृहस्थीका दैनिक कार्यहरूमा अनेक असुविधाहरूको योग पाउने खालको होला। दाजु-भाइ र दिदी-बहिनी वा पुरुषार्थ शक्तिको स्थानमा पनि केही न्यूनता पाउने खालको होला।

कु० नं० ५५९

६ ४
७ ५ ३गु.
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कर्क राशिका गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्नेवाला र अलिकति विद्या एवं अलिकति सन्तान वाला र ठूलो चातुर्यले आफ्नू कुरा बुझाउन जान्ने र मावली पक्षबाट केही हानि पाउनेवाला र लामू आयु पाउने खालको होला। जीवनको दिनचर्यामा केही बाहिरी स्थानहरूको गौरव र बाहिरी स्थानहरूको ज्ञान प्राप्त गर्नेवाला र सन्तान पक्षमा र हृदय भित्र केही दुःख सुखको सम्मिश्रण योग प्राप्त गर्नेवाला र सुख स्थानमा केही हानि पाउनेवाला र जीवनलाई सहायक हुने केही पहिलो र गम्भीर वस्तुको लाभ पाउने र अन्य स्थानबाट विशेषरूपमा सुख पाउने होला।

कु० नं० ५६०

६ ४गु.
७ ५ ३
८ २
९ ११ १
१० १२

# सिंह लग्नान्तर-शुक्रफलम्

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थले धेरै काम गर्नेवाला तथा मान-सम्मान प्राप्त गर्नेवाला र दाजु-भाइ वा पिताको शक्ति प्राप्त गरेर पनि त्यसमा केही नीरसताको आभास पाउनेवाला तथा व्यापार वा रोजगारको वृद्धि गर्नेवाला र स्त्री स्थानमा मान र शक्ति प्राप्त गर्नेवाला। भोगादिकको विशेष शक्ति पाउनेवाला र राजसमाजबाट मान प्राप्त गर्नका लागि केही बढी परिश्रम गर्ने र अनेक चातुर्यद्वारा काम सिद्ध पार्नेवाला, आफ्नो शरीरमा केही 'म ठूलो' भन्ने शोभाको ध्यान राख्ने कर्मिष्ठ व्यक्ति होला।

कु० नं० ५६१

६ ४ ७ ५शु. ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको कन्या राशिका शुक्र लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धनको कोष स्थानमा केही न्यूनता अथवा दुर्बलता पाउने खालको होला। दाजु-भाइ र पिताको स्थान सम्बन्धमा न्यूनता पाउनेवाला तथा बाहुबलको शक्तिमा पनि कमजोरी वा न्यूनता पाउनेवाला तथा कुटुम्ब स्थानमा पनि न्यूनताको अनुभव गर्ने खालको होला। जीवनको दिनचर्यामा केही विशेष शक्तिको गौरव अनुभव गर्नेवाला र पुरातत्त्व स्थानको केही बढी शक्ति प्राप्त गर्नेवाला र आयुस्थानको वृद्धि-योग पाउनेवाला र राज-समाजको शान्तिमा न्यूनता वा दुर्बलता पाउने खालको, मान-सम्मान र इज्जतमा पनि केही न्यूनताको योग पाउनेवाला, तथा धनको वृद्धिका लागि गुप्त शक्तिको प्रयोग गुप्त चातुर्यद्वारा गर्ने खालको होला।

कु० नं० ५६२

६शु. ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस धेरै ठूलो उद्योग व्यापार गर्नेवाला र दाजु-भाइ दिदी-बहिनी, पिता आदिको शक्ति पाउनेवाला तथा राजको सम्बन्धबाट महान शक्ति वा प्रभाव र मान-सम्मान प्राप्त गर्नेवाला तथा आफ्नू बाहुबलको शक्ति द्वारा भाग्यको वृद्धि गरेर भाग्यमानी कहिनेवाला तथा ठूलो यश प्राप्त गर्नेवाला र धर्म-कर्म गर्नेवाला। व्यापारादिबाट पनि उन्नति गर्नसक्नेवाला, चातुर्य शक्तिको महान् भर मान्नेवाला, तथा उन्नति प्राप्त गर्नका लागि महान् प्रयत्न गर्नेवाला तथा ठूलो उत्साही र परिश्रमी एवं साहस र हिम्मतवाला अनि कार्य-कुशल होला।

कु० नं० ५६३

६ ४ ७शु. ५ ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको वृश्चिक राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस ठूलो सुखपूर्वक ठूलो व्यापार गर्नेवाला, तथा निकै बढी मान-सम्मान र प्रतिष्ठा प्राप्त गर्नेवाला र आमा-बाबु र भाइ-बन्धुहरूको सुख प्राप्त गर्नेवाला र राज-समाजबाट ठूलो चातुर्यद्वारा बढी सुखको शक्ति प्राप्त गर्नेवाला र भवन-भूमि आदिको पनि इच्छित सुख पाउने खालको होला। सुख प्राप्तिका साधनहरूको पनि सहयोग र शक्ति पाउनेवाला र आफ्नू बल-पुरुषार्थको शक्तिबाट गौरव पाउनेवाला तथा निवास स्थानमा सुन्दरता र सजावटको योग प्राप्त गर्नेवाला। अनि आफ्नू महान् प्रभावको शक्ति संचित गरेर राख्नेवाला तथा निकै नियमित कार्य-कुशल होला।

कु० नं० ५६४

६ ४ ७ ५ ३ ८शु. २ ९ ११ १ १० १२

जुन व्यक्तिको धन राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्याको स्थानमा महानता पाउनेवाला तथा सन्तानको शक्ति प्राप्त गर्नेवाला तथा दाजु-भाइ र दिदी-बहिनी र पिता स्थानको शक्तिबाट लाभ पाउनेवाला र राजनैतिक काइदा-कानूनका कुराहरू जान्ने-बुझ्ने र मौकामा बोल्ने खालको होला। आफ्नू बुद्धिले पुरुषार्थ कर्मद्वारा महान् उन्नति र ठूलो लाभ प्राप्तिका साधन पाउनेवाला, बढी चातुर्यको कुरा निकै ठूलो प्रभावको साथ भन्नेवाला, राज-समाजबाट सम्मान र लाभ पाउनेवाला, आफ्नू मस्तिष्क भित्र निकै ठूलो गौरव मान्नेवाला, बुद्धिद्वारा प्रभाव जमाउने बन्धन आर्जन गर्ने बाठो व्यक्ति होला।

कु० नं० ५६५

६ ४
७ ५ ३
८ २
९शु. ११ १
१० १२

जुन व्यक्तिको मकर राशिका शुक्र लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस दाजु-भाइ दिदी-बहिनी र पिताको स्थानमा केही वैमनस्यताको शक्ति योग प्राप्त गर्नेवाला, मान-सम्मानको उन्नति वा पदोन्नतिको स्थानमा केही बाधा वा न्यूनता पाउनेवाला होला। मावली पक्षबाट केही शक्तिको योग पाउनेवाला तथा निकै ठूलो रूपमा व्यापार चलाउन खोज्दा अनेक विघ्न-बाधा पाउनेवाला र गुप्त युक्तिहरूको पुरुषार्थ बलद्वारा शत्रु स्थानमा प्रभाव कायम गर्ने खालको होला। उन्नति पाउनका लागि महान् परिश्रम गर्नेवाला वा केही घेराउको अनुभव गर्ने खालको व्यक्ति होला।

कु० नं० ५६६

६ ४
७ ५ ३
८ २
९ ११ १
१०शु. १२

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो दैनिक र स्थाई व्यापार वा कारबार-प्राप्त गर्नेवाला र दाजु-

कु० नं० ५६७

६ ४
७ ५ ३
८ २
९ ११शु. १
१० १२

भाइ दिदी-बहिनी र पिता स्थानको शक्तिबाट उत्तम लाभ पाउनेवाला र आफ्नू लौकिक उन्नति गर्नमा महान् शक्ति र चातुर्यको प्रयोग परिश्रम गरेर महान् सफलता पाउनेवाला, राज-समाजको सम्बन्धमा दैनिक कार्यहरूको शक्तिले मान र प्रभाव पाउनेवाला र स्त्री एवं गृहस्थीको स्थानमा ठूलो शक्ति र वैभव प्राप्त गर्ने खालको होला। भोगादिकको महान शक्ति प्राप्त गर्नेवाला र महान कार्य-कुशलता र पुरुषार्थको शक्ति पाउनेवाला, निकै साहसी र हिम्मति एवं होशियार होला।

जुन व्यक्तिको मीन राशिका शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धेरै-धेरै परसम्मको विदेश यात्रा गर्नेवाला र आफ्नू जीवनमा यौटा

कु० नं० ५६८

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२शु.

विशेष किसिमको गहीरो आनन्दको गुप्त योग प्राप्त गर्नेवाला र दाजु-भाइ दिदी-बहिनी र पिताको सम्बन्धमा केही विचित्र प्रकारको दुःख-सुख प्राप्त गर्ने खालको होला र आयुको वृद्धि पाउनेवाला तथा धनको कोषस्थानमा केही न्यूनता उदासीनता प्राप्त गर्नेवाला, कुटुम्बको असहयोग पाउनेवाला र जीवनमा सहायक हुने कुनै पुरातत्त्वको शक्तिबाट लाभ भेट्टाउने योग परेको होला। कुनै महान् गूढ कर्मको शक्तिबाट लाभको योग प्राप्त गर्नेवाला, कुनै ठूलो अभाव पाउने र मान प्राप्त गर्ने तथा जंगलको राजा होला।

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिबाट बल पाएर महान् सफलता र उन्नति प्राप्त गर्नेवाला तथा दाजु-भाइ र दिदी-बहिनी एवं पिता स्थानको शक्तिबाट लाभ उठाउने वाला र महान् चातुर्यको कर्मयोगद्वारा भाग्यको वृद्धि गर्नेवाला र धर्म-कर्मको योगबाट लाभ पाउनेवाला, ईश्वरीय सहायताहरूको चमत्कार र सफलताहरूबाट मान-सम्मान पाउने खालको होला। आफ्नू बाहुबलको शक्तिले महान् वृद्धि प्राप्त गर्नेवाला र निकै सज्जनताको ढंगबाट काम गर्न जान्ने बढी प्रभावशाली व्यक्ति होला।

कु० नं० ५६९

६ ४ ७ ५ ३ ८ २ ९ ११ १शु. १० १२

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट दशम स्थानमा छ भने त्यो मानिस दाजु-भाइ दिदी-बहिनी तथा पितास्थानबाट शक्तिको लाभ पाउनेवाला र राज-समाजको शक्तिबाट पनि लाभ पाउनेवाला तथा मान-प्रतिष्ठाको स्थानमा ठूलो सफलता पाउनेवाला, अनि आमाको सम्बन्धबाट शक्ति प्राप्त गर्नेवाला तथा भूमि-भवन आदिको शक्ति पनि पाउनेवाला, निकै ठूलो प्रभावशाली र उन्नति गर्नका लागि महान पुरुषार्थयुक्त कर्मको शक्ति द्वारा आफ्नू काम सिद्ध पार्न जान्ने खालको होला। चातुर्यको गहीरो शक्तिले व्यापार आदिमा ठूलो सफलता पाउनेवाला प्रसस्त गृह-सुख भोग्नेवाला निकै ठूलो उत्साह र उमंग भएको परिश्रमी र स्वाभिमानी होला।

कु० नं० ५७०

६ ४ ७ ५ ३ ८ २शु. ९ ११ १ १० १२

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू बाहुबलको शक्तिले इच्छित धन कमाउन सक्नेवाला, महान चातुर्यका कर्मयोगले निकै ठूलो सम्मान र प्रभाव पाउनेवाला, पिता र दाजु-भाइ एवं दिदी-बहिनीको शक्तिबाट ठूलो लाभ पाउनेवाला, राज-समाजबाट फाइदा प्राप्त गर्नेवाला तथा व्यापार आदिको लाभ प्राप्त गर्नेवाला, पुरुषार्थ शक्तिमा वृद्धि तथा विद्या स्थानमा ठूलो सफलता प्राप्त गर्नेवाला र सन्तान स्थानबाट शक्ति प्राप्त गर्ने खालको होला। कुरा-कानी गर्दा चातुर्यको महान् शक्तिको परिचय दिनेवाला, ठूलो लाभ पाउने भएको उत्साही र कर्मशील व्यक्ति होला।

कु० नं० ५७१

६ ४ ७ ५ ३शु. ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको कर्क राशिको शुक्र लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस धेरै बर्ता धन व्यय गर्ने तथा पिता र दाजु-भाइको स्थानमा न्यूनता वा हानिको योग पाउने खालको होला। बाहिरी अन्यान्य स्थानहरूको सम्पर्कबाट शक्ति प्राप्त गर्नेवाला, व्यापार आदिमा तथा उपस्थित परिस्थितिमा केही हानि र दुर्बलता सहनेवाला र राज-समाजको स्थानमा केही प्रभावको कमजोरी पाउनेवाला र बाहिरी स्थानमा प्रभाव पाउनेवाला, खर्च गर्न शक्तिले र चातुर्यको योगले शत्रु स्थानमा प्रभाव राख्नेवाला र बल-पुरुषार्थमा न्यूनता पाउनेवाला, लुकाएको तागतले काम सिद्ध पार्नेवाला व्यक्ति होला।

कु० नं० ५७२

६ ४शु. ७ ५ ३ ८ २ ९ ११ १ १० १२

# सिंह लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको सिंह राशिको शनि लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस आफ्नू शरीरद्धारा कठिन परिश्रम गरेर दैनिक व्यापार गर्न जान्नेवाला, गृहस्थी र स्त्रीसित सम्बन्धित मार्गमा निकै कठिनाईहरू भोगेपछि राम्रो योग र प्रभाव प्राप्त गर्ने खालको होला। शत्रु पक्षबाट पनि केही कष्टको साथ-साथ प्रभावको शक्ति पाउनेवाला र शरीर भित्र केही रोग र घेराव झैं वा केही गुप्त चिन्ता आदिको योग परेको होला। भोगादिकमा बढी कामेच्छा भएको योग पाउनेवाला र उन्नतिको मार्गमा महान पुरुषार्थ कर्मद्धारा कार्यसिद्ध पार्नेवाला, धेरै ठूलो दगुरा-दगुरको शक्तिले र युक्तिले काम बनाउन जान्ने खालको होला।

कु० नं० ५७३

६ ४ ७ ५श. ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको कन्या राशिको शनि लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको स्थानमा कतिपय बांगा-टिगा उपायहरूद्वारा दैनिक कामहरूमा केही सफलता पाउनेवाला, तथा वृद्धिको निम्ति केही बन्धनयुक्त परिश्रम गर्नेवाला र धन-स्थानमा कहिले-काहीं केही हानि पनि पाउनेवाला र लाभस्थानको वृद्धि गर्नका लागि महान् प्रयत्नशील रहनेवाला तथा मातृ-स्थानमा वा सुखस्थानमा बाधाहरू भेट्ने खालको होला। भवन-भूमि आदि निवासस्थानमा केही अशान्तिको वातावरण पाउनेवाला र स्त्री स्थानमा र दैनिक व्यापारको सम्बन्धमा र शत्रु स्थानमा केही सम्बन्धयुक्त शैलीको योगले काम सिद्ध पार्न जान्नेवाला, केही अशान्त जीवनको व्यक्ति होला।

कु० नं० ५७४

६श. ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस महान् परिश्रमी र पुरुषार्थको शक्ति प्राप्त गर्नेवाला, शत्रु स्थानमा प्रभाव शक्तिले र बाहुबलको शक्तिद्वारा विजय पाउनेवाला, मावलीबाट केही प्रभाव पाउनेवाला र आफ्नू पुरुषार्थको बलले दैनिक व्यापारको महान् शक्ति प्राप्त गर्ने खालको होला। स्त्री, गृहस्थीमा प्रभावको महान् शक्ति प्राप्त गर्नेवाला, धेरै ठूलो हिम्मत र साहसले काम लिन जान्ने भएको र सन्तान पक्षमा अशान्तिको योग पाउनेवाला र धर्म स्थानमा र भाग्य स्थानमा केही न्यूनता र उदासीनताको योग प्राप्त गर्ने वाला, व्यय स्थानमा केही अशान्ति पाउनेवाला र बाहिरी स्थानमा प्रभाव जमाउने खालको व्यक्ति होला।

कु० नं० ५७५

६ ४
७श. ५ ३
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृ स्थानमा हानि र केही क्लेशको योग पाउनेवाला र आफ्नू स्थानमा दैनिक व्यापारको योगले प्रभावको ठूलो शक्ति पाउनेवाला र शत्रुलाई थिच्न सक्ने खालको होला तापनि सुख शान्तिमा बाधाहरू पाउनेवाला र स्त्री स्थानमा अशान्ति युक्त सुखका साधन पाउनेवाला, देहको स्थानमा केही सौन्दर्यको कमी र अशान्ति पाउनेवाला र प्रभावको उन्नतिका लागि र लौकिक एवं गृहस्थीको उन्नति गर्नका लागि महान् परिश्रम र युक्तिहरूले काम लिन जान्नेवाला र रोगादिक र झ्याउलामा विजयी हुने, धैर्यवान् र हठी खालको व्यक्ति होला।

कु० नं० ५७६

६ ४
७ ५ ३
८श. २
९ ११ १
१० १२

जुन व्यक्तिको धन राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस आफ्नू बुद्धियोग द्वारा निकै संलग्नतापूर्वक दैनिक व्यापार खूब गर्नेवाला र अधिक भोगादिकको शक्ति प्राप्त गर्नेवाला, भोगादिककै अनेक थरिका योजनाहरू मस्तिष्कमा सदैव बनाइराख्ने र सन्तान पक्षमा केही चिन्ता र केही नीरसताको योग पाउनेवाला, विद्या र बुद्धिको स्थानमा केही लौकिक ज्ञान र गुप्त युक्तिहरूको व्यावहारिक शक्तिहरू प्राप्त गर्ने खालको होला। धनको वृद्धिका लागि अनेक थरिका साना-ठूला प्रयत्नमा लागिरहनेवाला र मस्तिष्कमा केही परेशानी भएको भए पनि निकै सतर्क र कार्य-कुशल एवं शत्रुपक्षलाई प्रभावित पार्न सक्ने खालको होला।

कु० नं० ५७७

६ ४
७ ५ ३
८ २
९श. ११ १
१० १२

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस स्त्री पक्षबाट सदैव झ्याउलो वा प्रभावको योग प्राप्त गर्नेवाला, इन्द्रिय भोगादिकको केही न्यूनता र केही अनुचित लाभ प्राप्त गर्नेवाला, शत्रु स्थानमा प्रभाव पाउनेवाला र दैनिक व्यापारमा कठोर परिश्रम र अनेक विघ्न-बाधा सही-सहीकन पनि प्रभाव पाउनेवाला, जीवनको दिनचर्यामा केही कष्ट र बाधा सहनेवाला र प्रभाव उत्पन्न गर्ने खालको तथा गूढ युक्तिहरूलाई आफ्नू काममा प्रयोग गर्ने, पुरुषार्थको शक्ति पाउने, बाठो र बहादुर होला।

कु० नं० ५७८

६ ४
७ ५ ३
८ २
९ ११ १
१०श. १२

जुन व्यक्तिको कुम्भ राशिको शनि सातौं स्थानमा छ भने त्यो मानिस बढी परिश्रम र युक्तिहरूद्वारा दैनिक व्यापारमा स्थिर शक्ति पाउनेवाला, इन्द्रिय भोगादिकको ठूलो शक्ति प्राप्त गर्नेवाला, स्त्री स्थानबाट केही वैमनस्यताको साथसाथै विशेष शक्ति प्राप्त गर्नेवाला, धर्ममा हानि पुऱ्याउन अधिसर्नेवाला, भाग्यस्थानमा केह न्यूनता र दुर्बलता एवं उदासीनताको योग पाउनेवाला र यशको कमी पाउने खालको होला। लौकिक र दैनिक कार्यहरू आफैं रुजू रहेर गर्नेवाला, परेशानी सहन सक्ने र शरीरमा कुनै रोगले कष्ट पाउनेवाला। मातृस्थानमा र सुख-शान्तिको स्थानमा ठूला-ठूला अनेक बाधाहरू पाउनेवाला तथा परिश्रमी, बाठो र शत्रुमाथि प्रभाव बनाइराख्ने खालको होला।

कु० नं० ५७९

६ ४
७ ५ ३
८ २
९ ११श. १
१० १२

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट विशेष हानि पाउनेवाला र दैनिक व्यापारको विषयमा अत्यन्त विघ्न-बाधा सहनेवाला र विदेश आदिको योगबाट तथा महान बांगा-बांगा युक्तिहरूबाट तथा महान् परिश्रमको योगले व्यापार र गृहस्थीको संचालन शक्ति प्राप्त गर्नेवाला र सन्तान पक्षमा पनि कष्ट सहन गर्नेवाला तथा विद्या-स्थानमा केही हानि पाउनेवाला र कुरा-कानी भित्र केही रूखो भावको र बर्ता बोल्ने शक्ति प्राप्त गर्नेवाला र लामू आयु पाउनेवाला तर आयुस्थानमा कहिले काहीं बढी निराशाहरू र जीवनको दिनचर्यामा बर्ता अशान्तिको योग पाउनेवाला र राज-समाज एवं मान उन्नतिको पक्षमा वृद्धि पाउनको लागि महान प्रयत्न गर्नेवाला र शत्रु पक्षमा बढी गुप्त चालहरूद्वारा काम लिन जाने गुप्त शक्ति भएको होला।

कु० नं० ५८०

६ ४
७ ५ ३
८ २
९ ११ १
१० १२श.

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा बढी न्यूनता मान्नेवाला र धर्मलाई केही हानि पुऱ्याएर आफ्नू प्रभावको वृद्धि पाउनेवाला र स्त्री एवं गृहस्थीको शक्तिमा केही दुर्बलता पाउनेवाला र ईश्वरको शक्तिमा विश्वासमा केही कमी पाउनेवाला, महान् पुरुषार्थ र परिश्रमको शक्तिबाट अधिक काम लिनेवाला र केही धन र लाभको पूर्ति पाउनेवाला तथा आयमा वृद्धिगर्नका लागि ठूलो प्रयत्न गर्नेवाला र अपठेरो युक्तिको शक्तिको महान् प्रयोग गर्नमा सज्जनताको आडबाट सफलता पाउनेवाला, यशमा कमी पाउनेवाला केही अशान्तप्रद होला।

कु० नं० ५८१

६ ४
७ ५ ३
८ २
९ ११ १श.
१० १२

जुन व्यक्तिको वृष राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारमा ठूलो शक्ति प्राप्त गर्नेवाला र दैनिक कार्यक्रमको योग्यता द्वारा सम्मान प्राप्त गर्नेवाला र राज-समाज वा मान-सम्मानको उन्नति स्थानमा महान् परिश्रम र महान् प्रयत्न गरेर सफलता पाउनेवाला र स्त्री भोगादिकको अपार शक्ति प्राप्त गर्नेवाला र बढी धन व्यय गर्ने ख्यालको होला। अनेक साना-ठूला युक्तिहरूको शक्तिले लौकिक कार्यहरूमा बढी उन्नति र सम्मान पाउनेवाला र दैनिक कार्यहरूको महानताद्वारा शत्रु स्थानमा प्रभाव राख्नेवाला र सुख-शान्तिमा केही बाधा कष्ट पाउनेवाला र माता-पिताको स्थानमा केही अशान्ति पाउनेवाला, निकै ठूलो परिश्रमी र कुशल व्यक्ति होला।

कु० नं० ५८२

६ ४
७ ५ ३
८ २श.
९ ११ १
१० १२

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक कार्यक्रममा र व्यापारको विषयमा धेरै धन

कु० नं० ५८३

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७ | ५ | ३श. |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

कमाउनेवाला, शरीरमा केही रोग र केही अशान्ति पाउनेवाला, धन लाभको वृद्धि गर्नका लागि केही अनधिकार प्रयत्न पनि गर्न अधिसर्ने भएको र निकै ठूलो विश्वास र युक्तिहरू द्वारा धेरै थरिको लाभ धेरै थरिका फाइदा उठाउनेवाला तथा बढी प्रभाव पाउनेवाला, स्त्री तथा भोगादिकको बर्ता लाभ पाउनेवाला र शत्रु स्थानबाट ठूलो प्रभाव पाउनेवाला तथा जीवनको दिनचर्यामा ठूलो कष्ट र झ्याउलाहरूको योग पाउनेवाला र व्यापारमा बर्ता नाफा खानेवाला र महान गूढ युक्तिहरूको प्रयोग गरेर जीवन व्यतीत गर्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको कर्क राशिको शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने खालको र स्त्री स्थानमा केही हानि पाउनेवाला

कु० नं० ५८४

| | | |
|---|---|---|
| ६ | | ४श. |
| ७ | ५ | ३ |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

खर्चको बलले शत्रु स्थानको तागतले राख्नेवाला, धनको कोषमा विशेष वृद्धि गर्नको लागि बाहिरी व्यापारको शक्ति र परिश्रमको बलले काम सिद्ध पार्न जान्नेवाला, अन्यान्य स्थानहरूको सम्बन्धमा दैनिक व्यापार र प्रभावको शक्ति प्राप्त गर्नेवाला र भाग्य एवं ईश्वरमा थोरै विश्वास राख्नेवाला, भाग्य स्थान र धर्म स्थानमा केही हानि पाउनेवाला यशमा कमी पाउने र झगडा-विवाद र रोगादिक सम्बन्धमा पनि बढी खर्च गर्ने तथा केही अशान्ति युक्त होला।

# सिंह लग्नान्तर - राहुफलम्

जुन व्यक्तिको सिंह राशिको राहु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस केही दुर्बलता र केही न्यूनता पाउनेवाला र मस्तिष्कमा केही चिन्ता र केही आंशिक शक्ति पाउनेवाला, शरीरको सौन्दर्यमा केही कमी पाउनेवाला, शरीरमा केही बर्ता थकाई अनुभव गर्नेवाला, शरीरको माथिल्लो भागमा कहिले काहीं कुनै निकै सांघातिक चोटहरूको पनि योग परेको होला। बर्ता लुकाईको शक्तिले काम लिनेवाला, केही अनधिकार लाभ पाउनेवाला, आफूभित्र कुनै स्थिर शक्ति पाउने गुप्त रूपले महान् प्रयत्न गर्नेवाला, भित्र-भित्रै केही डर-भय मान्नेवाला, निकै उच्चस्वार्थ सिद्ध पार्ने योजनाहरू तयार पार्नेवाला र प्रभावशाली होला।

कु० नं० ५८५

६ ४ ७ ५रा. ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको कोष-वृद्धि गर्नका लागि गुप्त रूपले महान् प्रयत्न गर्नेवाला, धनकै सम्बन्धद्वारा कुनै अन्य स्थानको धन पनि केही अनधिकार लाभ पाउनमा सफलता र दुःख-कष्टको सम्मिश्रण भएको योग पाउने खालको होला। कहिले काहीं धन स्थानमा केही हानिहरू पनि पाउनेवाला, धनीहरूमा गनिने खालको र धन स्थानमा केही भित्री न्यूनताको मनमा अनुभव गर्नेवाला, कुटुम्ब स्थानमा केही कमीको योग पाउनेवाला, धन प्राप्तिका लागि महान् गहीरो युक्तिहरू द्वारा गुप्त साधन र गुप्त तागत वा परिश्रम र झ्याउलाहरूले काम बनाउने र केही अशान्तिप्रद व्यक्ति होला।

कु० नं० ५८६

६रा. ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको तुला राशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो कूट युक्तिहरूको शक्ति प्राप्त गर्नेवाला, दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही विग्रह र अशान्तिको योग पाउनेवाला र धेरै ठूलो दगुरा-दगुर गर्नमा आफ्नू भित्र आत्मिक शक्तिको संचार राख्नेवाला, आफ्नू बाहुबलको स्थानमा साहस भएको होला। आफ्नू स्वार्थसिद्धि गर्ने स्थानमा दुर्बलता र शीलरहित भएर काम सिद्ध पार्नेवाला र कठिन भन्दा पनि कठिन कार्यहरू पनि पूरा गर्नका लागि ठूलो धैर्य-शक्ति राख्ने भएको होला। अपठेरो र कष्टहरूको वास्ता नगर्नेवाला, बढी गुप्त र बाठो, अन्त्यमा धनको वृद्धि पाउने खालको व्यक्ति होला।

कु० नं० ५८७

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७रा. | ५ | ३ |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस माताको र मातृस्थानको हानि या वियोगको योग पाउनेवाला र सुख प्राप्तिको लागि सबै साधनमा बढी हानि पाउनेवाला र भवन-भूमिको न्यूनता पाउनेवाला र सुख प्राप्तिका स्थानहरूमा केही अन्य व्यक्तिहरूको पनि सहयोग लिनेवाला, केही भित्री अशान्ति अनुभव गर्नेवाला, सुख प्राप्तिका लागि ठूला-ठूला र कठिन एवं गुप्त कार्यहरू गर्नेवाला, धेरै ठूला-ठूला अशान्तिहरू सहनेवाला कहिलेकाहीं घरेलू वातावरणमा घोर संकटकाल पनि सहनेवाला, अनेक कष्टहरू सहेपछि सुख प्राप्तिका साधनहरू निकै कठिनाईद्वारा प्राप्त गर्ने खालको व्यक्ति होला।

कु० नं० ५८८

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७ | ५ | ३ |
| ८रा. | | २ |
| ९ | ११ | १ |
| १० | | १२ |

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस महान असत्यको शक्तिद्वारा कुरा गरेर आफ्नूकाम सिद्ध पार्नेवाला

कु० नं० ५८९

६ ४
७ ५ ३
८ २
९रा. ११ १
१० १२

तथा सन्तान पक्षमा बढी कष्ट सहन गर्नेवाला र विद्या प्राप्तिको स्थानमा न्यूनता पाउनेवाला र केही अपठेरा र कटु कुरा बोल्नेवाला, बुद्धि भित्र धेरै थरिका गुप्त विचार राख्नेवाला र केही राम्रो प्रकारले ठीक शब्दहरूमा आफ्नू इच्छा मन्त्यब्य प्रकट गर्नमा बर्ता कष्ट, अपठेरो पाउनेवाला र कहिले मस्तिष्क भित्र मूर्च्छा जस्तै स्थितिको योग प्राप्त गर्नेवाला, अनेक थरिका सोचविचारमा गाडिइरहनेवाला, केही अशान्ति-ग्रस्त व्यक्ति होला।

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा महान् प्रभावको शक्ति राख्नेवाला तथा अपठेरा र

कु० नं० ५९०

६ ४
७ ५ ३
८ २
९ ११ १
१०रा. १२

झ्याउलाहरूलाई थिचिराख्नेवाला र महान् हिम्मतक शक्तिद्वारा आफ्नू काम सिद्ध पार्नेवाला र मावली पक्षबाट हानि पाउनेवाला, लुकेको गूढ युक्तिहरू द्वारा गुप्त चातुर्यबाट महान् स्वार्थको सिद्धि गर्न जान्ने र नरमभाव एवं शील सन्तोषको उल्लंघन गर्नेवाला तथा आफ्नू गुप्त युक्तिहरूको सफलतामा खुशी मनाउनेवाला र दुःख तथा भयको आशंकाहरूबाट मुक्त रहनेवाला, बाठो र प्रभावशाली विजयी व्यक्ति होला।

जुन व्यक्तिको कुम्भ राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट अशान्तिको योग पाउनेवाला, दैनिक व्यापार भित्र

कु० नं० ५९१

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७ | ५ | ३ |
| ८ | | २ |
| ९ | ११रा. | १ |
| १० | | १२ |

पनि ठूला-ठूला कष्ट परेशानीहरू सहनेवाला, भोगादिक इन्द्रिय सम्बन्धी केही विकारको योग पाउनेवाला र भोगादिको पक्षमा केही अतृप्त वासनाहरूलाई तृप्त पार्ने इच्छा राख्नेवाला, केही भोगादिकको स्थानमा निकै ठूलो गुप्त योजनाहरूद्वारा काम सिद्ध पार्न जान्नेवाला, व्यापारको पंक्तिमा बडो गुप्त युक्तिहरूद्वारा र कष्टहरूबाट काम पूर्ण पार्नेवाला, गृहस्थी भित्र कहिले-काहीं महान संकट आइलाग्दा सहजै निराकरण गर्नेवाला, अन्त्यमा केही दरिलो भएर दैनिक व्यवस्थामा सफल हुने खालको व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यामा निकै अल्झो मान्नेवाला, पेटभित्र केही

कु० नं० ५९२

| | | |
|---|---|---|
| ६ | | ४ |
| ७ | ५ | ३ |
| ८ | | २ |
| ९ | ११ | १ |
| १० | | १२रा. |

भित्री विकार भएको अनुमान गर्नेवाला तथा जीवनलाई सहायक हुने खालका केही पहिलो र स्थाई वस्तुको आंशिक हानि पाउनेवाला र महान् गुप्त योजनाहरूद्वारा र बढी कष्टसाध्य युक्तिहरूद्वारा जीवनी शक्ति प्राप्त गर्नेवाला, आयुको स्थानमा कहिले-काहीं सांघातिक हानिहरूको योग पनि प्राप्त गर्नेवाला र अनेक आपत्ति सहिसकेपछि अन्त्यमा शान्तिको मुख्य कारण भेट्टाउने खालको चिन्तित रहने व्यक्ति होला।

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यस्थानमा निकै ठूलो अशान्ति र हानिहरूको योग प्राप्त गर्नेवाला र धर्मको सम्बन्धमा ठूला-ठूला दुर्बलता पाउनेवाला र ईश्वरको निष्ठामा अनेक हानिको योग परेको होला र भाग्यको उन्नति गर्नका लागि अनेक गुप्त र बांगा-बांगा उपायले काम गर्नेवाला तथा भाग्य वृद्धिको लागि धर्म-अधर्मको वास्ता नगर्नेवाला र भाग्यस्थानमा ठूला-ठूला बाधा, तगारो तेर्सिएको देखेपछि अन्त्यमा सफलता शक्ति पाउनेवाल, विघ्न-बाधा टार्न केही अनुचित स्वार्थपूर्ति गर्नेवाला, यशको कमी पाउनेवाला होला।

कु० नं० ५९३

६ ४
७ ५ ३
८ २
९ ११ १रा.
१० १२

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा निकै कष्ट सहनेवाला, राज-समाजको सम्बन्धमा पनि केही अपठेरोको योग पाउनेवाला तथा उन्नति प्राप्त गर्नका लागि महान् गुप्त युक्तिहरूद्वारा काम गर्नेवाला र सम्मान-उन्नति वा पदोन्नतिमा विघ्न-बाधाको योग पाउनेवाला र कहिले काहीं इज्जतको स्थानमा घोर संकटकालको योग पाउनेवाला र अनेक कष्ट सहन गरेपछि ठूलो राजनीतिक युक्तिहरूले उन्नतिको बाटो भेट्टाउनेवाला र निकै राजसी काइदाले बस्ने खालको होला।

कु० नं० ५९४

६ ४
७ ५ ३
८ २रा.
९ ११ १
१० १२

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस निकै बलियो आमदानी भेट्टाउनेवाला र लाभ प्राप्तिको स्थानमा धेरै अपठेरो युक्तिहरूको शक्तिशाली प्रयोग गर्नेवाला तथा अपुताली जस्तै धेरै धन प्राप्त गर्नेवाला र प्राप्तिको स्थानमा महान् स्वार्थयुक्त भएर स्थिरताको निकै ठूलो साहसले प्रयोग गर्नेवाला, बढी भन्दा पनि अझ बढी नाफाखाने युक्तिहरू निकाल्नेवाला र धन-प्राप्तिको स्थानमा कहिल्यै पनि सन्तोष नमान्ने खालको तृष्णावन्त व्यक्ति होला।

कु० नं० ५९५

६ ४
७ ५ ३रा.
८ २
९ ११ १
१० १२

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै बर्ता धन खर्च गर्ने खालको तथा खर्चको कारणले गर्दा महान् कष्ट अनुभव गर्नेवाला र बाहिरी अन्य स्थानहरूको सम्बन्धबाट पनि दुःख सहनेवाला र अनेक विघ्न-बाधा र चिन्ताहरूबाट खर्चको संचालन शक्ति प्राप्त गर्नेवाला, कहिले-काहीं खर्चको बाटोमा घोर विपत्तिहरूको सामना गर्ने-वाला तथा अनेक युक्तिहरूले खर्चको शक्ति पाउने तथा धेरै समयपछि खर्चको विषयमा चिन्ता-मुक्त हुने खालको होला।

कु० नं० ५९६

६ ४रा.
७ ५ ३
८ २
९ ११ १
१० १२

# सिंह लग्नान्तर - केतुफलम्

जुन व्यक्तिको सिंहराशिको केतु लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू शरीर भित्र केही दुर्बलता र केही न्यूनता अनुभव गर्ने र

कु० नं० ५९७

६ ४
७ ५के. ३
८ २
९ ११ १
१० १२

देहमा कहिले काहीं कुर्ने मृत्यु तुल्य दुर्घटनाको योग पाउनेवाला, शरीरले निकै ठूलो परिश्रमको काम गर्नेवाला र शरीरमा सौन्दर्यको पनि केही न्यूनताको योग पाउनेवाला, देहस्ति सम्बन्धित अव्यवस्थित भावनाहरूद्वारा गुप्त रूपले उन्नतितिर अग्रसर हुनेवाला र मान एवं गौरवमा कमी अनुभव गर्नेवाला तर आफ्नू शक्तिको गुप्त बलले प्रभाव दर्शाउनेवाला, साहसी र भोगादिको पनि बढी शक्ति भएको तथा बर्ता दगुरा-दगुर गर्ने खालको होला।

जुन व्यक्तिको कन्या राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको कोषस्थानमा केही हानि र केही न्यूनता पाउने खालको

कु० नं० ५९८

६के. ४
७ ५ ३
८ २
९ ११ १
१० १२

र धनको वृद्धि गर्नका लागि आफ्नू गुप्त शक्तिको महान् प्रयोग गर्ने र धनको सम्बन्धमा महान् परिश्रम र बर्ता दगुरा-दगुरको हडबडीले काम गर्नेवाला, आन्तरिक धारणा-शक्तिको बलले धन वृद्धि गर्ने मार्गमा कहिल्यै निराश र हताश नहुनेवाला, बरू उत्तरोत्तर प्रयत्नले सफल भएर धनको प्राप्तिमै लागिरहने र कुटुम्ब स्थानमा केही न्यूनताको योग पाउनेवाला तथा लौकिक वृद्धि-भित्र महान् धैर्यले काम लिन जान्ने होला।

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस बाहुबलको महान् शक्ति प्राप्त गर्नेवाला र महान् पुरुषार्थ र ठूलो परिश्रम गर्नेवाला तथा उन्नति गर्नका लागि युक्ति र शक्तिको सम्मिश्रण योगबाट लगातार काम गरिरहनेवाला र सफलता प्राप्त गर्ने महान् उत्साहको शक्तिले विजयी हुनेवाला र दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही कमी र केही अशान्ति पाउनेवाला र साह्रै ठूलो साहस राख्नेवाला तथा प्रभावको महानता वृद्धि पाउनेवाला, नरमभाव र शीलको वास्ता नराख्नेवाला, आफ्नू स्वार्थसिद्धि गर्नमा तत्पर रहने खालको शक्तिशाली होला।

कु० नं० ५९९

६ ४ ७के. ५ ३ ८ २ ९ ११ १ १० १२

जुन व्यक्तिको वृश्चिक राशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस माताको स्थानमा केही हानि र न्यूनताको योग पाउनेवाला मातृभूमि र जन्मभूमिबाट वियोग पाउनेवाला, सुख प्राप्तिका साधनहरूमा ठूला-ठूला विघ्न-बाधाहरू पाउने खालको होला। निवासस्थान र भूमि-भवन आदिको सम्बन्धमा पनि कहिले-काहीं न्यूनता पाउनेवाला र स्थान परिवर्तनको योग प्राप्त गर्नेवाला तथा केही अशान्ति युक्त वातावरणमा रहनेवाला र अलि-अलि संकटकाल पनि पाउनेवाला र अनेक कष्ट सहेपछि अन्त्यमा सुखको बलियो साधन र आन्तरिक धैर्यको शक्ति प्राप्त गर्ने खालको होला।

कु० नं० ६००

६ ४ ७ ५ ३ ८के. २ ९ ११ १ १० १२

जुन व्यक्तिको धन राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको महान् परिश्रम विद्याबाट ग्रहण गर्नेवाला र सन्तान पक्षमा केही कष्ट सहने गर्नेवाला र ज्ञान तथा विवेकको बृद्धि गर्नका लागि शक्तिभन्दा बढी परिश्रम गर्नेवाला तैपनि मस्तिष्कलाई केही प्रभाव-शून्य अनुभव गर्नेवाला र केही चिन्तित रहनेवाला, कुरा-कानीमा ठूलो प्रभाव दर्शाएर आफ्नू काम सिद्ध पार्नेवाला तर यथार्थ मन्तव्य र ठीक तत्त्वलाई बुझ्न कठिन परे झैं अनुभव गर्नेवाला, अतिरिक्त धारणाशक्ति प्राप्त गर्ने र आफ्नू कुरामा अटल रहेर काम गर्ने खालको होला।

कु० नं० ६०१

६ ४ ७ ५ ३ ८ २ ९के. ११ १ १० १२

जुन व्यक्तिको मकरराशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस शत्रु स्थानमा ठूलो प्रभावी शक्तिले काम बनाउने र रोग एवं कष्टको नाश गरिदिने वाला, मावली पक्षबाट हानि पाउनेवाला, बाहुबलको परिश्रम र शक्तिले विजय प्राप्त गर्नेवाला, धेरै ठूलो विपत्तिमा पनि धैर्य धारण गर्नेवाला, शीलको उल्लंघन गर्ने तथा महान् कार्यसिद्धि गर्ने र निकै बहादुरी कायम गर्ने एवं ठूलो साहस भएको र कस्तै कठिन स्थितिमा पनि काम पूरा गर्न तत्पर रहने होला।

कु० नं० ६०२

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १०के. १२

जुन व्यक्तिको कुम्भ राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानबाट ठूलै हानि पाउनेवाला, इन्द्रिय भोगादिकको बर्ता शक्ति पाउनेवाला, दैनिक व्यापारको स्थानमा ठूलो परिश्रम गर्न सक्नेवाला, दैनिक व्यापारमा उन्नति गर्नका लागि कठोर श्रम गर्नेवाला व्यापारमा उन्नतिका लागि विशेष शक्तिको प्रयोग गरेर अतिरिक्त धारणाको बलले सफल हुनेवाला, कहिले-काहीं व्यापारको स्थानमा घोर संकटकालको योग पाउनेवाला, स्त्री भोगादिकको क्रममा र व्यापारको क्रममा केही अनधिकार लाभ पाउने र केही साहस र गुप्त भयको सम्मिश्रण शक्तिले गृहस्थिको काम चलाउनेवाला होला।

कु० नं० ६०३

६ ४ ७ ५ ३ ८ २ ९ ११के. १ १० १२

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनको दिनचर्यामा महान् कष्टको योग पाउने र पेटभित्र केही भित्री बिमारी या अन्य शिकायत सहनेवाला, केही पूर्वसंचित जीवनमा सहायक हुने खालका वस्तुको केही हानि पाउनेवाला, जीवनमा केही गूढातिगूढ स्थानमा कहिले काहीं महान् सांघातिक हानिको योग पनि पाउनेवाला र जीवन निर्वाह शक्तिलाई, प्राप्त गर्नका निम्ति महान् कष्टसाध्य कठिन परिश्रम गर्ने खालको होला। अन्त्यमा अनेक कष्टहरू सहिसकेपछि जीवन निर्वाह शक्तिको निम्ति उपाय गर्ने खालको व्यक्ति होला।

कु० नं० ६०४

६ ४ ७ ५ ३ ८ २ ९ ११ १ १० १२के.

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य स्थानमा ठूला-ठूला कष्टहरू सहनेवाला र भाग्योन्नतिको बाटोमा बाधा वा केही हानि सहनेवाला र धर्म पालनको सम्बन्धमा हानिहरूको र बाधाहरूको योग प्राप्त गर्नेवाला र ईश्वरको यथार्थ निष्ठामा न्यूनता राख्नेवाला तथा यश प्राप्तिको स्थानमा धेरै कमी पाउनेवाला र केही उग्र धर्मको पालन गर्नेवाला र भाग्यको उन्नति गर्नका लागि महान् परिश्रम गर्नेवाला तथा आन्तरिक धारणाको शक्तिद्वारा भाग्योन्नतिको बाटोमा आँखा चिम्लेर अग्रसर हुनेवाला र अन्त्यमा भाग्योको दह्रो योग पाउने खालको होला।

कु० नं० ६०५

६ ४
७ ५ ३
८ २
९ ११ १के.
१० १२

जुन व्यक्तिको वृष राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिताको स्थानमा केही हानिको योग पाउनेवाला, रोजगार व्यापार आदिको स्थानमा महान् परिश्रम गर्ने र कष्ट सहन सक्ने तथा राज-समाजमा उन्नति पाउनका लागि ठूला-ठूला दु:ख-कष्ट सहने र मानोन्नति पदोन्नतिको लागि महान चातुर्यहरूको गुप्त-चाल भित्र कठिन परिश्रम गर्ने र कहिले-काहीं इज्जतको स्थानमा घोर संकटकालको योग पाउनेवाला, महान् धैर्य शक्तिद्वारा अनेक कष्टपछि उन्नतिको बाटो फेला पार्नेवाला, गुप्त पुरूषार्थी होला।

कु० नं० ६०६

६ ४
७ ५ ३
८ २के.
९ ११ १
१० १२

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आयको स्थानमा केही न्यून परिश्रमको शक्तिद्वारा काम

कु० नं० ६०७

६ ४
७ ५ ३के.
८ २
९ ११ १
१० १२

गर्नेवाला, केही न्यून लाभ पनि पाउनेवाला, लाभ प्राप्तिको स्थानमा केही असन्तोष मान्ने, लाभ प्राप्तिको निम्ति केही कष्टसाध्य कर्मको योगबाट सफलता पाउनेवाला, केही अनुचित लाभ प्राप्त पनि गर्नेवाला, केही धन प्राप्तिमा वृद्धि गर्नका लागि अर्काको लाभ-हानिको पनि वास्ता नगर्नेवाला, धनको निम्ति केही शक्तिभन्दा बर्ता परिश्रम गर्ने र आफ्नू आवश्यकताहरूको पूर्ति हुनमा केही गुप्त शक्तिहरूको योग पाउनेवाला, निकै गुप्त धैर्यवान् व्यक्ति होला।

जुन व्यक्तिको कर्कराशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धेरै खर्च गर्ने र खर्चको स्थानमा महान् अशान्तिको योग पाउने

कु० नं० ६०८

६ ४के.
७ ५ ३
८ २
९ ११ १
१० १२

तथा केही कष्टसाध्य कर्मका योगले खर्चको शक्ति प्राप्त गर्ने खालको होला। अनि खर्चको शक्ति प्राप्त गर्नका लागि महान कठोर परिश्रम गर्नेवाला र खर्चको स्थानमा कहिले काहीं घोर संकट र मार्मिक वेदनाको अनुभव गर्नेवाला र बाहिरी स्थानसित सम्बन्धित परिश्रममा केही अशान्ति पाउनेवाला तथा अनेक कष्टहरू सहेर आन्तरिक धैर्यले काम लिनेवाला र अन्त्यमा खर्चको केही दह्रो स्थान पाउने व्यक्ति होला।

# कन्या लग्न हुनेहरूको भविष्यका तारीखहरू

सन् १९९७ सालमा-गुरू पाँचौं स्थानमा नीच चल्नेछन् यसै कारण गृहस्थी र सन्तानमा केही परेशानी रहने छ। ता० १०/१/९७ देखि भाग्यमा केही अपठेरो परिरहने छ। ता० २६/१/९७ बाट भाग्यमा सफलता रहने छ। ता० २०/५/९७ देखि भाग्यमा केही न्यूनता वा कमजोरी रहनेछ। ता० १/७/९७ बाट भाग्यमा सफलता रहनेछ। ता० ३/९/९७ देखि समय बढी व्यय हुने र हानि नोकसानी दिने रहला। ता० १६/११/९७ बाट ता० ३१/१२/९७ सम्म समय प्रभावयुक्त पुरुषार्थको सफलता दिने रहला।

कु० नं० ६०९

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

सन् १९९८ को वर्षमा- ता० १/१/९८ देखि समय केही सुख र सफलताको रहनेछ। ता० ९/२/९८ बाट समय निकै परेशानीको रहला। ता० ५/३/९८ बाट भाग्यको समय सप्रन्दै जानेछ। ता० ३०/३/९८ देखि भाग्यमा केही न्यूनता वा दुर्बलता रहला। ता० १९/५/९८ देखि ता० ५/७/९८ सम्म समय लाभयुक्त सफलताको रहने छ। त्यसपछि खर्च बढ्दै जाला। ता० १२/९/९८ देखि ९७/१०/९८ सम्म सफलता रहि रहने छ, त्यसपछि लाभ हानि चल्नेछ। ता० १६/११/९८ देखि ३१/१२/९८ सम्म उन्नतिदायक समय रहला।

कु० नं० ६१०

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्नमा - सुनौला तारीखहरू

कु० नं० ६११

| | | | |
|---|---|---|---|
| ७ | | ५ | |
| ८ | ६ | | ४ |
| | ९ | ३ | |
| १० | १२ | | २ |
| | ११ | १ | |

सन् १९९९ को वर्षमा ता० १/१/९९ देखि समय प्रायः राम्रोतिर लम्कने छ। ता० ४/२/९९ बाट केही दु:ख-कष्ट रहने छ। ता० १९/४/९९ देखि व्यापार र गृहस्थीमा सुख सफलता रहने छ। ता० १२/८/९९ सम्ममा अधिकांश रूपले लाभ र सफलता रहने छ त्यसपछि देखि भाग्यको समय सप्रन्दै जानेछ, तर अगाडि केही कष्ट पनि रहने छ। ता० १७/११/९९ देखि साहस र शक्ति बढ्ने छ र ता ३१/१२/९९ सम्ममा समय अलि राम्रो रहने छ।

कु० नं० ६१२

| | | | |
|---|---|---|---|
| ७ | | ५ | |
| ८ | ६ | | ४ |
| | ९ | ३ | |
| १० | १२ | | २ |
| | ११ | १ | |

सन् २००० को वर्षमा- ता० १/१/२००० बाट समय साधारण तथा उत्तम चल्नेछ। ता० ६/२/२००० बाट ता २९/२/२००० सम्ममा भाग्यको सफलता। बनिरहने छ। त्यसपछि भाग्यमा न्यूनता आउनेछ। ता० १/४/२००० देखि ता० २८/९/२००० सम्ममा प्रायः भाग्यको सफलता रहिरहने छ, त्यसपछिको समय केही नोकशानदायक र कमजोर रहने छ। ता० १६/११/२००० बाट भाग्यको समय उन्नतिदायक रहने छ। ता० ३१/१२/२००० सम्ममा प्रायः सफलता बनिरहने छ।

# कन्या लग्नमा सुनौला तारीखहरू

सन् २००१ को वर्षमा- ता० १/१/२००१ बाट समय सामान्यतया राम्रो रहने छ। ता० २३/२/२००१ देखि समय केही दुर्बल वा कष्टदायक रहने छ। ता० २२/३/२००१ देखि समय केही सप्रन्दै जानेछ। ता० ९/४/२००१ बाट भाग्य कमजोर नै चल्नेछ। ता० ९/२/२००१ बाट भाग्यको उत्तम समय चल्ने छ। ता० १/८/२००१ बाट फेरि भाग्य कमजोर रहने छ। बढी व्यय होला। ता० १०/९/२००१ देखि भाग्यको उत्तम समय रहने छ। ता० १७/१०/२००१ देखि धनको पक्ष दुर्बल रहने छ। ता० १६/११/२००१ देखि समय सप्रने छ। ता० ९/१२/२००१ देखि ३१/१२/२००१ सम्ममा सुख शान्ति रहने छ।

कु० नं० ६१३

सन् २००२ को वर्षमा ता० ३/१/२००२ देखि समय उत्तम रहने छ। ता० १/३/२००२ देखि अलि-अलि झ्याउलो समेत काम चल्दै रहने छ। ता० ३०/३/२००२ देखि उन्नतिमा विघ्न-बाधा आइलाग्ला। ता० २९/४/२००२ देखि समय उत्तम चल्ने छ। ता० २६/५/२००२ बाट भाग्य केही न्यून चल्नेछ। ता० २१/६/२००२ देखि २५/७/२००२ सम्म उत्तम समय चल्नेछ, पछि धन व्यय बढी रहला। २४/१०/२००२ बाट ता० ३१/१२/२००२ सम्म भाग्योदय बनिरहने छ।

कु० नं० ६१४

# कन्या लग्नमा - सुनौला तारीखहरू

सन् २००३ को वर्षमा- ता० १/१/२००३ बाट समय सामान्यतथा ठीके रहने छ। ता० २४/१/२००३ बाट भाग्यको न्यूनता दुर्बलता चल्नेछ।

कु० नं० ६१५

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

ता० १८/२/२००३ देखि भाग्य सप्रन्दै जानेछ, तर शरीरमा आंशिक अशान्ति रहने छ। ता० ८/४/२००३ बाट समय सफलतातिर लम्कने छ। ता०१७/८/२००३ देखि समय हानिकारक कष्ट दिने खालको रहला तथा उन्नतिमा लाभ-हानि चल्दै रहने छ। ता० १/१२/२००३ बाट ३१/१२/२००३ सम्ममा भाग्यबाट सुख सफलता र धनागम रहने छ, साहस बढ्ने छ।

सन् २००४ को वर्षमा- ता० ३/१/२००४ बाट पुरुषार्थ कर्मद्वारा भाग्यको सफलता चल्नेछ र सुखका साधन जोरिने छन्। ता० १३/२/२००४ बाट विघ्न-बाधा र कष्ट रहने छ।

कु० नं० ६१६

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

ता० २६/५/२००४ बाट भाग्यको उन्नति चल्नेछ। ता० ४/८/२००४ देखि भाग्यमा केही न्यूनता र दुर्बलता चल्नेछ। ता० २०/९/२००४ देखि धनागम र भाग्यको सफलता रहने छ, प्रभाव बढ्ला। ता० १७/१०/२००४ देखि धनको पक्ष केही कमजोर चल्नेछ। ता० १६/११/२००४ बाट मान प्रभाव बढ्ने छ र सुखका साधन बढ्ने छन्। ता० २८/१२/२००४ सम्ममा प्रायः भाग्यको सफलता चल्दै रहने छ।

# कन्यालग्न हुनेहरूको लागि सुनौलो तारीख

सन् २००५-को वर्षमा ता० १/१/२००५ देखि समय साधारण रहने छ। ता० २७/१/२००५ देखि गृहस्थ एवं व्यापारमा सफलताहरू रहने छन्, भाग्यको उन्नति रहने छ। ता० १४/३/२००५ बाट एक महीनाको निम्ति व्यापारमा केही न्यूनता र दुर्बलता रहने छ। ता० १४/४/२००५ देखि आयमा कमी रहने छ। ता० १/७/२००५ बाट भाग्यमा सुधार चलि रहने छ। ता० २८/७/२००५ बाट इज्जत र प्रभाव बढ्ने छ। ता० २३/८/२००५ देखि केही कष्टको समय चल्नेछ। ता० १७/१०/२००५बाट धनको केही हानि रहने छ। ता० १६/११/२००५ बाट भाग्यको मार्ग उन्नतिमा रहने छ। ता० ३१/१२/२००५ सम्म समय प्रायः ठीक रहने छ।

कु० नं० ६१७

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १

सन् २००६ को वर्षमा- ता० १/१/२००६ देखि समय प्रायः राम्रो रहने छ। ता० ९/२/२००६ बाट भाग्यको अवनति रहने छ। ता ८/३/२००६ बाट गृहस्थी र व्यापारमा सफलता रहने छ। ता० ७/५/२००६ बाट समय राम्रो रहने छ। ता० ६/७/२००६ बाट भाग्यमा केही न्यूनता रहने छ। ता० ३/९/२००६ देखि भाग्यमा केही न्यूनता रहने छ। ता० ३/९/२००६ देखि भाग्य र धनको सफलता रहने छ। ता० १७/१०/२००६ बाट धनको हानि हुन सम्भव छ। ता० १७/११/२००६ देखि भाग्य सफलतातिर लम्कने छ। ता० ३१/१२/२००६ सम्म भाग्यको पक्ष बलियो रहने छ।

कु० नं० ६१८

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# कन्या लग्न हुनेहरूको - सुनौलो तारीख

सन् २००७ को वर्षमा- ता० १/१/२००७ बाट पुरुषार्थ कर्मद्वारा भाग्यको उन्नति रहने छ। ता० २३/३/२००७ देखि भाग्यमा न्यूनता आउला। ता० १७/४/२००७ देखि व्यापारमा धनको सफलता रहने छ। ता० ९/५/२००७ देखि भाग्यमा न्यूनता आउन सक्दछ। ता० ६/६/२००७ देखि ता० १४/८/२००७ सम्म भाग्योन्नति र मान प्रभाव बढ्दै जानेछ। त्यसपछि भाग्यमा न्यूनता आउला। ता० १७/११/२००७ देखि भाग्य र धनको सफलता रहने छ र ता० ३१/१२/२००७ सम्म भाग्योन्नति रहने छ।

कु० नं० ६१९

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

सन् २००८ को वर्षमा- ता० ९/१/२००८ बाट पुरुषार्थ र कर्मद्वारा भाग्यमा उन्नति रहने छ। ता० २३/३/२००८ बाट भाग्यमा आंशिक न्यूनता रहने छ। ता० १७/४/२००८ बाट व्यापारमा धनको सफलता रहने छ। ता० ९/५/२००८ बाट भाग्यमा न्यूनता आउने छ। ता० ६/६/२००८ देखि ता० १४/८/२००८ सम्म भाग्योन्नति रहला र मान-सम्मान, प्रभाव बढ्ने छ। त्यसपछि भाग्यमा न्यूनता आउला। ता० २९/१२/२००८ देखि भाग्योन्नति र व्यापारमा सफलता एवं धनागम भइरहने छ।

कु० नं० ६२०

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्न हुनेहरूको - प्रतिकूल समय ज्ञान

कु० नं० ६२१

| | | |
|---|---|---|
| ७ | ६ | ५ |
| ८ | | ४ |
| ९ | | ३ |
| १० | १२ | २ |
| ११ | | १ |

(सदैव कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा पञ्चाङ्गमा आउने छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिन-हरूमा कन्या राशिको प्रतिकूल समय रहने छ।

**सू०**- तुला, मकर, मीन, मिथुन, शेष समान राशिहरू वृष, कन्या, धन हुन्।

**चं०**- सिंह, वृश्चिक, कुम्भ र मीन।

**मं०**- कर्क, सिंह, तुला र मीन।

**बु०**- सिंह, कुम्भ, मीन र मेष।

**गु०**- सिंह, मकर, कुम्भ र मेष।

**शु०**- सिंह, कुम्भ, मेष र कन्या।

**श०**- सिंह, मेष र मीन।

**रा०**- तुला, धन, मेष, मीन र कन्या।

**के०**- तुला, मेष, मिथुन, कन्या र मीन।

*नोट-* जब-जब कहिले कुनै ग्रह सूर्यबाट अस्त हुन्छ, तब-तब त्यो दुर्बल वा कमजोर फल दिन्छ। यसको अतिरिक्त वर्षको फलादेश जान्नका लागि श०गु०रा०के० यी चार ग्रहहरूबाट ज्ञात गर्नुपर्दछ र महीनाको फलादेश जान्नका लागि सू०मं०बु०शु० यी चार ग्रहहरूबाट ज्ञात गर्नुपर्दछ र दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ।

# कन्या लग्न हुनेहरूको - अनुकूल तारीखहरू

कु० नं० ६२२

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १

(सदैव कालको लागि)

निम्नलिखित ग्रहहरू जब-जब यी राशिहरूमा, पञ्चांगमा आउने छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा उन्नतिदायक समय रहने छ।

---

सू०- कर्क, वृश्चिक, कुम्भ, मेष र सिंह।

चं०- कर्क, कन्या, तुला, धन, मकर, मीन, वृष र मिथुन।

मं०- कन्या, वृश्चिक, मकर, कुम्भ, मेष, वृष र मिथुन।

बु०- कर्क, कन्या, तुला, वृश्चिक, धन, मकर र वृष।

गु०- कर्क, कन्या, तुला, वृश्चिक, धन, मीन, वृष र मिथुन।

शु०- कर्क, कन्या, तुला, वृश्चिक, धन, मकर, मीन, वृष र मिथुन।

श०- कर्क, कन्या, तुला, वृश्चिक, धन, मकर, कुम्भ, वृष र मिथुन।

रा०- कर्क, वृश्चिक, कुम्भ, वृष, मिथुन र सिंह।

के०- कर्क, वृश्चिक, धन, कुम्भ, वृष र सिंह।

---

*नोट-* सालाना फलादेश जान्नका लागि शनि,गुरू, राहु र केतु यी चार ग्रहवाट हेर्नु पर्दछ र मासिक फलादेश जान्नका लागि सू०,बु०, शु०, मं० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट गणना गर्नुपर्दछ।

# कन्या लग्नान्तर - सूर्यफलम्

जुन व्यक्तियो कन्या राशिको सूर्य लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने किसिमको र शरीरमा दुर्बलता वा कमजोरीले घडेको तथा अन्य स्थानहरूको सम्बन्धले प्रभाव पाउने खालको होला। शारीरिक परिश्रम द्वारा खर्च वहन गर्नेवाला तथा दैनिक व्यापारलाई खर्चको तागतले केही संचालन गरिरहनेवाला र स्त्री स्थानमा न्यूनता र केही कमजोरी पाउनेवाला र अन्यस्थानहरूमा आउने-जाने गरिरहनेवाला र व्यापारमा केही हानि र कमजोरी पाउनेवाला, शरीरको दुर्बलतामा पनि क्रोध बर्ता भएको तथा खर्च गर्ने प्रभाव एवं शक्ति राख्नेवाला तथा केही चिन्ताग्रस्त रहने खालको होला।

कु० नं० ६२३

७ ५
८ ६सू. ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको तुला राशिका सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको ठूलो हानि पाउनेवाला र धनलाई अनावश्यक काममा व्यय गर्नेवाला, धन संग्रह गर्न सकिन भन्ने पछितो पाइरहने र कुटुम्बको हानि पाउनेवाला र अन्य स्थानहरूसित सम्बन्धित विघ्न-बाधा द्वारा धनको किंचित सुख पाउनेवाला, पुरातत्त्वको लाभ प्राप्त गर्नेवाला, जीवनको दिनचर्यामा केही प्रभाव पाउनेवाला, गूढ र अनुचित एवं बांगा युक्तिहरूले काम बनाउनेवाला, इच्छानुसार खर्चमा कमी पाउने होला।

कु० नं० ६२४

७सू. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नै पराक्रमले खर्च चलाउनेवाला, दाजु-भाइलाई हानि पुऱ्याउनेवाला, भाग्यमा केही न्यूनता र चिन्ता अनुभव गरिरहनेवाला, धर्मलाई पनि केही हानि पुऱ्याउने चेष्टा भएको होला। अन्यान्य स्थानहरूको बल पाउनेवाला, ठूलो साहस र उल्टो-सोझो शक्तिको उपयोग गर्नेवाला, निकै परिश्रमी होला।

कु० नं० ६२५

७ ५
८सू. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धन राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुख प्राप्तिका साधनहरूको निम्ति खर्च गर्नेवाला र सुखपूर्वक खर्च चलाउने र सुखका साधनहरूमा न्यूनता पाउनेवाला र मातृस्थानमा केही न्यूनता र वियोग पाउनेवाला तथा पिताको स्थानबाट केही न्यूनता वा दुर्बलता पाउनेवाला र व्यापारको ठूला-ठूला काम-काजमा पनि कमजोरी-दुर्बलता पाउनेवाला अनि अन्यान्य राज-समाज एवं मान-सम्मान वृद्धिको योगमा केही कमी पाउनेवाला र घर भित्र व्यय-शक्तिको प्रभाव राख्नेवाला केही अशान्त प्रकृतिको होला।

कु० नं० ६२६

७ ५
८ ६ ४
९सू. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको चातुर्यले आफ्नू खर्च चलाउन जान्नेवाला र विद्या स्थानमा न्यूनता पाउनेवाला र सन्तान पक्षबाट केही कष्ट अनुभव गर्नेवाला तथा केही चिन्तित मस्तिष्क भएको होला। अनि अन्यान्य स्थानासित सम्बन्धित झ्याउलाहरूद्वारा आफ्नू लाभको योजना बनाएर धनागम गर्नेवाला, अनि लाभमा केही न्यूनता पाउनेवाला र आफ्नू कमजोर पक्ष वा कुरालाई पनि बलियो र पक्षलाई सबल तुल्याउनेवाला, बर्ता रिसाउने र आफ्नू कुरा घुमाई-फिराई बुझाउन जान्नेवाला, त्यतिभएर पनि आफ्नू कथन राम्ररी बुझाउन जान्नेवाला, त्यतिभएर पनि आफ्नू कथन राम्री बुझाउन असमर्थ हुने र चंचल दिमागको व्यक्ति होला।

कु० नं० ६२७

७ ५
८ ६ ४
९ ३
१० सू. १२ २
११ १

जुन व्यक्तिको कुम्भराशिको सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही परतन्त्रता, केही कर्मले खूब खर्च गर्नेवाला, खर्च रोक्न खोज्दा पनि रोक्न नसक्ने खालको होला। खर्चको सम्बन्धमा केही बाधा र केही नीरसताको योग पाउनेवाला, मावली पक्षमा केही हानि र रोगादि झगडा-विवाद मुद्दामा खर्चको योग पाउनेवाला, खर्चको बलमा अभिमान वा प्रभाव राख्नेवाला र खर्चमा एवं प्रभाव वृद्धिमा केही अन्य स्थानहरूको सम्बन्ध पाउने खालको व्यक्ति होला।

कु० नं० ६२८

७ ५
८ ६ ४
९ ३
१० १२ २
११सू. १

जुन व्यक्तिको मीन राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारले खर्च चलाउने र व्यापारमा केही न्यूनता तथा अन्य स्थानको सम्बन्ध पनि पाउनेवाला र स्त्री पक्षमा केही हानि वा दुर्बलता पाउनेवाला, गृहस्थीको सुखमा कमी र अशान्तिको योग पाउनेवाला र खर्चको योगले देहमा केही अशान्तिको योग परेको र अंगमा केही दुर्बलताको योग पाउनेवाला, व्यापारको पक्षमा केही यता–उताबाट काम चलाउनेवाला तथा गृहस्थीमा खर्च गर्ने शक्तिको प्रभाव पाउने खालको व्यक्ति होला।

कु० नं० ६२९

७ ५
८ ६ ४
९ ३
१० १२सू. २
११ १

जुन व्यक्तिको मेष राशिका सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस अन्य स्थानहरूको सम्पर्कद्वारा पुरातत्त्वको लाभ र बढी धन व्यय गर्ने तथा संचित हुने धनको काममा केही न्यूनता पाउनेवाला तथा कुटुम्ब स्थानमा पनि केही दुर्बलता पाउनेवाला, जीवनको दिनचर्यालाई निकै शानदार खर्चको योजनाहरूद्वारा व्यतीत गर्न जान्नेवाला र प्रभाव एवं आनन्द भोग्नेवाला, विदेश आदिको ठूलो मौका पाउनेवाला र खर्चको विषयमा निकै गूढ युक्तिहरूले र केही विपत्तिहरूको योगले आफ्नू काम सिद्ध पार्न जान्नेवाला तथा धनको संग्रह शक्तिलाई सामान्य महत्व दिने खालको व्यक्ति होला।

कु० नं० ६३०

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १सू.

जुन व्यक्तिको वृषराशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्ति द्वारा धन व्यय गर्नेवाला तर भाग्यको चिन्ता अनुभव गर्नेवाला र धर्म तथा ईश्वरको श्रद्धा भक्तिमा केही न्यूनता पाउनेवाला र पुरुषार्थमा केही कमजोरी पाएर पनि पुरुषार्थ वा उद्योग गर्दै रहनेवाला र दाजु-भाइको स्थानमा केही हानिको योग पाउनेवाला, भाग्यमा अन्य स्थानको सम्बन्ध पनि पाउनेवाला, धर्मको सम्बन्धमा केही यथार्थको विरोध गरेर कुनै प्रभावशाली न्यून धर्मलाई स्वीकार्नेवाला तथा सुयश उन्नतिको स्थानमा बाधा पाउनेवाला व्यक्ति होला।

कु० नं० ६३१

७ ५
८ ६ ४
९ ३
१० १२ २सू.
११ १

जुन व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानमा आंशिक हानिको योग पाउनेवाला, पिता-स्थान र व्यापार स्थानबाट खर्च चलाउनेवाला, तथा शानदार खर्च गर्नेवाला, मातृस्थानमा पनि केही हानि वा कमजोरीको योग परेको र व्यापारस्थानमा वा मान-प्रतिष्ठाको उन्नतिमा केही न्यूनता पाउनेवाला, पुरातन राज्यको विरोध गरेर नवीन राज्यको समर्थन गर्नेवाला, आफ्नू मान-प्रतिष्ठा बनाउनमा अन्यान्य स्थानको पनि सहयोग पाउनेवाला, धेरै बाहिरी फैशन देखाउन मनपराउने र असलीको ठाउँमा नकली काम गर्नेवाला व्यक्ति होला।

कु० नं० ६३२

७ ५
८ ६ ४
९ ३सू.
१० १२ २
११ १

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आयको योगबाट व्यय गर्नेवाला र आयमा केही न्यूनता पाउनेवाला र अन्यान्य स्थानहरूमा सम्बन्धित लाभको योग पाउनेवाला र पुरातन लाभको योगको लाभ छोडेर नवीन फाइदाले लाभको योग राम्रो पाउनेवाला, सन्तान पक्षमा केही हानिको योग पाउनेवाला, विद्यामा केही कमी पाउनेवाला, बुद्धि र वाणीमा अलि खस्रोभाव र तीक्ष्णता राख्नेवाला, प्रभावको उल्टो र सोझो दुवै कामले लाभ र खर्च गर्ने होला।

कु० नं० ६३३

७ ५
८ ६ ४सू.
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको सिंह राशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खूब धन व्यय गर्नेवाला र अन्य स्थानको सम्पर्कबाट पनि खर्च गर्ने शक्ति पाउनेवाला र मावली पक्षको केही हानिको योग पाउनेवाला, शत्रु माथि प्रभाव राख्नेवाला, केही झगडा-विवादको मामलामा पनि र रोगादिमा पनि बढी खर्च गर्नेवाला र खर्च संचालनको शक्ति स्वतः प्राप्त गर्नेवाला र छेक-थुन वा झ्याउलाहरूलाई खर्चको तागतले पर हुत्याइदिनेवाला, खर्च स्थानमा महान् प्रभावको शक्ति पाउनेवाला होला।

कु० नं० ६३४

७ ५सू.
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्नान्तर- चन्द्रफलम्

जुन व्यक्तिको कन्याराशिको चन्द्रमा लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस तन-मनले प्रसन्नतापूर्वक लाभ पाउनेवाला र राम्रो शरीर भएको वा शान्ति स्वभावको होला। राम्री पत्नीवाला र व्यापारबाट खूब धन कमाउनेवाला तथा भोग सुख प्राप्त गर्नेवाला, ठूलो मान-सम्मान पाउनेवाला र प्रसन्न चित्त भएको र स्त्री स्थानमा खूब मन लगाउनेवाला, र ससुरालीबाट लाभ पाउनेवाला, दैनिक व्यापार र आमदानीको विशेष ख्याल राख्नेवाला, ठूला-ठूला राम्रा र दिव्यपदार्थ प्राप्त गर्नेवाला, धेरै उच्च विचार भएको तेजवान, नामी र विशेष भोग-विलास मनपराउने होला।

कु० नं० ६३५

७ ५ ८ ६चं. ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउनेवाला, धन संचय गर्न जान्ने तथा ठूलो कुटुम्बवाला र जीवनको समयमा ठूलो लाभको आनन्द अनुभव गर्नेवाला र लामू आयुवाला, पुरातत्त्वको लाभ पाउनेवाला र सदैव धन-संचयमा मन लगाउनेवाला र गूढ युक्तिहरूको बलले पनि लाभ पाउनेवाला तथा निकै इज्जतदार अनि सेतो वस्तुबाट बढी धन कमाउनेवाला, मनोयोगको शक्ति द्वारा धनको वृद्धि गर्ने महान् कारण उत्पन्न गर्नेवाला, धनाढ्य होला।

कु० नं० ६३६

७चं. ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको वृश्चिक राशिका चन्द्रमा लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस मनोयोगको कठोर परिश्रम द्वारा सामान्य लाभ पाउनेवाला,

कु० नं० ६३७

७ ५
८चं. ६ ४
९ ३
१० १२ २
११ १

यस कष्टसाध्य कर्म मार्गबाट भाग्यमानीमा गनिनेवाला, धर्म र ईश्वरमा श्रद्धा र विश्वास राख्नेवाला, दाजु-भाइको पक्षमा थोरै वा क्लेशको योग पाउनेवाला र मानसिक परिश्रम द्वारा विचारहरूमा केही अशान्तिको योग पाउनेवाला तथा पुरुषार्थमा केही न्यूनता पाउनेवाला र केही परतन्त्रतायुक्त भाग्यको वृद्धि पाउनेवाला र मन र हिम्मत भित्र दुर्वलता राख्नेवाला तथा लाभ प्राप्तिका लागि केही अनुचित काम पनि गर्नेवाला र सानो विचारद्वारा साना चाल चल्नेवाला, बल र साहसको स्थानमा केही लुकाउने र न्यूनताले काम निकाल्न जान्ने र चिन्तित मनवाला व्यक्ति होला।

जुन व्यक्तिको धन राशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक इच्छित आय पाउनेवाला र भवन-भूमिको लाभ

कु० नं० ६३८

७ ५
८ ६ ४
९चं. ३
१० १२ २
११ १

पाउनेवाला तथा व्यापारबाट पनि लाभ पाउनेवाला, सवारी (वाहन) को आनन्द लिनेवाला, ठूलो सम्मान पाउनेवाला र राजसमाजबाट पनि लाभ पाउनेवाला र प्रसन्न मन रहनेवाला र राम्रा कर्म गर्नेवाला र राम्रा-राम्रा वस्त्राभूषण आदि पाउनेवाला, मातृस्थानबाट खूब सुख प्राप्त गर्नेवाला र मनोयोगको तागतले सुख प्राप्तिका अनेक साधन पाउनेवाला होला।

जुन व्यक्तिको मकर राशिका चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिद्वारा लाभ पाउनेवाला र सन्तान-लाभ पाउनेवाला तथा विद्या प्राप्त गर्नेवाला र बुद्धि भित्र मानसिक परिश्रमद्वारा विचारहरूमा केही प्रधानताको लाभ पाउनेवाला र विशेष प्राप्तिको लागि सदैव बुद्धिमा बल दिनेवाला एवं लाभको लागि निरन्तर ध्यान राख्नेवाला र विचारहरूमा शीतलता र वाणीमा नम्रता धारण गर्नेवाला, धेरै बाठो, बुद्धिमान तथा बुद्धि र मनमा अलि-अलि चिन्ता गर्नेवाला र केही पुत्रको भन्दा कन्या सन्तानको पक्ष पाउनेवाला र मनोबल, बुद्धिबलले खूब लाभ पाउनेवाला व्यक्ति होला।

कु० नं० ६३९

७ ५ ८ ६ ४ ९ ३ १० चं. १२ २ ११ १

जुन व्यक्तिको कुम्भ राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस लाभको सम्बन्धमा केही न्यूनता पाउनेवाला र मानसिक चिन्ताहरू पाउनेवाला र धन बढी खर्च गर्ने र आमदानीको निम्ति केही परतन्त्रताको योग पाउनेवाला या अपठेरो वा झ्याउलो युक्त कर्मबाट लाभ पाउनेवाला र लाभको विषयमा केही बाहिरी स्थानहरूको सम्बन्ध पनि पाउनेवाला र मन मुताबिक आवश्यक पदार्थहरूको केही कमी पाउनेवाला र अनियमित फाइदाले लाभको योजना पाउनेवाला एवं केही मनलाई बन्धनमा पाउनेवाला र लाभ प्राप्तिको कारणले केही प्रभाव पाउनेवाला र शीलयुक्त व्यक्ति होला।

कु० नं० ६४०

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११चं. १

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारमा बढी लाभ कमाउनेवाला र राम्री पत्नी पाउने र काइदासाथ भोग-विलास प्राप्त गर्नेवाला, घर-गृहस्थीको उत्थानमा नै मन लगाउने र राम्रो शरीर भएको होला। ससुरालीबाट पनि लाभ पाउनेवाला र मनोयोग शक्तिले दैनिक व्यापारमा ठूलो सफलता पाउने तथा सौन्दर्यसित सम्बन्धित कामहरूमा बढी लाभ पाउनेवाला तथा शान्तचित्त, मानयुक्त, उत्साही र अनेक राम्रा वस्तु पाउनेवाला, प्रत्येक लौकिक काममा सफलता पाउने र बाठो व्यक्ति होला।

कु० नं० ६४१

जुन व्यक्तिको मेष राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस लाभको निम्ति केही कष्टको योग पाउने र विदेश आदि स्थानहरूको सम्बन्धबाट लाभ पाउनेवाला तथा धनागमको लागि अनेक प्रयत्न गर्ने र पुरातत्त्वको लाभ पाउनेवाला तथा गूढ युक्तिका गहीरा चालहरूले मनोयोगद्वारा लाभ पाउनेवाला तथा लाभ पाउने र शानदार जीवन व्यतीत गर्नेवाला र मानसिक कष्ट सहनेवाला र कुटुम्ब, धन, भाग्यको वृद्धिको इच्छा सदैव राख्नेवाला, जीवनमा सहायक, हुने केही पहिलो र कुनै गम्भीर वस्तुको लाभ पाउनेखालको व्यक्ति होला।

कु० नं० ६४२

जुन व्यक्तिको वृषराशिको चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस उच्च विचारभएको, निकै भाग्यमानी धर्ममा आस्था र ईश्वरमा विश्वास भएको तथा बढी श्रद्धा राख्ने राख्नेवाला, यश-मान प्राप्त गर्नेवाला, दाजु-भाइको पक्षमा केही न्यूनताको योग पाउनेवाला र पुरुषार्थलाई कुनै पनि महत्व नदिने खालको होला। बल पौरुषमा कमी पाउनेवाला र तत्वग्राही, दूरदर्शी र उन्नत ललाट र दुब्लो पातलो कदवाला, प्रभावशाली र अनेक दिव्य पदार्थ-भाग्यबल र मनोयोग द्वारा प्राप्त गर्नेवाला, ठूलो धर्मको खोजीमा लागेको र चौबीस वर्षको उमेरमा लाभको ठूलो उन्नति पाउने खालको होला।

कु० नं० ६४३

७ ५
८ ६ ४
९ ३
१० १२ २चं.
११ १

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस भलादमी काइदाले व्यापारबाट लाभ कमाउनेवाला तथा राज-समाजबाट लाभ पाउनेवाला र मनोयोगको कर्म बलले उन्नति गर्नेवाला, निकै उच्च श्रेणी झैं रहन-सहन भएको तथा ठूला-ठूला बहुमूल्य पदार्थहरू प्राप्त गर्नेवाला र सुख भोग्नेवाला, मातृस्थानको र भूमि-भवनको सुख लाभ प्राप्त गर्नेवाला तथा सम्माननीय, प्रभावशाली कर्मिष्ठ र प्रतिष्ठायुक्त तथा चौबीस वर्षको उमेरबाट उन्नति गर्नेवाला, निकै उच्च विचार उदार प्रकृतिको व्यक्ति होला।

कु० नं० ६४४

७ ५
८ ६ ४
९ ३चं.
१० १२ २
११ १

जुन व्यक्तिको कर्क राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस स्वतः राम्रो लाभ कमाउनेवाला एवं लाभका लागि केवल मनोयोगको शक्तिको सकंल्पले नै कुनै प्रयत्न नगरीकनै प्राप्त गर्नेवाला र अनेकानेक दिव्य पदार्थ पाउनेवाला एवं प्रयोग गर्नेवाला र सन्तानबाट केही सुख शान्ति प्राप्त गर्नेवाला, विद्या-विवेकको शक्ति पाउनेवाला र ठूलो चातुर्य र बुद्धियोगले आफ्नू काम पूर्ण पार्नेवाला तथा चौबीस वर्षको उमेरबाट लाभमा उन्नति पाउनेवाला र स्थिर चित्त भएको चिन्ता रहित रहने व्यक्ति होला।

कु० नं० ६४५

७ ५
८ ६ ४चं.
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको सिंह राशिको चन्द्रमा लग्नबाट बाहौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने र अन्य स्थानहरूको योगले लाभ पाउनेवाला, चंचल चित्त र अशान्त मन भएको तथा धेरै परका कुटाहरू मनमा सोचिरहनेवाला, केही रोग वा झगडा विवादको सम्बन्धमा आफ्नू लाभका कुरा विचार्नेवाला, आए जति सबै धन खर्च गरिदिने खालको होला। शत्रु पक्षमा शान्त चित्तले काम सिद्ध पार्ने कुरा विचार गरिरहनेवाला तथा मावली पक्षबाट लाभको योजना पाउनेवाला र आयमा न्यूनता पाउने र केही नीरसता युक्त होला।

कु० नं० ६४६

७ ५चं.
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको कन्या राशिको मंगल लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस पूर्ण आयु पाएको र शरीरमा केही कष्ट अनुभव गर्नेवाला, ठूलो पराक्रमी र उच्च श्रेणीको कूटनीतिले काम सिद्ध पार्नेवाला, निकै गहीरो चाल चल्नेवाला, साहसी र पैतृक व पुरातत्त्वको लाभ पाउनेवाला, मातृस्थानमा केही हानिको योग पाउनेवाला र स्त्री पक्षमा केही क्लेश अनुभव गर्नेवाला, दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही न्यूनता योग भए पनि इच्छित सहयोग पाउनेवाला, जीवनको समयलाई निकै शानदार काइदाले बिताउने खालको र जीवनलाई सहायता दिने शक्ति प्राप्त गर्नेवाला तथा केही प्रसिद्ध व्यक्ति होला।

कु० नं० ६४७

७ ५
८ ६मं. ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको तुला राशिको मगंल लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस निकै धनी झैं जीवनको समय व्यतीत गर्नेवाला र लामू आयु भएको तथा दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही न्यूनता र बन्धन झैं अनुभव गर्नेवाला र धन संग्रहमा केही कमी र हानि पाउनेवाला एवं कुटुम्बको केही हानि पाउनेखालको होला र धन प्राप्तिको बन्धनमा धेरै कूटनीतिको शक्ति प्रयोग गर्ने खालको होला। निकै गहीरो चाल चल्न जान्ने र पुरातत्त्वको फाइदा पाउनेवाला, विख्यात एवं प्रभावशाली र सन्तान पक्षमा ठूलो शक्ति प्रयोग गर्नेवाला र बर्ता बोल्न सक्ने खालको व्यक्ति होला।

कु० नं० ६४८

७मं. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस अनेक कष्ट सहेर पनि ठूलो पुरुषार्थ गर्नेवाला, तीक्ष्ण शक्तिको प्रयोग गर्न जान्नेवाला तथा दाजु-भाइको पक्षमा केही थिचो-मिचो गर्न सक्नेवाला र निकै कूटनीतिको गहीरो कर्म गर्न जान्नेवाला, मावली पक्षको र पिता-स्थानको केही हानि गर्नेवाला, बाहुबल र हिम्मतले काम मिलाउन जान्ने, लामो आयु भएको र पुरातत्त्वको शक्ति प्राप्त गर्नेवाला, धर्मस्थानमा केही हानि पुऱ्याउने वाला, तथा भाग्यमा केही न्यूनता(कमी) पाउनेवाला, पुरुषार्थलाई ठूलो मान्नेवाला र शत्रु पक्षमा प्रभाव जमाउने व्यक्ति होला।

कु० नं० ६४९

७ ५
८मं. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धनुराशिको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस लामू आयुवाला र जीवनको समयलाई सुखपूर्वक बिताउने र मातृस्थानमा केही हानि पाउनेवाला, पुरातत्त्व र पैतृक लाभ पाउनेवाला स्त्री स्थानमा केही हानि पुऱ्याउनेवाला र आमदानीमा केही न्यूनता अनुभव गर्नेवाला, पिता स्थानमा केही कमी र केही क्लेश अनुभव गर्नेवाला र शान्तिपूर्वक थिचिएका युक्तिहरू द्वारा काम गर्नेवाला र सुखका साधनहरूमा केही न्यूनता पाउनेवाला, प्रभावयुक्त जीवन बिताउनेवाला, भाइको पक्षबाट सुख पाउने खालको अलमस्त व्यक्ति होला।

कु० नं० ६५०

७ ५
८ ६ ४
९मं. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै शानदार जीवन व्यतीत गर्नेवाला तथा ठूलो नाम कमाउने र प्रतिष्ठा प्रभाव पाउने खालको होला। बुद्धिद्वारा निकै गहीरो कूटनीति प्रयोग गर्नेवाला एवं कुनै विचित्र आविष्कार गर्नेवाला, लाभमा केही कमी पाउने र खर्च खूब गर्नेवाला, वाणीमा केही कला भएको र सन्तान पक्षमा एक किसिमको सुख-दुःखको गहीरो अनुभव गर्नेवाला, लामो आयु भएको र पुरातत्त्वको लाभ एवं ज्ञान प्राप्त गर्नेवाला तथा गम्भीर विचारवाला र अन्यान्य स्थानहरूको विशेष सम्बन्ध राख्नेवाला, निकै तेज मस्तिष्क भएको रिसाहा प्रकृतिको व्यक्ति होला।

कु० नं० ६५१

७　५
८　६　४
९　३
१० मं.　१२　२
११　१

जुन व्यक्तिको कुम्भ राशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू मावलीबाट केही हानि पाउनेवाला र दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही वैमनस्यता र वियोग पाउनेवाला र अपठेरो काम परेर केही परेशानीहरू द्वारा शक्ति पाउनेवाला र शत्रुहरूलाई या विपक्षीहरूलाई ठूलो कूटनीति एवं गुप्त शक्तिको आगोले तप्त पार्ने खालको र आफ्नू तीतो प्रभावलाई कायम राख्नका लागि शरीरमा पनि अनेक कष्ट सहनेवाला, आफ्नू काममा धर्म र भाग्यको केही हानि पुऱ्याएर पनि प्रभाव वृद्धिको नै ध्यान राख्नेवाला एवं पुरातत्त्वको हानि पाउनेवाला, लामो आयु र जीवनको समयलाई केही तामसी प्रयोग द्वारा बिताउनेवाला, आफ्नू जिद्दीमा अडिइरहनेवाला खूब खर्च गर्ने र केही बन्धन झैं अनुभव गर्ने होला।

कु० नं० ६५२

७　५
८　६　४
९　३
१०　१२　२
११मं.　१

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री स्थानमा केही क्लेश सहनेवाला र व्यापारको पक्षमा केही विघ्न-बाधा र परिश्रम द्वारा सफलता पाउनेवाला, व्यापारको सम्बन्धमा केही लुकेका युक्तिहरूबाट लाभ उन्नतिको योजना बनाउनेवाला र धनको सम्बन्धमा केही संग्रह शक्तिको न्यूनता(कमी) पाउनेवाला र पिताको स्थानमा केही क्लेश, कष्टको योग परेको र दाजु-भाइ दिदी-बहिनीको पक्षमा केही कमी पाउनेवाला र धेरै परिश्रमले दैनिक कार्य गर्दै रहनेवाला, लामू आयु पाउनेवाला र शरीरमा केही चिन्ता पाउनेवाला र पुरातत्त्वको लाभ पाउनेवाला तथा राज-समाजका कामहरूमा र मान्नोन्नतिको मार्गमा महान् परिश्रम गर्नेखालको होला।

कु० नं० ६५३

७ ५
८ ६ ४
९ ३
१० १२मं. २
११ १

जुन व्यक्तिको मेष राशिको मगंल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस धेरै आय पाउनेवाला, जीवनको गुप्त शक्तिको बलियो विकास गर्नेवाला, पुरातत्त्वको विशेष लाभ र अधिकार पाउनेवाला, लाभको पक्षमा केही न्यूनता भेट्टाउने खालको कुर्नै वैदेशिक स्थानद्वारा शक्ति प्राप्त गर्नेवाला, गुप्त कर्मका बलको आड-भरोस मान्नेवाला, धेरै कष्टसाध्य कार्य गर्नेवाला, बर्ता डरलाग्दो र मस्त जीवन प्राप्त गर्नेवाला र जीवनका समयको ठूलो मूल्य पाउनेवाला तथा धेरै बढी कठिन परिश्रम द्वारा आफ्नू शक्तिको विकास पाउनेवाला व्यक्ति होला।

कु० नं० ६५४

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १मं.

जुन व्यक्तिको वृष राशिको मंगल लग्नबाट नवम स्थानमा छ भने त्यो मानिस पुरातत्त्व शक्तिको लाभ पाउनेवाला, लामू आयु भएको र बढी खर्च गर्नेवाला, मातृस्थानमा केही हानि पाउनेवाला र सुखका साधनहरूमा केही कमी अनुभव गर्नेवाला, धर्मस्थान र भाग्यस्थानमा केही दुर्बलता पाउनेवाला, यशको हानि पाउनेवाला र जीवनको समय भाग्यमानीले जस्तै सुखपूर्वक बिताउनेवाला, पुरुषार्थमा लुकेका शक्तिहरूको प्रयोगद्वारा उन्नति पाउनेवाला, केही गलत बाटोमा मस्तीको लाभ उठाउनेवाला र ईश्वरमा केही कम श्रद्धा-विश्वास राख्नेवाला, बडो परिश्रमी, सफल पुरुषार्थी तथा दाजु-भाइ दिदी-बहिनीको सम्बन्धमा केही सुख-दुःख मिश्रित योगपाउनेवाला होला।

कु० नं० ६५५

७ ५
८ ६ ४
९ ३
१० १२ २मं.
११ १

जुन व्यक्तिको मिथुन राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानलाई केही कष्टप्रद प्रमाणित हुनेवाला र पैत्रिक एवं पुरातत्त्वको लाभ पाउनेवाला र आफ्नू व्यापारिक सामाजिक उन्नतिमा केही सुख-दुःखको योग पाउनेवाला र देहमा केही कष्ट र परेशानीको योग पाउनेवाला र सन्तान पक्षमा केही विशेष शक्तिको प्रयोग गर्नेवाला, र दुःख-सुखको विशेष अनुभव बुद्धिद्वारा गर्नेवाला तथा कटुवाणी बोल्ने र गुप्त कर्मको प्रयोगले उन्नतिको आशा गर्नेवाला र उन्नतिका लागि ठूला-ठूला कष्टसाध्य प्रयत्न गर्ने तथा मातृस्थानमा वा सुखस्थानमा केही न्यूनता पाउने खालको एवं लामू आयु पाउनेवाला र जीवनको समय शानदार ढगंले व्यतीत गर्नेवाला र दाजु-भाइको पक्षमा दुःख-सुख पाउने र मानयुक्त प्रभावशाली होला।

कु० नं० ६५६

७ ५
८ ६ ४
९ ३मं.
१० १२ २
११ १

जुन व्यक्तिको कर्क राशिको मगंल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू आय र लाभको स्थानमा केही कमी पाउनेवाला, दाजु-भाइको पक्षबाट केही कष्ट अनुभव गर्नेवाला र लाभ प्राप्तिको निम्ति अनेक कष्टसाध्य कर्म गर्नेवाला र केही गुप्तरीतिले र उल्टो बाटोले पनि लाभ पाउनेवाला र विद्या-बुद्धिमा वा सन्तान पक्षमा निकै बल गरेर उन्नति गर्नेवाला र शत्रुस्थानलाई एवं मावली पक्षलाई केही हानि पुऱ्याउनेवाला र धन संग्रहको स्थानमा पनि केही हानि पाउनेवाला, केही लामू आयुको तथा केही चिन्तित जीवन व्यतीत गर्नेवाला र कुटुम्बको केही हानि पाउनेवाला पुरातत्त्वको सामान्य लाभ भेट्टाउने खालको होला।

कु० नं० ६५७

७ ५ ८ ६ ४मं. ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको सिंह राशिको मगंल लग्नबाट बार्हौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने र पुरातत्त्वको केही हानि पाउनेवाला र गुप्त शक्तिको बलले लुकेर अनेक काम गर्नेवाला र शत्रु स्थान एवं मावली पक्षको केही हानि पाउनेवाला र दाजु-भाइ दिदी-बहिनी र स्त्रीको पनि केही हानि पाउनेवाला, दैनिक व्यापारको पक्षमा केही हानि र कष्ट अनुभव गर्नेवाला तथा बाहिरी सम्बन्धबाट शक्ति प्राप्त गर्नेवाला र आफ्नू शक्तिको केही अनुचित प्रयोग गर्नेवाला, आयुको स्थानमा कहिले काहीं कुनै हानिको योग पाउनेवाला, जीवनको समयको केही दुर्बलता पाउने र केही परतन्त्रताको झैं योग पाउनेवाला र विदेशसित सम्बन्धित शक्तिको ठूलो आड-भरोस मान्नेवाला व्यक्ति होला।

कु० नं० ६५८

७ ५मं. ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# कन्या लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको कन्याराशिको बुध लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस लामो र अग्लो शरीर भएको तथा राजसी ऐश्वर्य भोग्नेवाला

कु० नं० ६५९

७ ५
८ ६बु. ४
९ ३
१० १२ २
११ १

प्रभावशाली र पितास्थानबाट उन्नति पाउनेवाला तर धेरै ठूलो बन्द-व्यापार गर्नेवाला, स्त्रीपक्षमा केही उदासीनता र केही कमी अनुभव गर्नेवाला र इन्द्रिय भोगादिक पक्षमा पनि निकै न्यूनता पाउनेवाला, ठूलो स्वाभिमानी र देहाभिमानी तथा निकै बाठो बुद्धिमान, कार्य कुशल, साना दैनिक व्यापारबाट घृणा मान्नेवाला, बढी बाठो राजनीतिज्ञ, कर्मिष्ठ र अगाध आमदानी र उन्नति पाउने तथा विवेकी व्यक्ति होला।

जुन व्यक्तिको तुला राशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धेरै धन कमाउने तथा व्यापार आदिबाट उन्नति पाउनेवाला,

कु० नं० ६६०

७बु. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

पिताको इज्जत पाउनेवाला, तथा धन कमाउनमा र धनको वृद्धिमा पूर्ण चातुर्यले काम सिद्ध पार्न जान्नेवाला, धन र कुटुम्बको बुद्धिलाई नै जीवनको मुख्य ध्येय मान्नेवाला, ठूलो धनी तथा इज्जतदार माननीय लामू आयुवाला, कार्य-कुशल, पुरातत्त्व र पैतृक सम्पत्ति पाउनेवाला र केही घेराबन्दीमा रहेर उन्नति गर्ने खालको व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै राम्रो पुरुषार्थ गर्ने भएको र उन्नति प्राप्त गर्नेवाला र धर्म-कर्मलाई मान्नेवाला, पितास्थानको शक्ति पाउने खालको होला। दाजु-भाइ दिदी-बहिनीको शक्ति पनि पाउने भएको र कार्य कुशलता द्वारा सफलता पाउनेवाला र सौम्य प्रकृतिको भएर पनि ठूलो साहस र विवेकको चातुर्यले काम सिद्ध पार्न जान्नेवाला र सम्मान प्राप्त गर्नेवाला तथा निकै उच्च श्रेणीको जस्तै वास-गाँस गरेर रहने भएको, निकै स्वाभिमानी, ईश्वरवादी र देह बल एवं बाहुबलको शक्ति भएको बडो उत्साही व्यक्ति होला।

कु० नं० ६६१

७ ५
८बु. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धन राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस बडो सुखपूर्वक रहनेवाला, पैतृक सम्पत्ति निकै पाउने भएको र ठूलो साज-सज्जाको सुन्दर भवन स्थानमा निवास गर्नेवाला, माता-पिताको सुख प्राप्त गर्नेवाला र सुख-शान्तिपूर्वक राम्रो बन्द-व्यापार गरेर मान-प्रतिष्ठा पाउने भएको निकै बाठो र कर्मिष्ठ सुन्दर शरीर भएको, बडो बुद्धिमान तथा स्वाभिमानी इच्छित वैभव युक्त तथा राज-समाजबाट सुख र सम्मान प्राप्त गर्नेवाला र देहबल र कर्मबल द्वारा सुखका अनेक साधन जोर्नेवाला, एक प्रकारको आनन्दी व्यक्ति होला।

कु० नं० ६६२

७ ५
८ ६ ४
९बु. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो बुद्धिमान, विद्याबान र सन्तान शक्ति प्राप्त गर्ने खालको, ठूलो स्वाभिमानी र कर्तव्य कर्मलाई राम्ररी जान्ने तथा व्यापार कर्मको बुद्धियोगले राम्रो लाभ पाउनेवाला, तथा सुन्दर र सुसज्जित काइदाले निकै प्रभावयुक्त भएर निवास गर्नेवाला, आत्मज्ञानी राज-समाजको नियम-कानूनमा पनि दखल राख्ने खालको होला। पिताद्वारा योग्यता प्राप्त गर्नेवाला र शीलयुक्त विवेकको शक्ति द्वारा कुराकानी गर्न जान्ने र आमदानीको वृद्धि गर्नका लागि बराबर प्रयत्न र ध्यान राख्नेवाला महान बाठो व्यक्ति होला।

कु० नं० ६६३

७ ५ ८ ६ ४ ९ ३ १० बु. १२ २ ११ १

जुन व्यक्तिको कुम्भ राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस केही परतन्त्रता युक्त रहनेवाला र मावली पक्षमा केही उन्नतिको योग पाउनेवाला र पिताको स्थानबाट केही वैमनस्यताको योग पाउने भएको र आफ्नू उन्नतिमा केही बाधा पाउनेवाला र रोग आदि झगडा-विवादमा रहेर नै केही कार्य सफल तुल्याउनेवाला, शत्रुपक्षबाट शान्तिपूर्वक विवेक शक्तिको द्वारा आफ्नू इच्छा पूर्ण गर्न जान्नेवाला तथा बढी खर्च गर्ने र केही गुप्त परेशानी युक्त कार्यमा पनि केही गौरव अनुभव गर्नेवाला र शारीरिक सौन्दर्य र कदमा केही न्यूनता पाउनेवाला र केही पापकर्म भोगनेवाला शीलयुक्त होला।

कु० नं० ६६४

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११बु. १

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस गृहस्थीमा आत्तिएको योग पाउनेवाला र पिताबाट तथा स्त्री स्थानबाट केही कमी र कष्ट अनुभव गर्ने खालको र शरीरमा केही दुर्बलता पाउनेवाला र त्यो कमजोर स्थितिमा पनि आफ्नू स्वाभिमान राख्न जान्ने होला। दैनिक रोजगार वा व्यापारमा केही न्यूनता र दुःख अनुभव गर्नेवाला र मान-सम्मानको रक्षा बडा कठिनले गर्न सक्नेवाला र स्त्रीको सम्भोग सम्बन्धित मामलामा आफ्नो प्रभावलाई केही न्यून र सुखको कमी अनुभव गर्नेवाला र व्यापारको पक्षमा बडो परिश्रम र केही सेवाको किसिमले र परेशानीको झैं काम गर्नेवाला, केही परतन्त्रता पनि पाउनेवाला र केही अनुचित कर्म गर्ने र व्यथित रहने खालको होला।

कु० नं० ६६५

७ ५
८ ६ ४
९ ३
१० १२बु. २
११ १

जुन व्यक्तिको मेष राशिका बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नो शरीर र पिताको सुख सम्बन्धमा केही हानि र क्लेशको योग पाउनेवाला, अनि आफ्नू उत्थानको सम्बन्धमा हृदयमा दुर्बलता र दुःख मान्नेवाला र विदेश आदिमा निवास गर्ने र वृद्धि आदिकको योजनामा लागिरहनेवाला, व्यापारको निम्ति संकष्ट सहनेवाला तथा पुरातत्त्व र गूढ युक्तिहरूबाट लाभ प्राप्त गर्नेवाला, शुभकर्म नगरेर आफ्नू मतको बाटोमा हिड्ने र आफ्नू ज्यान अर्पण गरेर अनेक कष्ट सहन गरी मान प्राप्त गरेर सुखी जीवन पिताउने खालको होला।

कु० नं० ६६६

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १बु.

जुन व्यक्तिको वृषराशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी होला, धर्म-कर्मको पालन गर्ने र पितास्थानबाट सहायता, मान-सम्मान र उन्नति पाउनेवाला, व्यापारमा सफलता पाउनेवाला तथा राज-समाजमा मान पाउनेवाला र सुन्दर सुसज्जित शरीरवाला र उचित कर्मको पालन गर्न जान्नेवाला र दाजु-भाइ दिदी-बहिनीहरू भएको र ईश्वरमा निष्ठा राख्नेवाला र आफ्नू व्यक्तित्वलाई राम्रो मान्नेवाला तथा दैवी सहायता र उन्नति पाउनेवाला तथा राजसी ठाट-बाट पाउनेवाला र पुरुषार्थ कर्मबाट फाइदा पाउने खालको होला।

कु० नं० ६६७

७ ५ ८ ६ ४ ९ ३ १० १२ २बु. ११ १

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू देह-बल र हृदय-बलले महान् उन्नति पाउनेवाला, शोभायुक्त सौन्दर्य प्राप्त गर्नेवाला, विवेकशक्ति द्वारा ठूलो बन्द-व्यापार गर्ने खालको होला। धेरै ठूलो मान-सम्मान पाउनेवाला, पिता स्थानबाट र समाजबाट उन्नति एवं सुख प्राप्त गर्ने खालको होला, राज्यबाट मान-सम्मान पाउनेवाला, भवन-भूमिको र माताको सुख प्राप्त गर्नेवाला र ठूलो सौम्य कर्म गर्नेवाला तथा आफूलाई स्वाभिमानी, वैभव युक्त ठाट-बाटले निवास गर्नेवाला, प्रभावशाली रजोगुणी स्वभाववाला, हाकिम जस्तो मिजास भएको होला।

कु० नं० ६६८

७ ५ ८ ६ ४ ९ ३बु. १० १२ २ ११ १

जुन व्यक्तिको कर्क राशिका बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट बढी लाभ पाउनेवाला तथा व्यापारबाट इच्छित लाभ कमाउनेवाला र राज्यसित सम्बन्धित विशेष फाइदा पाउनेवाला तथा दिव्य वस्त्राभूषण आदि धारण गर्नेवाला, अनि बढी चातुर्यले कुशलतापूर्वक काम गर्नेवाला तथा विद्यामा निपुणता पाउनेवाला, सन्तान सुख पाउने खालको होला। देह द्वारा सम्मान पाउने भएको र राजाको झैं स्वभाव राख्नेवाला र स्वतन्त्र मिजासको तथा देह र समाजको योगबाट विवेकशक्तिद्वारा बढी लाभ पाउने खालको होला।

कु० नं० ६६९

७ ५
८ ६ ४बु.
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको सिंह राशिका बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्नेवाला र विदेश आदिमा बस्न जानेवाला र पिता पक्षमा वा देह पक्षमा केही न्यूनता दुर्बलता र अशान्तिको योग पाउनेवाला र मान प्रतिष्ठा र बन्द व्यापारको निम्ति अन्य स्थानको सहयोग पाउनेवाला, अन्य स्थानमा नै आफ्नू शक्तिको परिचय दिनेवाला तथा झ्याउलाहरू र शत्रुपक्षमा केही शान्ति युक्त साहसले काम लिन जान्नेवाला, मावली पक्षमा केही माया स्नेह राख्नेवाला, केही अशान्ति युक्त एक्लो भए झैं अनुभव गर्नेवाला, शरीरको महान शक्तिद्वारा खर्चको संचालन गर्ने शक्ति प्राप्त गर्ने खालको होला।

कु० नं० ६७०

७ ५बु.
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्नान्तर-गुरुफलम्

जुन व्यक्तिको कन्या राशिको गुरू लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस उत्तम गृहस्थ सुख प्राप्त गर्नेवाला र सुयोग्य पत्नी पाउने खालको

कु० नं० ६७१

७ ५
८ ६ गु. ४
९ ३
१० १२ २
११ १

र माताको सुख आनन्द पाउनेवाला, निकै सुखयुक्त सुन्दर व्यापार गर्न जान्ने र भाग्यमानीमा गनिने खालको होला। गृहस्थीमा धर्म-कर्मको पनि ध्यान राख्नेवाला, सन्तान पक्षमा केही न्यूनता र दुःखको अनुभव गर्नेवाला, विद्या र बुद्धिमा केही न्यूनता वा कमजोरी पाउनेवाला, गृहस्थीका अनेक झंझटहरूले बुद्धिमा केही परेशानी अनुभव गर्नेवाला, बोल्नमा र कुरा बुझ्नमा केही कमजोरीयो योग पाउनेवाला र स्त्री सम्बन्धी मार्गका कारणहरूले बुद्धिमा केही कुण्ठित भए झैं योग परेको होला र बुद्धिमा केही अनुचित र संकीर्ण विचार राख्नेवाला, माननीय स्थूल देह, बाठो र सुखी होला।

जुन व्यक्तिको तुला राशिको गुरु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको शक्तिले इज्जतदार कहिने र भवन-भूमि आदिको सुख

कु० नं० ६७२

७ गु. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

प्राप्त गर्नेवाला, मातृस्थानबाट र स्त्री स्थानको सुखमा केही बन्धनको योग पाउनेवाला र दैनिक व्यापारबाट तथा स्त्रीको सम्बन्धबाट केही धन प्राप्त गर्नेवाला र पितास्थानबाट सहयोग पाउने खालको होला। राज-समाजमा सुख र सम्मान पाउनेवाला, जीवनमा केही सुखको अनुभव गर्नेवाला, लामू आयुष्य पाउने र पुरातत्त्वको सुख र लाभ प्राप्त गर्नेवाल, धेरै कुटुम्ब भएको र शत्रु पक्षमा प्रभाव राख्नेवाला, ठूलो व्यापारी र मावली पक्षमा केही न्यून सुखको अनुभव गर्ने र निकै साहसी व्यक्ति होला।

जुन व्यक्तिको वृश्चिक राशिको गुरू लग्नबाट तेस्रो स्थानमा छ भने त्यो मानिस सुखपूर्वक अनेक व्यापार गरेर इच्छित धन लाभ गर्नेवाला र सुन्दर एवं प्रभावशाली पत्नी पाउनेवाला र आफू पनि राम्रो कद-काठीवाला तथा खूब भोग सुख प्राप्त गर्नेवाला र गृहस्थ धर्मको निकै सुचारू रूपले पालन गर्नेवाला, तथा अनेक थरिका दिव्य पदार्थ प्राप्त गर्नेवाला र धर्म-कर्ममा श्रद्धा एवं विश्वास राख्नेवाला, मातृस्थानबाट शक्ति प्राप्त गर्नेवाला, दाजु-भाइ दिदी-बहिनी धेरै भएको, बर्ता परिश्रम गर्ने र प्रभावशाली एवं सबै काममा प्रवीण तथा ससुरालीबाट केही शक्ति पाउनेवाला र विवाह गरेपछि उन्नति गर्नेवाला। यी सबै कुराको सोन्ह वर्षको उमरमै विकास पाउनेवाला भाग्यमानी होला।

कु० नं० ६७३

७ ५
८गु. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धन राशिका गुरू लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस मातृस्थानको र स्त्रीस्थानको सुख प्राप्त गर्नेवाला र सम्पत्ति पाउनेवाला; बढी धन खर्च गर्नेवाला, व्यापारबाट सुख प्राप्त गर्नेवाला, पुरातत्त्वको लाभ पाउनेवाला र लामू आयु भएको तथा कुनै ठूलो भलादमी झैं सुखपूर्वक जीवनको समय व्यतीत गर्नेवाला र मान प्रतिष्ठा पाउनेवाला, सुखपूर्वक व्यापार गर्नेवाला निकै कर्मिष्ठ र पिता स्थानको सुख प्राप्त गर्नेवाला, अनि गृहस्थीको यथेच्छ सुख भोग्नेवाला, बाहिरी सम्बन्धबाट पनि व्यापारमा सुखको वृद्धि पाउनेवाला, गूढ कर्मले पनि सुखको मार्ग पाउनेवाला आनन्दी जीव होला।

कु० नं० ६७४

७ ५
८ ६ ४
९गु. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको गुरु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस मनुष्य आफ्नू गृहस्थ सुखको सम्बन्धमा ठूला-ठूला कष्ट अनुभव गर्नेवाला र मातृस्थानबाट र स्त्री पक्षमा कमी र दुर्बलता पाउनेवाला, दैनिक व्यापारमा केही अत्यास झैं अनुभव गर्नेवाला, विद्या-बुद्धिबाट केही न्यूनता पाउनेवाला, कुराकानीमा केही हचकचाउनेवाला र लाभ अधिक खोज्ने खालको सुख-शान्तिमा बाधा देखेर र वृद्धिको परेशानीहरू द्वारा सानो व्यापारमा उत्तम लाभ गर्नेवाला र धर्ममा श्रद्धा र विश्वास राख्नेवाला, शरीरले सुख र सम्मान पाउनेवाला र भोगविलासको सम्बन्धमा केही अनुचित विचार राख्ने व्यथित बुद्धिको होला।

कु० नं० ६७५

७ ५
८ ६ ४
९ ३
१० गु. १२ २
११ १

जुन व्यक्तिको कुम्भराशिका गुरु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मनुष्य गृहस्थीको सुखमा ठूलो बाधा पाउनेवाला, र मातृपक्षमा र स्त्रीपक्षमा केही क्लेश सहनेवाला र सुख शान्तिमा कमी पाउनेवाला र दैनिक व्यापारमा अनेक बाधा सहनेवाला, मान-सम्मान पाउनेवाला र केही धन संग्रह गर्नेवाला, आंशिक कुटुम्ब सुख पाउनेवाला, मावली पक्षमा केही सामान्य सुख प्राप्त गर्नेवाला र खूब खर्च गर्नेवाला, शत्रुपक्षमा केही नरम बनेर काम सिद्ध पार्नेवाला, कष्ट सहेर पनि प्रभाव राख्ने तथा भोग-विलासमा केही न्यूनता पाउनेवाला र रहन-सहनको स्थानमा केही त्रुटि पाउनेवाला तथा पितास्थानबाट सहायता पाउने र उच्च व्यापारको योजना बनाउने खालको व्यक्ति होला।

कु० नं० ६७६

७ ५
८ ६ ४
९ ३
१० १२ २
११गु. १

जुन व्यक्तिको मीन राशिका गुरु लग्नबाट सतौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो सुख-भोग प्राप्त गर्नेवाला, बर्ता प्रभावी र सुखद व्यापार गर्नेवाला, बढी लाभ पाउनेवाला र दैनिक व्यापार कर्मले नै ठूलो सम्मान र सुखको वृद्धि पाउनेवाला होला। सुखको वृद्धि पाउनेवाला, स्त्रीमा केही शान्तिको अनुभव गर्ने खालको तथा माता स्थानबाट राम्रो योग पाउनेवाला, धेरै ठूलो पुरुषार्थ गर्न जान्नेवाला, दाजु-भाइ दिदी-बहिनी भएको, राम्रो कद-काठी भएको, अनेक वस्तुहरूको सुख लाभ प्राप्त गर्नेवाला, ठूलो परिश्रमी, विलाषी र हृदय-बलको तागतले बडी सफलता पाउनेवाला व्यक्ति होला।

कु० नं० ६७७

७ ५
८ ६ ४
९ ३
१० १२गु. २
११ १

जुन व्यक्तिको मेष राशिको गुरु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस गृहस्थ जीवनमा निकै ठूलो दु:ख पाउनेवाला र स्त्री पक्षको केही क्लेश र वियोग सहने खालको तथ स्त्री पक्षको पूर्ति केही गहीरो चालाहरूले एवं कूटयुक्तिहरूले पूरा गर्न जान्नेवाला, र दैनिक व्यापारको पक्षमा ठूला-ठूला कष्टहरू सहन गरेर सफलता पाउनेवाला र धन संग्रहको चेष्टा गर्ने खालको र जीवनको समय प्रभावयुक्त र विशेष बडप्पनले बिताउन जान्ने खालको होला। पुरातत्त्वको भूमि लाभ पाउनेवाला, लामू आयु पाउनेवाला र केही गुप्त युक्तिहरूले व्यापारको लाभ कमाउने भएको र अशान्तियुक्त एवं केही पहिलो गम्भीर वस्तुको लाभ जीवनलाई सुखी तुल्याउनको निम्ति हृदय-बलले प्राप्त गर्ने खालको होला।

कु० नं० ६७८

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १गु.

जुन व्यक्तिको वृष राशिको गुरु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमानीमा गनिने र हृदय बलको सुख प्राप्त गर्नेवाला तथा ईश्वरको ध्यान गर्नेवाला एवं भाग्यको शक्तिले गृहस्थीको सुख पाउनेवाला, भाग्य-शक्तिले नै व्यापार चलाउने खालको होला। लौकिक र पारलौकिक दुवैको पूरा ध्यान राख्नेवाला तथा भाग्यमा केही न्यूनता वा कमजोरी अनुभव गर्नेवाला, आमा र पत्नी दुवै धार्मिक विचार भएका भेट्ने खालको होला। भवन-भूमि पाउने र दाजु-भाइ दिदी-बहिनी भएको, पुरुषार्थ गर्ने तथा तत्त्वगुणी, दैविक सुख पाउनेवाला, सन्तान कष्टको योग अनुभव गर्नेवाला, बुद्धिमा न्यूनता, विद्यामा कमी र वाणी द्वारा केही कमजोर तथा केही त्रुटियुक्त शब्द बोल्ने, शान्तिप्रिय दूरदर्शी र परोपकारी खालको व्यक्ति होला।

कु० नं० ६७९

७ ५ ८ ६ ४ ९ ३ १० १२ २गु. ११ १

जुन व्यक्तिको मिथुन राशिको गुरु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रतापी, कर्मिष्ठ र राजसी भोग-विलास पाउनेवाला, ठूलो व्यापार गर्नेवाला र खूब धन कमाउने तथा भवन-भूमि आदि जोर्नेवाला, माता-पिताको स्थानबाट सुखको योग पाउने, राज-समाजमा मान-सम्मान पाउने खालको होला। स्त्री स्थानबाट सुख र प्रभाव एवं सौन्दर्य पाउनेवाला, व्यापारमा इज्जत कमाउने तथा शुभ कर्म गर्नेवाला, हृदयमा राजसी वृत्ति भएको र बर्ता कुटुम्व भएको, मावली पक्षबाट केही सामान्य सुख पाउने र सुख शान्ति युक्त कर्म गरेर उन्नति र प्रतिष्ठा पाउने आनन्दी व्यक्ति होला।

कु० नं० ६८०

७ ५ ८ ६ ४ ९ ३गु. १० १२ २ ११ १

जुन व्यक्तिको कर्क राशिको गुरु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारबाट बढी लाभ पाउने र निकै राम्री पत्नीको सुख प्राप्त गर्ने तथा उत्तम भोग-विलास, पाउने र माताको एवं भूमि-भवनको पनि इच्छित लाभ पाउनेवाला तथा दाजु-भाइ दिदी-बहिनीको सुख पाउनेवाला र सन्तान-पक्षमा केही न्यूनता अनुभव गर्नेवाला र विद्या-बुद्धिमा दुर्बलता पाउने तथा निकै राम्रो पुरुषार्थ गरेर सफलता पाउने खालको र धेरै थरी अमूल्य पदार्थहरू भोग गर्नेवाला अनि सुखयुक्त कर्म गरेर पनि ठूलो नाफा कमाउने अनि अनेक थरिका वाहनहरूको सुख प्राप्त गर्नेवाला, सदैव प्रसन्न रहनेवाला, केही त्रुटियुक्त वाणी बोल्नेवाला र हृदयमा आनन्द भए पनि मन चिन्तित रहने खालको व्यक्ति होला।

कु० नं० ६८१

७ ५ ८ ६ ४गु. ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको सिंह राशिको गुरु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्ने र स्त्रीको हानि पाउनेवाला तथा दैनिक व्यापारमा विवाद झ्याउलो पाउनेवाला र मातृस्थानमा केही न्यूनता वा दुर्बलता पाउनेखालको होला। अन्य बाहिरी स्थानहरू बाट सुखका साधन पाउनेवाला, मातृस्थानको वृद्धिमा बर्ता ध्यान दिनेवाला, जीवनको समयमा सुखको केही अनुभव गर्नेवाला र आयुको पूर्ण सुख प्राप्त गर्नेवाला, अन्यान्य स्थानहरूबाट स्त्री र ससुरालीको योग प्राप्त गर्नेवाला, खर्चको बलले प्रभाव राख्ने र पुरातत्त्वको केही लाभ पाउनेवाला, गुप्त भएका गुढ युक्तिहरूले पनि सुख प्राप्त गर्नेवाला र सम्पत्तिको केही लाभ-हानि प्राप्त गर्नेवाला, मातृस्थानको बलले पनि केही दैनिक खर्च चलाउन जान्ने खालको व्यक्ति होला।

कु० नं० ६८२

७ ५गु. ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# कन्या लग्नान्तर - शुक्रफलम्

जुन व्यक्तिको कन्याराशिको शुक्र लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस शरीरमा केही दुर्बलता पाउनेवाला र धन प्राप्तिका लागि केही धर्मको हानि र शारीरिक परिश्रम गरेर धन कमाउनेवाला र धनमा आंशिक न्यूनता पाउने खालको होला। भाग्यमानी पत्नी पाउने र निकै ठूलो दैनिक व्यापार गर्नेवाला, भोग-विलासको प्राप्तिमा अधिकता पाउनेवाला, विवाह भइसकेपछि व्यापारमा उन्नति पाउनेवाला र केही विवाद र अडको पाइसकेपछि व्यापारमा भाग्य-शक्तिले पनि विशेष उन्नति गर्नेवाला तथा ठूला-ठूला युक्ति जान्नेवाला र आफ्नू हृदय भित्र भाग्यको सम्बन्धमा केही दुर्बलता वा न्यूनता पाउने, निकै बाठो व्यक्ति होला।

कु० नं० ६८३

७ ५
८ ६शु. ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको तुला राशिको शुक्र लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस ठूलो धनवान र भाग्यमानी तथा इज्जतदार, ठूलो कुटुम्बवाला र बढी भाग्यशाली, अकस्मात् धनको वृद्धि पाउने तथा जीवनको समय निकै भलादमी र धनीको झैं काइदाले व्यतीत गर्नेवाला एवं लामू आयु पाउने र पुरातत्त्वको केही लाभ पाउनेवाला एवं गूढ युक्तिहरू द्वारा पनि लाभ पाउनेवाला, तत्वग्राही, धर्मज्ञ, माननीय तथा धर्मको वास्तविक रूपमा वा ईश्वर-भक्तिमा केही बन्धन पाउने तथा पूर्वजन्मका पुण्यको बलले धनको वृद्धि पाउनेवाला व्यक्ति होला।

कु० नं० ६८४

७शु. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको वृश्चिकराशिको शुक्र लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यको शक्तिबाट धनको वृद्धि पाउनेवाला र धेरै सुयश कमाउने खालको होला। निकै धर्मात्मा, न्याययुक्त पुरुषार्थले धन कमाउन जान्ने र दाजु-भाइ दिदी-बहिनी धेरै भएको तथा धार्मिक उन्नतिको लागि र धन, बलद्वारा काम सिद्ध पार्न जान्ने तथा राम्रो शरीर भएको ठूलो भाग्यमानी लौकिक र पारलौकिक दुवै धर्मको पालन गर्न जान्ने निकै बाठो माननीय उन्नतिशील र ईश्वरीय शक्तिको ठूलो विश्वास र भर मात्रै भएको दूरदर्शी, इज्जतदार, प्रभावशाली र सुग्घर सफा मनपराउने खालको व्यक्ति होला।

कु० नं० ६८५

७ ५
८ शु. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धन राशिको शुक्र लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस धन संग्रह गर्न जान्ने, भाग्यशाली, कर्मिष्ठ र भूमि-भवन भएको तथा सुखपूर्वक धन प्राप्त गर्नेवाला, माता-पितको स्थानबाट लाभ पाउनेवाला र सम्मानयुक्त व्यापारबाट धन कमाउने र धर्म-कर्मको पालन गर्न जान्ने, माननीय, निकै बाठो कार्य कुशल, कुटुम्ब धेरै भएको इज्जतदार, राज-समाजमा मान्य र मातृस्थानमा केही न्यूनताको योग पाउनेवाला, समाज-सेवा र धन तथा भाग्यको शक्तिले सुखका साधन पाउने, भोगी व्यक्ति होला।

कु० नं० ६८६

७ ५
८ ६ ४
९शु. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको शुक्र लग्नबाट पाँचौं स्थानमा छ भने त्यो बाठो, भाग्यवान र धर्मलाई राम्ररी जान्ने खालको, धार्मिक विषयमा राम्रो बोल्नेवाला, खूब धन कमाउनेवाला तथा ज्योतिषमा प्रेम भएको, राम्रो नीतिज्ञ र विशेष सन्तान सुख प्राप्त गर्नेवाला तथा कुटुम्ब सुख उठाउने खालको, माननीय, बुजुर्गको फाइदा जान्नेवाला, अनेक लाभयुक्त र ईश्वरीय शक्तिको चमत्कार अनुभव गर्नेवाला, निकै कुरा बुझ्ने खालको, दयावान र दूरदर्शी व्यक्ति होला।

कु० नं० ६८७

७ ५ ८ ६ ४ ९ ३ १० शु. १२ २ ११ १

जुन व्यक्तिको कुम्भ राशिको शुक्र लग्नबाट छैठों स्थानमा छ भने त्यो मानिस ठूलो सफलता एवं कूटनीति एवं बांगा-टिंगा युक्तिले चाल चल्नेवाला, धर्मको केही हानि गर्ने खालको होला। भेदयुक्त कार्वाइले, धन र धर्मको बलले शत्रुमाथि विजय पाउनेवाला, भाग्यको सम्बन्धमा केही कष्ट अनुभव गर्नेवाला र धन संग्रहको सम्बन्धमा केही दुर्बलता अनुभव गर्नेवाला र बढी खर्च भएर पनि केही वास्ता नगरे झैं अनुभव गर्नेवाला, भाग्यमानी, मावली भएको र मावलीबाट आंशिक लाभ पाउनेवाला र ईश्वरको विश्वास र श्रद्धाको पालनमा केही न्यूनता पाउनेवाला, प्रभावको स्थानमा सज्जनता र शक्ति एवं बठ्याइँ चातुर्यले काम गर्ने होला।

कु० नं० ६८८

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११शु. १

जुन व्यक्तिको मीन राशिको शुक्र लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस भाग्यको शक्तिले धन-वृद्धिको योग प्राप्त गर्नेवाला र धेरै सुयश पाउने खालको होला। न्याययुक्त, धर्मात्मा र पुरुषार्थ द्वारा धन कमाउनेवाला, दाजु-भाइ दिदी-बहिनी धेरै भएको, धार्मिक विचार-धाराको योग परेको, धनी ससुराली भएको र बढी कुटुम्ब-शक्ति प्राप्त गर्नेवाला र देहमा केही कमी वा न्यूनता पाउनेवाला, धर्म कार्य पनि गरिरहने, इज्जतदार र भाग्यको तागत द्वारा र महान् चातुर्यहरूले अनेकानेक प्रकारका लौकिक र पारलौकिक सफलताहरू प्राप्त गर्ने सुयोग्य विद्वान व्यक्ति होला।

कु० नं० ६८९

७ ५ ८ ६ ४ ९ ३ १० १२शु. २ ११ १

जुन व्यक्तिको मेष राशिको शुक्र लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस भाग्यमा र कुटुम्बमा दुर्बलता वा न्यूनताको योग परेको तथा धन स्थानमा हानि पाउने भएको, धर्मको राम्ररी पालन गर्न सक्नेवाला, धन र भाग्यको उन्नतिका लागि विदेश आदिमा अनेक कष्ट र झ्याउलाहरू सहित सफलता पाउनेवाला र धन-प्राप्तिको लागि न्याय-अन्यायको कुनै वास्ता नगर्ने खालको होला। भाग्यको उन्नतिका लागि कूटनीतिको प्रयोग गरेर आफ्नू काम सिद्ध पार्न समर्थ भएको व्यक्ति होला। लामू आयु भएको र जीवनको धेरै वर्ष केही इज्जतदार र प्रतिष्ठित व्यक्ति झैं बिताउनेवाला, पुरातत्त्व धनको लाभ पाउने खालको व्यक्ति होला।

कु० नं० ६९०

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १शु.

जुन व्यक्तिको वृष राशिको शुक्र लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै सौभाग्यशाली र धर्मात्मा एवं भाग्यको शक्तिद्वारा स्वतः व्यापारमा उन्नति प्राप्त गर्नेवाला, अकस्मात धन पाउनेवाला र कुटुम्बको सुख प्राप्त गर्ने भएको तथा ठूलो यश कमाउनेवाला, बढी दूरदर्शी र धनको तागतले धर्म गर्नेवाला तथा धर्मले नै धनको वृद्धि प्राप्त गर्ने खालको होला। दाजु-भाइ, दिदी-बहिनी र कुटुम्ब आदिको सुख प्राप्त हुनेवाला, निकै राम्रो पुरुषार्थ गर्ने खालको तथा सफलता युक्त हिम्मतवाला एवं माननीय, इज्जतदार तथा ईश्वरको प्रति श्रद्धा विश्वास नभएको व्यक्ति होला।

कु० नं० ६९१

७ ५ ८ ६ ४ ९ ३ १० १२ २शु. ११ १

जुन व्यक्तिको मिथुन राशिको शुक्र लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै ठूलो सम्मान पाउनेवाला र धेरै बढी भाग्यमानीमा गनिने भएको तथा भाग्यके शक्तिद्वारा र धनको तागतले निकै बढी उन्नति गर्ने र पितास्थानबाट इज्जत र सफलता प्राप्त गर्ने खालको तथा धेरै बढी व्यापार आदिबाट अनेक चातुर्यहरू द्वारा धन कमाउने भएको अनि राज-समाजबाट मान पाउने र धर्म-कर्म गर्दै रहनेवाला तथा मातृस्थानबाट सुख प्राप्त गर्नेवाला र भवन-भूमि प्रसस्त भएको अनि कुटुम्बको सुख प्राप्त गर्ने र प्रभावशाली इज्जतदार, धनवान, धेरै बाठो तथा समाजमा बढी लाभ र मान प्राप्त गर्नेवाला शोभा युक्त व्यक्तित्व भएको होला।

कु० नं० ६९२

७ ५ ८ ६ ४ ९ ३शु. १० १२ २ ११ १

जुन व्यक्तिको कर्क राशिको शुक्र लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस भाग्य-शक्तिबाट खूब धन कमाउनेवाला, निकै बाठो, बुद्धिमान र धर्मको नियमपूर्वक पालन गर्नेवाला र सन्तान सुख प्राप्त गर्ने भएको व्यक्ति होला। कौटुम्बिक लाभ पाउनेवाला तथा धर्म-कर्मको बलले पनि लाभ कमाउनेवाला अनि अनेक वस्त्राभूषण र दिव्य पदार्थ प्राप्त गर्नेवाला र लौकिक एवं पारलौकिक ज्ञान भएको र निकै चातुर्य युक्त कुराकानी गर्न जान्ने भएको, तथा इज्जतदार, माननीय र दैवयोगले पनि निकै सफलता प्राप्त गर्नेवाला, साहसी र अन्यायको विरोधी होला।

कु० नं० ६९३

७ ५
८ ६ ४शु.
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको सिंह राशिको शुक्र लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्नेवाला भाग्यमा केही कमी र दुर्बलता पाउनेवाला, अन्यान्य स्थानहरूको योगले आफ्नू काम सिद्ध पार्न जान्नेवाला र केही अपयश र अशान्ति प्राप्त गर्नेवाला र कौटुम्बिक हानि पाउनेवाला, खर्चको स्थानमा केही नीरसतायुक्त शक्ति पाउनेवाला र शत्रुहरूलाई मित्र बनाउन जान्ने तथा मावली पक्षमा केही राम्रो पाउनेवाला, धन र भाग्यको पक्षमा केही नीरसताको योग पाउनेवाला र धर्मको हानि पाउनेवाला होला।

कु० नं० ६९४

७ ५शु.
८ ६ ४
९ ३
१० १२ २
११ १

# कन्या लग्नान्तर-शनिफलम्

जुन व्यक्तिको कन्या राशिको शनि लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस ठूलो विजयी गम्भीर र बांगो विचार राख्ने भएको र थरि-थरिका युक्तिहरू द्वारा प्रभावको उन्नति पाउनेवाला र योग्य सन्तान र विद्या पनि अंग्रेजी फैशनको पाउनेवाला र दैनिक व्यापारको सम्बन्धमा केही अपठेरो परे पनि वृद्धि पाउनेवाला र सन्तान पक्षमा केही वैमनस्यता वा केही शक्ति एवं केही वियोग पनि पाउनेवाला तथा बढी पुरुषार्थ गर्नेसक्ने र दाजु-भाइको पक्षमा केही विरोधाभासको भावना राख्ने तथा विद्याको सम्बन्धमा पिता-स्थानबाट केही प्रभाव र सहयोगग पाउनेवाला, किन्तु पितासित तर्कद्वारा अनेक विरोधी विचार पनि ससम्मान राख्नेवाला र स्वय शरीरबाट केही रोग वा सतर्कता एवं तेजवाणी वा बहादुरी र विवेक राख्ने खालको साहसी व्यक्ति होला।

कु० नं० ६९५

७ ५ ८ ६श. ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको तुला राशिको शनि लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस बुद्धिको अनेक बांगो युक्तिद्वारा बेसरी धन कमाउने खालको र धन प्राप्तिका लागि साना-ठूला अनेक परिश्रमको शक्तिले महान् कार्य गर्नेवाला, मातृस्थानबाट केही हानि पाउने खालको र लाभको लागि खूब परिश्रम तथा अनेक चातुर्य द्वारा काम सिद्ध पार्ने भएको र जीवनको दिनचर्यामा केही अशान्ति अनुभव गर्ने खालको र आयु सम्बन्धमा केही वास्ता नगर्ने योग परेको तथा सन्तान पक्षमा केही अपठेराहरूको साथ-साथै वृद्धिको योग पाउनेवाला र मावली पक्षबाट पनि केही आर्थिक उन्नतिको योग पाउनेवाला तथा विद्या-बुद्धिमा केही अपठेरा कलाहरूको योग संग्रह गर्नेवाला तथा मनमा अशान्तिले घर गरिसकेको व्यक्ति होला।

कु० नं० ६९६

७श. ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको वृश्चिक राशिको शनि लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै ठूलो बुद्धियोग द्वारा पुरुषार्थ गर्नेवाला, निकै गहीरो हिम्मत वाला युक्ति र बुद्धि द्वारा प्रभाव उत्पन्न गर्नेवाला, विशेष खर्चका योजनाहरू द्वारा केही दिक्दारीको भावना अनुभव गर्नेवाला, अलि उत्ताउलो र जिद्दी स्वभावको सन्तान पाउनेवाला, वाक्-चातुर्यले झूठो कुरालाई पनि सत्यमा परिणत पार्ने क्षमता भएको, शत्रु र रोगादिमा विजय प्राप्त गर्ने, परिश्रमले भाग्यको उन्नति गर्न सक्ने भएको, दाजु-भाइको पक्षमा आफ्नू प्रभाव राख्ने भएको, केही प्रभावशाली मावलीवाला र झगडा-विवाद र झ्याउलो परेको मामलामा उन्नति र सफलताको योजना बनाउन जान्ने र हिम्मती एवं प्रभावशाली होला।

कु० नं० ६९७

७ ५ ८श. ६ ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको धन राशिको लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू भूमि-भवन अनावश्यक धाक देखाएर सुखको बलद्वारा बढी प्रभाव राख्नेवाला र रोग एवं अपठेराहरूसित सम्बन्धित बुद्धिद्वारा सुख प्राप्त गर्नेवाला, स्वयं पनि शरीरमा केही रोग र परेशानी सहनेवाला र मावलीबाट केही सुख पाउने तथा झगडा विवादमा घरै बसी विजय पाउनेवाला, बहादुरी र हुल्याहाको दाबी गर्नेवाला, माता-पिताको सुखमा केही कमी र क्लेशको योग पाउनेवाला र माताको स्थानमा कुनै अर्की स्त्रीको पनि योग पाउनेवाला, समाजमा निकै सम्मान पाउने खालको होला। सुख शान्तिको सम्बन्धमा केही न्यूनता पाउने र सन्तान पक्षबाट केही सुख-दुःखको मिश्रित योग पाउनेवाला केही कूटनीति जान्ने खालको व्यक्ति होला।

कु० नं० ६९८

७ ५ ८ ६ ४ ९श. ३ १० १२ २ ११ १

जुन व्यक्तिको मकर राशिको शनि लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस निकै तीक्ष्ण बुद्धि भएको, बुद्धिबाट सदैव गुप्त युक्तिहरूको नै बलियो कुरा गर्नेवाला र सन्तानको सम्बन्धमा केही अपठेरो सहित वृद्धि पाउनेवाला, धन र व्यापारको सम्बन्धमा बर्ता युक्ति र बल लगाउने भएको र शत्रु पक्षमा बुद्धिको युक्तिहरूबाट विजय पाउनेवाला, झगडा, विवादको र रोगादिको सम्बन्धमा निकै ज्ञान राख्नेवाला र स्त्री स्थानमा यौटी स्त्रीसित सन्तोष नमान्नेवाला, स्त्री पक्षमा र दैनिक व्यापारको पक्षमा केही क्लेश र परिश्रम सहन सक्नेवाला, निकै बाठो र बढी रिस भएको व्यक्ति होला।

कु० नं० ६९९

| | | | |
|---|---|---|---|
| | ७ | | ५ |
| ८ | | ६ | ४ |
| | ९ | | ३ |
| १० श. | | १२ | २ |
| | ११ | | १ |

जुन व्यक्तिको कुम्भ राशिको शनि लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस बुद्धिको विकृत युक्तिले ठूलो प्रभाव राख्न जान्ने र शत्रुपक्षको दमन गर्नेवाला तथा मावली पक्षबाट केही प्रभावको योग परेको विचार राख्न जान्नेवाला झगडा र रोग आदिको वास्ता नराख्ने खालको होला। दाजु-भाइसित केही कटुता वा विरोध सम्बन्ध राख्नेवाला, जीवनको समयमा केही अशान्ति पाउने खालको र पुरातत्त्वमा केही कमी अनुभव गर्नेवाला र खर्चको सम्बन्धमा केही क्लेश अनुभव गर्ने भएको र सन्तान पक्षबाट निकै क्लेशको योग पाउनेवाला र विद्यामा केही न्यूनता पाउनेवाला तथा तामसी विद्यामा केही निपुणता प्राप्त गरेको र सदैव बांगो घुमाई-फिराई कुराकानी गर्ने वा आफ्नू पक्ष प्रस्तुत गर्नेवाला, संस्कृत विद्याको घोर विरोध गर्ने वाला र हरबखत आफ्नू प्रभाव बुद्धिको युक्तिहरू विचार गरिरहनेवाला र वृद्धिबाट ठूलो कठिन परिश्रम गर्नेवाला तथा बढी रिस गर्ने र प्रभावशाली व्यक्ति होला।

कु० नं० ७००

| | | | |
|---|---|---|---|
| | ७ | | ५ |
| ८ | | ६ | ४ |
| | ९ | | ३ |
| १० | | १२ | २ |
| | ११श. | | १ |

जुन व्यक्तिको मीन राशिको शनि लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै थरिका दैनिक व्यापार गर्ने भएको तथा धेर किसिमले न्यूनाधिक स्त्री सम्भोग गर्नेवाला, स्त्री पक्षमा साना-ठूला अनेक झ्याउला र क्लेशहरू पनि सहनेवाला अनि सन्तान पक्ष केही क्लेशित रहेर स्त्रीको भाग्यद्वारा सन्तान प्राप्त गर्नेवाला र मातृ-स्थानमा क्लेश-कष्ट पाउने खालको होला। सुखको सम्बन्धमा कुनै अर्की स्त्रीबाट मातृ-सहयोग प्राप्त गर्नेवाला तथा व्यापार वृद्धिको बर्ता विचार गरिरहनेवाला र शरीरमा केही रोग क्लेश सहनेवाला, रोजगारमा आफ्नू प्रभाव राख्नेवाला तथा मतलबको वा कामलाग्ने विद्या संग्रह गर्ने, अनि धर्म-कर्मको सम्बन्धमा तर्क-वितर्क गर्ने भए पनि साहसी व्यक्ति होला।

कु० नं० ७०१

जुन व्यक्तिको मेष राशिको शनि लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस सन्तान पक्षबाट निकै कष्ट अनुभव गर्नेवाला, थोरै विद्या प्राप्त गर्ने र जाती-नजाती वा निन्दनीय युक्तिहरूद्वारा, आफ्नू काम सिद्ध पार्न जान्ने, झूठो बोल्ने र लुकाई-छिपाईको विषयमा निकै ठूलो योग्यता भएको तथा सेवा र चिन्ताहरूमा गाडिएर समय व्यतीत गर्ने खालको होला। धेरै इच्छा गर्नेवाला र पुरातत्त्वको हानि गर्ने तथा व्यापार गर्नमा बढी कुशलता राख्ने भएको, अनि मावली पक्षको हानि पाउनेवाला तथा बुद्धिमा सदैव चिन्तित रहेर सोचिरहनेवाला र धन प्राप्तिका लागि अनेक थरिका बांगा उपायहरू झिक्न जान्ने. महान कूटनीतिले काम सिद्ध पार्न जान्नेवाला र जीवनकालमा साना-ठूला अनेक संकट सहनेवाला, धेरै बोल्ने अनि गाँजा-भांग सुर्ती आदि खाइरहनेवाला, उदर विकार वा गुदाको रोगले पीडित रहने खालको बढी चिन्ता गर्ने व्यक्ति होला।

कु० नं० ७०२

जुन व्यक्तिको वृष राशिको शनि लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो बुद्धिमान बर्ता बाठो र बढी भाग्यमानी देखिने खालको होला।

कु० नं० ७०३

७ ५
८ ६ ४
९ ३
१० १२ २श.
११ १

सन्तानबाट सुख पाउनेवाला, निकै प्रभावशाली कठोर परिश्रमी तथा मावलीबाट उन्नति पाउनेवाला, अनेक थरिका भेद युक्तिहरूले सफलता पाउने भएको र ठूलो लाभ कमाउनेवाला र झगडा-विवाद रोगादिको विषयमा राम्रो दक्षता राख्नेवाला र आफ्नू प्रभाव इज्जत वृद्धिको सदैव योजना बनाइरहनेवाला र आफ्नू बुद्धि बलद्वारा र भाग्यको सहयोगले शत्रुलाई न्यूराउनेवाला तथा धर्म स्थानमा केही युक्तिसहित निकै रुचि र पूर्ण ज्ञान राख्ने भएको तथा पाप-पुण्यको बढी व्याख्या गर्न जान्ने, निकै बाठो र दाजु-भाइको पक्षमा शत्रुताको भाव राख्नेवाला, काइदा साथ उल्टो-सोझो लडाई लड्नेवाला, निकै उन्नति गर्ने र साहसी, हिम्मती बढी रिसाहा व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको शनि लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू योग्यताले आफ्नू प्रभावको वृद्धि गर्नेवाला तथा बुद्धि-

कु० नं० ७०४

७ ५
८ ६ ४
९ ३श.
१० १२ २
११ १

बल द्वारा ठूलो सम्मान प्राप्त गर्नेवाला, सन्तान पक्षमा केही अपठेरोको साथै मान पाउनेवाला र बुद्धिद्वारा ठूला-ठूला युक्तिबाट व्यापारमा सफलता पाउनेवाला र खर्चको सम्बन्धमा केही तीतो-पीरो र केही असुविस्ता अनुभव गर्नेवाला र मातृस्थानमा केही झ्याउलाहरू नाघेर वृद्धिको योग बनाउन जान्ने, आमाको स्थानमा केही अरुचि पाउनेवाला र व्यापारको स्थानमा नित्य नवीन युक्तिहरू र उचित बाटो खोज्न जान्ने खालको तथा बढी उच्च कार्य-प्रवीण, साहसी व्यक्ति होला।

जुन व्यक्तिको कर्क राशिको शनि लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बुद्धिका युक्तिहरूद्वारा धेरै लाभ कमाउनेवाला र बांगो बाटो द्वारा पनि लाभ कमाउनेवाला तथा अर्काको झगडा-विवाद आफ्नू टाउकोमा बोक्न पनि जान्ने, सन्तानको लाभ केही कष्टले राम्रो पाउनेवाला र जीवनको समयमा सधैं अशान्ति अनुभव गर्ने र पुरातत्त्वमा केही न्यूनता पाउने तथा शरीरमा केही अस्वस्थताले सताइरहने तथा धेरै बांगा-सोझा किसिमले कुराकानी गर्ने, निकै हिम्मत भएको, बुद्धिमान, चतुर र धन कमाउने खालको, बढी होशियार र शत्रुमा विजय प्राप्त गर्नेवाला र आफ्नू प्रभाव पार्न जान्ने तथा आफ्नू निम्ति यथार्थ लाभ र वस्तुहरूमा केही न्यूनता अनुभव गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० ७०५

७ ५ ८ ६ ४श. ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको सिंह राशिका शनि लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस अनावश्यक खर्चले परेशान रहनेवाला, सन्तान पक्षबाट हानि र क्लेश पाउनेवाला, तथा विद्या-बुद्धिमा न्यूनता पाउनेवाला र अनेक युक्तिहरूले कार्यसिद्ध पार्न जान्नेवाला तथा धन वृद्धिको निकै ठूलो योजना तयार पार्नेवाला, अन्यान्य बाहिरी स्थानबाट काम गर्न जान्ने र भाग्यको उन्नतिका लागि विशेष राम्रो प्रयत्न गर्दै रहनेवाला र आफ्नू प्रभावमा केही न्यूनता अनुभव गर्नेवाला र हिम्मती, सदैव बुद्धिमा चिन्ता पाउनेवाला, धर्म-कर्ममा आस्था भएको, चिन्तामा ग्रसित भएर धेरै परका कुरामा गाडिइरहने अनि थोरै बोल्नेवाला र मावली पक्षमा केही हानि पाउने खालको होला।

कु० नं० ७०६

७ ५श. ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# कन्यालग्नान्तर - राहुफलम्

जुन व्यक्तिको कन्या राशिको राहु लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस धेरै चातुर्यले कुराकानी गर्न जान्ने खालको र आफ्नू प्रभाव राख्न र गुप्त युक्तिहरू द्वारा बढी सफलता प्राप्त गर्नेवाला र आफ्नू आन्तरिक परिस्थितिको दुर्बलता-न्यूनता लुकाएर आफ्नू सज्जनता एवं योग्यताको विशेष परिचय दिनेवाला र आफ्नू वास्तविक परिस्थितिमा न्यूनता, दुर्बलता अनुभव गर्ने खालको होला। कहिले काहीं शरीरमा केही सकंट सहनेवाला र केही अपूर्ण सुखको अनुभव गर्नेवाला तथा स्त्री र व्यापारको स्थानमा तीखो दृष्टि पुऱ्याउनेवाला र स्थायी नाम कमाउनका लागि र महान् सफलता पाउनका निम्ति प्रयत्न र परिश्रम गरिरहने खालको व्यक्ति होला।

कु० नं० ७०७

७ ५ ८ ६रा. ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको तुला राशिको राहु लग्नबाट दोस्रो स्थानमा छ भने त्यो मानिस धनको पक्षमा केही न्यूनता पाउनेवाला र केही कुटुम्ब-क्लेश पाउनेवाला र धनको सम्बन्धमा केही बाहिरी आडम्बरको अनुसार आन्तरिक दुर्बलता पाउनेवाला र कहिले काहीं ऋण लिएर पनि काम चलाउन जान्नेवाला, इज्जतदारी पाउनेवाला र धनको विषयमा कहिले काहीं अकस्मात धनको हानि पनि पाउनेवाला र पुरातत्त्व र गहीरो चालाहरूको ध्यान राख्नेवाला र धनोन्नतिको चिन्ता गर्नेवाला र सदैवको लागि स्थिर रूपमा धनको शक्ति पाउनका लागि महान् प्रयत्न गर्नेवाला साहसी होला।

कु० नं० ७०८

७रा. ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको वृश्चिक राशिको राहु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै परिश्रमी, ठूलो पराक्रमी र दाजु-भाइको पक्षमा केही क्लेशको योग पाउनेवाला र आफ्नू काममा लुकेको युक्तिहरूद्वारा अनेक काम सिद्ध पार्नेवाला र आफ्नू काम बनाउनका लागि निकै सतर्कता र होशियारी राख्न जान्नेवाला र आफ्नू उन्नतिको लागि महान् परिश्रम द्वारा लखतरान हुने खालको होला। प्रत्येक काम गर्दा-गर्दा ठूलो प्रभाव र सफलता पाउनेवाला भए पनि आफ्नू शक्तिमा केही कमी अनुभव गर्नेवाला र ठूलो हिम्मत भएको तर स्वार्थी व्यक्ति होला।

कु० नं० ७०९

७ ५
८रा. ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको धन राशिको राहु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस सुखस्थानमा धेरै ठूलो अशान्ति पाउनेवाला र मातृस्थानमा केही अधिक हानि र क्लेशको योग पाउने र भूमि-भवन, निवास स्थानको केही दुःख अनुभव गर्नेवाला, अन्य स्थानको अलिकति भर-थेग लिनेवाला, दुःखका साधन पाउनेवाला र सुख-प्राप्तिका लागि केही क्षुद्र मार्गको अनुसरण गर्नेवाला, पिता स्थान र उन्नति स्थानको अनेक युक्तिहरू सहित विचार राख्नेवाला, घोर संकटहरूको साधनाहरू द्वारा सुख प्राप्तिको बाटो पाउने खालको र गुप्त शक्तिको सुख प्राप्तिका लागि अनेक कष्ट भोग्नेवाला होला।

कु० नं० ७१०

७ ५
८ ६ ४
९रा. ३
१० १२ २
११ १

जुन व्यक्तिको मकर राशिको राहु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस विद्या बुद्धिमा केही अशान्ति र दुर्बलता एवं गुप्त युक्तिहरूको योग पाउनेवाला र बोल्दा आफ्नू भावलाई बढी बुझ्ने प्रयत्न गर्नेवाला तथा गूढ ज्ञानको शक्ति भएको र कुराकानीमा सत्यासत्यको वास्ता नगर्ने तथा भांग-गांजा सुर्ती आदि मादक द्रव्य सेवन गर्नेवाला र कहिले काहीं झींजो मान्दै रिसले काम सिद्ध पार्नेवाला, शब्दको तौल-नाप केही उल्टो किसिमले राख्नेवाला र केही सन्तान कष्ट सहने खालको होला।

कु० नं० ७११

७ ५ ८ ६ ४ ९ ३ १० रा. १२ २ ११ १

जुन व्यक्तिको कुम्भराशिको राहु लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस निकै बर्ता प्रभावशाली र ठूलो हिम्मत साहस तथा कूटनीतिको शस्त्र राख्नेवाला र मावली पक्षको केही हानि पाउनेवाला तथा निकै वास्ता नराख्नेवाला, र शत्रुलाई कपटनीतिले पराजित गर्न जान्नेवाला तथा रोगहरूमा विजय पाउनेवाला र केही झ्याउलोमा उल्झने खालको होला। कुनै उल्टो चाल-चलेर केही अनावश्यक लाभ कमाउनेवाला र आफ्नू प्रभावमा भित्री केही न्यूनता अनुभव गर्नेवाला तथा झूठो आडम्बरमा निकै हिम्मत र तत्पर रहेर प्रहार गर्नेवाला, स्वार्थ सिद्धिमा अटल रहने खालको होशियार व्यक्ति होला।

कु० नं० ७१२

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११रा. १

जुन व्यक्तिको मीन राशिको राहु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री पक्षमा केही कष्ट सहन गर्ने भएको र गृहस्थीको सम्बन्धमा चिन्तित रहने खालको र व्यापारको स्थानमा अनेक ठूला अपठेराहरू तथा क्लेश-कष्ट सहने खालको केही परिश्रम युक्त युक्तिहरूले काम सिद्ध पार्नेवाला र दैनिक व्यापारको सम्बन्धमा बाहिरी परिस्थितिको भन्दा बढी आन्तरिक परिस्थितिमा भिन्नता पाउनेवाला र रोजगार संचालनमा केही बाँगा चातुर्यले काम गर्नेवाला, व्यापारमा कहिले काहीं बढी संकट सहनेवाला तथा व्यापारमा केही गुप्त शक्तिद्वारा पनि काम गर्न जान्ने भएको साहसी व्यक्ति होला।

कु० नं० ७१३

७ ५
८ ६ ४
९ ३
१० १२रा. २
११ १

जुन व्यक्तिको मेष राशिको राहु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस जीवन कालमा ठूला-ठूला झ्याउलाहरू सहन सक्ने खालको र साहसी होला। मनमा दुःख मान्नेवाला तथा पुरातत्त्वमा केही हानि पाउनेवाला, आयुको स्थानमा कहिले काहीं घोर संकट पाउनेवाला, पेटमा नाभिभन्दा अलितलको भागमा वा गुदामा केही निकै ठूलो कष्ट पाउनेवाला र कठिन परिश्रम गरेर सहन सक्नेवाला, अभिमानी स्वभावको तथा बढी गहीरो र गुप्त चालहरू उपयोगमा ल्याउन जान्ने तथा बढी धनको इच्छा राख्ने खालको व्यक्ति होला।

कु० नं० ७१४

७ ५
८ ६ ४
९ ३
१० १२ २
११ १रा.

जुन व्यक्तिको वृष राशिको राहु लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस भाग्यमा केही न्यूनता अनुभव गर्नेवाला र धर्मस्थानमा केही हानिको योग परेको तथा यश-मान प्राप्तिमा पनि केही न्यूनता पाउने खालको, अनि ईश्वरमा वास्तविक श्रद्धाको केही कमी र देखावटी श्रद्धाको अधिकता पाउनेखालको तथा धर्मको केही बाहिरी अंग दरिलो भेट्टाउने खालको र भाग्यस्थानमा कहिले काहीं घोर संकटको योग परेको व्यक्ति होला तर अन्त्यमा बलिष्ठता पाउनेवाला, असत्यलाई पनि सत्य झैं देखाउन सक्नेवाला होला।

कु० नं० ७७५

७ ५
८ ६ ४
९ ३
१० १२ २रा.
११ १

जुन व्यक्तिको मिथुन राशिको राहु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस आफ्नू पिता स्थानमा कुनै नवीन फाइदाले विशेषता पाउनेवाला, व्यापार आदि कारबारमा पनि केही नवीय युक्तिहरू द्वारा महानता पाउनेवाला र बाहिरी ढाँचा-काँचा र मिथ्या प्रदर्शनको अनुसार आफ्नू भित्री वास्तविक परिस्थितिमा र वैभवमा केही कमी वा न्यूनता पाउनेवाला तथा आफ्नू उन्नतिका लागि निकै दह्रो र ठूलो अपठेरा कारवाहीहरू आरम्भ गर्नेवाला, निकै ठूलो होशियारी र लागिपरेर काम गर्नेवाला, परिश्रम र परेशानीको अलिकति पनि वास्ता नगर्नेवाला र राज-समाजका मामिलाहरूमा आफ्नू महान् गहीरो युक्तिहरू द्वारा प्रभाव पाउने खालको होला।

कु० नं० ७७६

७ ५
८ ६ ४
९ ३रा.
१० १२ २
११ १

जुन व्यक्तिको कर्क राशिको राहु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस खूब लाभ कमाउने खालको र लाभको स्थानमा केही झ्याउलाहरू पनि सहन सक्नेवाला र कहिले काहीं अकस्मात् धनागमकै बीचमा हानिको योग पनि पाउनेवाला र लाभको सम्बन्धमा अनेकानेक युक्तिहरू द्वारा आफ्नू काम सिद्ध पारिरहने भए पनि केही मानसिक चिन्ता पाउने खालको व्यक्ति होला। थोरै काममा पनि बढी नाफा खानेवाला, बुद्धियोगबाट निकै सतर्कताको ध्यान राख्नेवाला, एवं केही वस्त्राभूषणहरूको कमी वा न्यूनता पाउनेवाला, आफ्नू प्रयोगमा ल्याउने देह सम्बन्धी पदार्थहरूको केही कमी अनुभव गर्ने खालको साहसी व्यक्ति होला।

कु० नं० ७१७

७ ५ ८ ६ ४रा. ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको सिंह राशिको राहु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खर्चको सम्बन्धमा अनेक कष्ट सहनेवाला, र झ्याउलाहरू बोक्ने खालको तथा खर्चको संचालन शक्तिमा केही अन्य स्थानका क्लेषित सम्बन्ध हुने मामलाहरूमा असफलता पाउँदा पाउँदै पूरा थाकेको अनुभव गरेर पनि बडो कष्टसाथ आफ्नू ठेगानमा पुग्नेवाला, अपूरो लाभ पाउनेवाला, अन्य स्थानहरूसित सम्बन्धित खर्चको मामलामा बडो युक्तिहरू र अनेक उपायहरू द्वारा आफ्नू काम सिद्ध गर्नेवाला, खर्च स्थानमा कहिले काहीं घोर संकटको सामना पाउनेवाला, अन्तमा खर्चका सम्बन्धमा केही मजबूती पाउने खालको होला।

कु० नं० ७१८

७ ५रा. ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# कन्या लग्नान्तर- केतुफलम्

जुन व्यक्तिको कन्याराशिको केतु लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफूभित्र बढी अभिमान राख्नेवाला, शरीरमा केही दुर्बलता र कमजोरी पाउनेवाला र ठूला-ठूला युक्तिहरू प्रयोग गर्नेवाला, आफ्नू प्रभाव जमाउनेवाला र आफ्नू महानता पाउनका लागि महान् दृढतायुक्त रहनेवाला, आफ्नू देहभित्र विशेष रूपमा केही कमी अनुभव गर्नेवाला, बाहिर सदैव दरिलोभाव दर्शाउनेवाला, धेरै बाठो, माननीय भए पनि अनेक झ्याउलाहरूले युक्त रहनेवाला, आफ्नू हृदयभित्र महान् शक्तिको संचार पाउनेवाला, जथाभावी काम गर्नेवाला व्यक्ति होला।

कु० नं० ७१९

७ ५
८ ६के. ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको तुला राशिको केतु लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनको पूर्ण संग्रह गर्न नसक्नेवाला र धनको प्राप्तिमा र धन संचयको स्थानमा बडो भारी दृढता र चातुर्यले काम लिनेवाला र कौटुम्बिक क्लेशको पनि योग पाउने खालको होला र धनको बाहिरी दहोभावको समकक्षमा भित्री दुर्बलता अनुभव गर्नेवाला र धनको सदैव अभाव अनुभव गर्ने र अन्त्यमा धन संग्रहको शक्ति पाउनेवाला र धनको वृद्धिका लागि महान् परिश्रम गर्ने खालको होला।

कु० नं० ७२०

७के. ५
८ ६ ४
९ ३
१० १२ २
११ १

जुन व्यक्तिको वृश्चिक राशिको केतु तृतीय स्थानमा छ भने त्यो मानिस धेरै बर्ता पराक्रमी र कठोर परिश्रम गर्नेवाला, दाजु-भाइ दिदी-बहिनीको पक्षबाट केही हानि पाउनेवाला वा वियोगी या अशान्ति सहन सक्नेवाला, धेरै बढी हिम्मत र साहसले आफ्नू काम सपार्नेवाला तथा महान् शौर्य एवं बहादुरीले बिग्रिसकेको काम पनि सपार्न जान्नेवाला, आफ्नू कठोर परिश्रम र अदम्य उत्साहको सामुन्ने भविष्यका परिणामको वास्ता नगरेर, निर्बाध शक्तिको प्रयोग गर्नेवाला, बर्ता उग्र विख्यात नामी, शील रहित, निर्भय व्यक्ति होला।

कु० नं० ७२१

७ ५ ८के. ६ ४ ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको धनराशिको केतु लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस भवन, भूमि, सम्पत्ति राख्न सक्नेवाला र मातृस्थानमा एक विशेष प्रकारको आडम्बरयुक्त सुख प्राप्त गर्नेवाला, आफ्ना सुखका साधनहरूलाई बलपूर्वक समाइरहनेवाला र वास्तविक शान्तिमा केही न्यूनता र दुर्बलता पाउनेवाला, सुखको विशेष मिथ्या आडम्बर गर्दै रहनाले अनेक थरिका कष्ट अपवाद, निन्दा सहनेवाला र सुख प्राप्तिका साधनहरूमा शील, सन्तोषको उल्लंघन गर्नेवाला र सुख एवं मातृस्थानमा कहिले काहीं घोर संकटको विपत्ति सहनेवाला महान् धैर्यवान व्यक्ति होला।

कु० नं० ७२२

७ ५ ८ ६ ४ ९के. ३ १० १२ २ ११ १

जुन व्यक्तिको मकर राशिको केतु लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बर्ता कठोर र कठिन बुद्धिवाला विद्या ग्रहण गर्ने वेलामा अनेक दुःख-

कु० नं० ७२३

७ ५
८ ६ ४
९ ३
१० १२ २
के.
११ १

कष्टहरू पाउनेवाला, बढी रिस र तेजी दिमागमा सदैव राख्नेवाला, आफूले भनेका कुराहरू सरलता र शुद्धतापूर्वक आफ्नू अधीनमा राख्न नसक्नेवाला, सन्तान पक्षमा केही कष्ट पाउनेवाला र केही जिद्दी दिमागवाला, बुद्धिमा चिन्ता पाउनेवाला एवं केही नशा (लागू) सेवन गर्नेवाला र आफ्ना कुरालाईनै ठूलो र उचित सिद्ध गर्न खोज्नेवाला, केही शीलको उल्लंघन गर्ने खालको बाठो व्यक्ति होला।

जुन व्यक्तिको कुम्भ राशिको केतु लग्नबाट छैठौं स्थानमा छ भने त्यो

कु० नं० ७२४

७ ५
८ ६ ४
९ ३
१० १२ २
११के. १

मानिस धेरै ठूलो महान् शक्ति र बल पुरुषार्थ राख्नेवाला, आफूलाई बढी निडर मान्नेवाला र आफ्नू स्वार्थको सिद्धि गर्नमा निकै तत्परताले काम सिद्ध पार्नेवाला र शत्रुलाई पराजित पार्नेवाला, अभिमान र वास्ता नराखी सदैव काम गर्नेवाला र मावली पक्षमा हानिको योग पाउनेवाला, रोगहरूलाई दमन गर्न सक्नेवाला, आफ्नू प्रभाव र उन्नति गर्नमा न्याय वा अन्यायको कुनै वास्ता नगर्नेवाला, शीलरहित, स्वार्थयुक्त प्रभावशाली व्यक्ति होला।

जुन व्यक्तिको मीन राशिको केतु लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस स्त्री पक्षबाट कष्ट अनुभव गर्नेवाला र गृहस्थीको संचालनमा अनेक बाधा पाउनेवाला, निकै परिश्रमले घरको काम चलाउनेवाला, दैनिक व्यापारको पक्षमा बढी मुश्किलले र परिश्रमले काम गर्नेवाला, र स्त्री भोगादिको सम्बन्धमा केही तीव्रता राख्ने खालको होला। तर केही अपूर्व सुखको अनुभव गर्नेवाला र रोजगारमा निकै गुप्त हिम्मतको शक्तिले काम चलाउने वाला, प्रत्येक दैनिक कार्यहरूमा आन्तरिक धैर्यले काम सिद्ध पार्ने खालको होला।

कु० नं० ७२५

७ ५ ८ ६ ४ ९ ३ १० १२के. २ ११ १

जुन व्यक्तिको मेष राशिको केतु लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू जीवनमा अनेक अशान्ति पाउनेवाला, समय दुःखले व्यतीत गर्नेवाला तथा पुरातत्त्वबाट केही हानि पाउनेवाला, नाभीको तल्लो भागमा पेट वा गुदामा केही खराबी एवं केही अरू पनि शिकायत पाउनेवाला र गुप्त कूट शक्ति राख्नेवाला र जीवनमा निकैपल्ट मृत्यु तुल्य खतरामा परेको होला, चिन्ताग्रस्त रहने र जीवनलाई सफल तुल्याउनका लागि र नाम कमाउनका निम्ति कुनै महान् कठिन परिश्रम गर्ने तथा गुप्त शक्तिको महानता राख्नेवाला होला।

कु० नं० ७२६

७ ५ ८ ६ ४ ९ ३ १० १२ २ ११ १के.

जुन व्यक्तिको वृषराशिको केतु नवौं स्थानमा छ भने त्यो मानिस आफ्नो आमदानीको स्थानमा केही कष्ट-बाधाहरू द्वारा खूब लाभ पाउनेवाला र आमदानीको लागि मनको स्थानमा केही आघात सहेर पनि मनको कट्टरताबाट खूब लाभ प्राप्त गर्नेवाला र लाभ स्थानमा केवल मजदूरी (ज्याला) पाउनेवाला र आमदानीको वृद्धि गर्नका लागि, मनले नरुचाएको कामहरु पनि गर्नेवाला, र लाभस्थानमा महान् परिश्रम गरेर पनि आफ्नू दैनिक प्रयोगमा आउने वस्तुहरूमा केही न्यूनता पाए तापनि लाभ-प्राप्तिमा केही कमी पाउनेवाला होला।

कु० नं० ७२७

७　५
८　६　४
९　३
१०　१२　२के.
११　१

जुन व्यक्तिको मिथुन राशिको केतु लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस पिता-स्थानमा हानि र कष्टको योग पाउनेवाला र राज्यस्थानमा पनि कष्टको योग पाउनेवाला, व्यापार आदि कर्म र उन्नतिको मार्गमा ठूला-ठूला बाधा र तगारो राखेको सहन गर्नेवाला, ठूलो स्थानको कामहरूमा थिचिएको र तल गिरेको योग पाउनेवाला र आफ्नू नामको रक्षा गर्ने चिन्ता पाउनेवाला र आफूलाई अभिमानी ठान्नेवाला, उन्नतिको मार्गबाट लुकाउने र रोक्ने काम गर्नेवाला र केही न्यून परिश्रम गर्ने खालको व्यक्ति होला।

कु० नं० ७२८

७　५
८　६　४
९　३के.
१०　१२　२
११　१

जुन व्यक्तिको कर्क राशिको केतु लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू आमदानीको स्थानमा केही बाधा र कष्टद्वारा खूब लाभ कमाउनेवाला र आमदानीको लागि मनको स्थलमा केही आघात सहेर पनि मनको कट्टरताबाट खूब लाभ प्राप्त गर्नेवाला र लाभस्थानमा ज्याला (मजदूरी) कमाउनेवाला र आमदानीको वृद्धि गर्नका लागि मनले नरुचाएको काम पनि गर्न अघिसर्नेवाला र लाभ स्थानमा महान् परिश्रम गरेर पनि आफ्नू प्रयोगमा ल्याउने पदार्थमा केही कमी पाउनेवाला व्यक्ति होला।

कु० नं० ७२९

७ ५ ८ ६ ४के. ९ ३ १० १२ २ ११ १

जुन व्यक्तिको सिहं राशिको केतु राशिको केतु लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस खर्चको स्थानमा महान् संकट सहनेवाला र अन्य स्थानको सम्बन्धमा अनेक कष्ट र बाधाको योग पाउनेवाला र खर्च संचालनको शक्ति प्राप्त गर्नका लागि ठूला-ठूला अपठेराहरू सहनेवाला, त्यति भए पनि ठूलो साहस हिम्मत र बहादुरीले सफलतातिर दगुर्नेवाला र खर्चको मार्गमा सदैव केही न केही बाधा सहनेवाला किन्तु खर्चको दह्रो शक्ति पाउनको लागि महान् परिश्रम गर्ने र अन्तमा सफलता पाउनेवाला होला।

कु० नं० ७३०

७ ५के. ८ ६ ४ ९ ३ १० १२ २ ११ १

# तुला लग्न हुनेहरूको - भविष्यका तारीख

सन् १९९६ को वर्षमा- गुरू चौथो स्थानमा नीच रहने छन्। यसै निम्ति घरेलू वातावरणमा केही न केही झन्झट रहने छ। ता० ६/१/९६ देखि समय पुरुषार्थको सफलताको रहने छ। ता० ४/३/९६ देखि केही कष्ट-बाधा रहने छ। ता० १५/६/९६ देखि ता० १९/९/९६ सम्म भाग्यको उन्नति र धन-लाभ रहने छ। त्यस पछि व्यय बढी रहने छ। ता० ५/१२/९६ बाट ता० ३१/१२/९६ सम्ममा भाग्य र पुरुषार्थको सफलता रहने छ।

कु० नं० ७३१

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

सन् १९९७ को वर्षमा - ता० २/१/९७ बाट पुरुषार्थ कर्मको सफलता चल्नेछ। ता० २५/२/९७ बाट भाग्यमा केही कमजोरी रहने छ। ता० ४/५/९७ देखि व्यापार र गृहस्थीमा लाभ रहने छ। ता०२/८/९७ बाट शरीरमा केही कष्ट रहने छ। भाग्यको उन्नति चल्दै रहने छ। १२/९/९७ बाट खर्च बढी रहने छ। ता० १८/१२/९७ बाट स्थिति सप्रने छ। ता० १७/११/९७ बाट ता० ३१/१२/९७ सम्ममा सफलता रहने छ, मनमा प्रसन्नता रहला।

कु० नं० ७३२

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्नमा- सुनौलो तारीखहरू

सन् १९९८ को वर्षमा- ता० १/१/९८ देखि समय राम्रो चल्नेछ, धनको सफलता रहने छ, पछि धनमा असफलता रहले छ। ता० २६/५/९८ देखि भाग्यमा सफलता रहने छ। त्यसपछि केही बाधा सहित धनलाभ चल्दै रहने छ। ता० १२/९/९८ देखि भाग्यमा केह परेशानी रहने छ। ता० ६/१०/९८ देखि केही सप्रन्दै जानेछ। ता० १७/११/९८ देखि भाग्यमा सुख र सफलता चल्नेछ र ता० ३१/१२/९८ सम्ममा प्राय: भाग्यको सफलता रहिरहने छ।

कु० नं० ७३३

सन् १९९९ को वर्षमा- ता० १/१/१९९९ देखि समय सफलतातिर लम्कने छ। ता० १/४/९९ देखि भाग्यमा केही बाधा कष्ट आइलाग्ला। ता० ७/७/९९ देखि भाग्यमा सुधार चल्नेछ र उन्नतिको बाटो खुल्नेछ। ता० १७/९/९९ देखि व्यय भार बढ्ने छ। ता० २१/११/९९ देखि फेरि भाग्यको सफलता चल्नेछ। मान-सम्मान र प्रभाव बढ्ने छ। ता० २९/१२/९९ सम्ममा उन्नति र सफलता मिल्दै रहने छ।

कु० नं० ७३४

# तुला लग्नमा- सुनौला तारीखहरू

सन् २००० को वर्षमा- ता० २/१/२००० देखि भाग्यको सफलता चल्नेछ र ता० २१/३/२००० सम्म भाग्योन्नति रहने छ। त्यसपछि भाग्यमा कमजोरी आउला। ता० १४/४/२००० देखि गृहस्थी र व्यापारमा सफलता प्राप्त होला। ता० १४/५/२००० देखि समय कमजोर चल्नेछ। ता० ३/७/२००० देखि भाग्य सप्रन थाल्नेछ। ता० २५/७/२००० देखि फेरि भाग्यमा सुधार चल्नेछ। ता० ९/१०/२००० सम्ममा राम्रो भाग्यमा सुधार चल्नेछ। ता० ९/१०/२००० सम्ममा राम्रो लाभ रहने छ। त्यसपछि सामान्य बित्नेछ। ता० १६/११/२००० देखि ता० ३१/१२/२००० सम्ममा भाग्यको स्थिति राम्रो रहने छ।

कु० नं० ७३५

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

सन् २००१ को वर्षमा- ता० ५/१/२००१ देखि पराक्रमद्वारा सफलता चल्दै रहने छ। त्यसपछि पनि सफलताका साधन बढ्दै जानेछन्। ता० १/३/२००१ देखि भाग्य कमजोर रहला। ता० १/४/२००१ देखि समय राम्रो चल्नेछ। ता० ६/७/२००१ देखि फेरिभाग्यमा दुर्बलता आउला। ता० २५/६/२००१ देखि ता० १६/९/२००१ सम्ममा भाग्यको सफलता र लाभ रहने छ। त्यसपछि समय कमजोर आउला। ता० १४/१०/२००१ देखि ता० ३१/१२/२००१ सम्ममा भाग्यको सफलता राम्रो रहने छ।

कु० नं० ७३६

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्नमा- सुनौला तारीखहरू

सन् २००२ को वर्षमा- ता० १/१/२००२ बाट पुरुषार्थ कर्मद्वारा भाग्य र लाभको सफलता रहने छ। सुखका साधन बढ्ने छन्। ता० ९/३/२००२ बाट भाग्यको केही कमजोरी रहने छ। ता० २६/३/२००२ बाट भाग्यमा आंशिक सुधार रहने छ। ता० २/६/२००२ बाट भाग्योन्नतिमा बाधा पर्ला। ता० ६/७/२००२ बाट भाग्य र धनलाभको सफलता चल्नेछ। ता० २३/८/२००२ बाट व्यापार र गृहस्थीमा धनको पक्षमा समय कमजोर चल्ने छ। ता० १/१२/२००२ बाट ता० ३१/१२/२००२ सम्ममा भाग्य र मान-प्रभावको जागृति हुनेछ।

कु० नं० ७३७

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

सन् २००३ को वर्षमा- ता० १/१/२००३ बाट पुरुषार्थ कर्मको द्वारा भाग्यको सफलता रहला। ता० २७/१/२००३ बाट घरेलू सुखका साधन बढ्नेछन्। ता २४/२/२००३ बाट बुद्धि र सन्तान पक्षबाट लाभ रहने छ। ता० १/३/२००३ बाट भाग्यमा कमजोरी रहला। ता० १७/४/२००३ बाट व्यापारमा लाभ रहला। ता० २१/५/२००३ बाट केही कष्ट आउने छ। ता० १५/६/२००३ बाट भाग्यमा सफलता र जागृति चल्नेछ। ता० १६/९/२००३ बाट भाग्यमा दुर्बलता रहने छ। खर्च बढ्ने छ। ता० १९/१२/२००३ बाट ता० ३१/१२/२००३ सम्ममा भाग्यमा सफलता रहने छ।

कु० नं० ७३८

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्नका लागि सुनौला तारीखहरू

सन् २००४ को वर्षमा- ता० १/१/२००४ बाट भाग्यको उत्तम समय चल्नेछ। ता० १४/३/२००४ बाट आमदानी केही घट्तै जानेछ। ता० १४/४/२००४ बाट भाग्यमा नाफा-नोक्सान, अग्लो-होचो रहने छ। ता० १५/६/२००४ बाट भाग्यको उत्तम समय चल्नेछ। लाभ रहने छ। ता० २/८/२००४ बाट धनको हानि रहने छ। ता० २७/९/२००४ बाट भाग्यको समय सप्रन थाल्नेछ, तर शरीर अस्वस्थ रहने छ। ता०५/११/२००४ बाट मान-प्रभाव बढ्ने छ। ता० ३१/१२/२००४ सम्म प्रायशः भाग्यको सफलता रहने छ।

कु० नं० ७३९

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

सन् २००५ को वर्षमा- ता० १/१/२००५ बाट भाग्य र गृहस्थीको समय प्रायः सुखदायक रहने छ। ता० १५/३/२००५ बाट समय केही कमजोर चल्नेछ। ता० २१/४/२००५ बाट भाग्यमा सुधार रहने छ। ता० १६/५/२००५ बाट धनमा केही उतार-चढाव रहने छ। ता० ८/८/२००५ बाट भाग्यमा सुधार र लाभ रहने छ। ता० १७/९/२००५ धनको खर्चा बढी रहने छ र उन्नतिको बाटोमा कष्ट-बाधा रहने छ। २४/११/२००५ देखि ता० २८/१२/२००५ सम्म धनको वृद्धि भइरहने छ।

कु० नं० ७४०

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्न हुनेहरूको–सुनौला तारीख

सन् २००६को वर्षमा- ता० १/१/२००६ बाट ता० ९/२/२००६ सम्म लाभ राम्रो रहने छ, त्यसपछि कमजोर रहने छ। ता० १३/५/२००६ बाट लाभमा उन्नति रहने छ। ता० १०/७/२००६ बाट धनको पक्ष कमजोर रहने छ। ता० ३०/८/२००६ बाट भाग्यको पक्ष उन्नतिदायक सुखदायक रहने छ। ता० ११/९/२००६ बाट कष्ट-बाधा रहने छ। ता० १/११/२००६ बाट सुधारमा रहने छ अनि ता० २७/१२/२००६ सम्म प्रायः भाग्यको सफलता रहने छ।

कु० नं० ७४१

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

सन् २००७ को वर्षमा- ता० १/१/२००७ बाट धन र गृहस्थीमा सुखदायक समय रहने छ। ता० १७/३/२००७ बाट धन र गृहस्थीमा कष्ट-बाधा रहने छ। ता०१४/४/२००७ बाट व्यापार र गृहस्थीमा लाभ रहने छ। ता० १५/५/२००७ बाट लाभ घट्तै जानेछ, भाग्यमा कष्ट पर्नेछ। ता० १७/७/२००७ बाट भाग्यमा सुधार आउला। ता० ३१/८/२००७ बाट उन्नतिमा बाधा रहने छ। ता० १८/११/२००७ बाट भाग्यमा लाभको सफलता रहने छ। ता० १६/१२/२००७ सम्म उन्नति रहने छ।

कु० नं० ७४२

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्न हुनेहरूको- प्रतिकूल समय ज्ञान

कु० नं० ७४३

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

(सदैव कालको लागि)

तल लेखिएका ग्रह जब-जब यी राशि हरूमा, पञ्चांगमा आउने छन्, तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा प्रतिकूल समय रहने छ।

---

सू०- कन्या, तुला मीन र वृष।

चं०- कन्या, वृश्चिक, मीन र वृष।

मं०- कन्या, मीन, वृष र कर्क।

बु०- मीन र वृष।

गु०- कन्या, मकर र वृष।

शु०- कन्या र वृष।

श०- कन्या, मीन, मेष र वृष।

रा०- तुला, वृश्चिक, धन, मकर, मेष, वृष र कर्क।

के०- तुला, वृश्चिक, मकर, कुम्भ, मेष, वृष, मिथुन र कर्क।

---

*नोट-* पूरा वर्षको फलादेश जान्न का लागि - श० गु० रा० के० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र मासिक फलादेश जान्नका लागि- सू० बु० शु० मं० यी चार ग्रहहरूबाट हेर्नुपर्दछ र प्रतिदिनको फलादेश जान्नका लागि चन्द्रमाबाट हेर्नुपर्दछ।

# तुला लग्न हुनेहरूको अनुकूल समय ज्ञान

कु० नं० ७४४

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

(सदैव कालको लागि)

तल लेखिएका ग्रहहरू जब-जब यी राशिहरूमा, पंचांगमा आउने छन् तब-तब ती वर्षहरूमा, महीनाहरूमा र दिनहरूमा उन्नतिदायक समय रहने छ।

---

सू०- सिंह, वृश्चिक, धन, मकर, कुम्ब, मेष, मिथुन, र कर्क।
चं०- कर्क, सिंह, कन्या, धन, मकर, कुम्भ, मेष र मिथुन।
मं०- तुला, वृश्चिक, धन, मकर, कुम्भ, मेष, मिथुन र सिंह।
बु०- सिंह, कन्या, तुला, वृश्चिक, धन, मकर, कुम्भ, मेष, मिथुन, र कर्क।
गु०- तुला, वृश्चिक, धन, कुम्भ, मीन, मेष, मिथुन, कर्क, सिंह।
शु०- तुला, वृश्चिक, धन, मकर, कुम्भ, मीन, मेष, मिथुन, कर्क र सिंह।
श०- तुला, वृश्चिक, धन, मकर, कुम्भ, मिथुन, कर्क र सिंह।
रा०- मीन, मिथुन, सिंह, कुम्भ र कन्या।
के०- सिंह, कन्या, धन र मीन।

---

*नोट-* पूरा वर्ष दिनको फलादेश जान्नका लागि- शनि,गुरू, राहु र केतु- यी चार ग्रहहरूबाट हेर्नु पर्दछ र महीनाको फलादेश जान्नका लागि सू० बु० शु० मं०- यी चार ग्रहहरूबाट हेर्नुपर्दछ। दैनिक फलादेश जान्नका लागि चन्द्रमाबाट हेनुपर्दछ।

# तुला लग्नान्तर- सूर्यफलम्

जुन व्यक्तिको तुलाराशिको सूर्य लग्नबाट पहिलो स्थानमा छ भने त्यो मानिस आफ्नू शारीरिक परिश्रमद्वारा धनागम गर्ने खालको तर त्यस आमदानीमा केही दुर्बलता वा कमजोरी पाउनेवाला र शरीरमा पनि दुर्बलता अनुभव गर्ने, तथा दैनिक व्यापारमा सफलता पाउने वाला, गृहस्थीमा र स्त्री स्थानमा विशेष लाभको योजना पाउनेवाला र विशेष भोग प्राप्त गर्ने खालको होला। लाभस्थानमा केही बन्धन अर्थात केही परतन्त्रताको झैं वा केही झ्याउलो लागे झैं योग परेको अनुभव गर्ला अनि मान-सम्मानमा केही कमीको योग पाउनेवाला र गृहस्थधर्मको उच्चशिखरमा पुग्नका लागि अर्थात गृहस्थको स्थितिलाई सुन्दर र सुचारू तुल्याउनलाई सदैव प्रयत्नशील र चिन्तित रहने खालको र केही पातलो शरीर भएको साहसी र ईश्वर-भक्त व्यक्ति होला।

कु० नं० ७४५

| | | |
|---|---|---|
| | ८ | ६ |
| ९ | ७सू. | ५ |
| १० | | ४ |
| ११ | १ | ३ |
| १२ | | २ |

जुन व्यक्तिको वृश्चिक राशिको सूर्य लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस बढी धन संग्रह गर्नेवाला र बढी आमदानी पाउनेवाला अनि कुटुम्ब लाभ अथवा धनको लाभ पाउनेवाला र जीवनको समयमा लाभको सम्मुख सुख आरामको वास्ता नगर्नेवाला र धन संग्रह गर्नका लागि आफ्नू आवश्यक पदार्थहरूको प्रयोगको पनि वास्ता नगर्नेवाला, पुरातत्त्वको स्थानमा अकस्मात लाभ प्राप्त गर्ने खालको होला। झलक्क हेर्दा धनी होला भन्ने जानिने तथा प्रकाशवान इज्जतदार, अनेक दिव्य पदार्थहरूको संग्रह गर्नेवाला, लाभको उपभोगमा केही बन्धन र न्यूनता पाउनेवाला र लाभ प्राप्तिको सम्बन्धमा दृढता पाउने खालको व्यक्ति होला।

कु० नं० ७४६

| | | |
|---|---|---|
| | ८सू. | ६ |
| ९ | ७ | ५ |
| १० | | ४ |
| ११ | १ | ३ |
| १२ | | २ |

जुन व्यक्तिको धनु राशिको सूर्य लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै सफल पुरुषार्थ गर्नेवाला र पुरुषार्थद्वारा खूब लाभ कमाउने

कु० नं० ७४७

८ ६ ९सू. ७ ५ १० ४ ११ १ ३ १२ २

वाला र बढी तागत एवं प्रभाव भएको, परिश्रमी, उत्साही, साहस र हिम्मतवाला, दाजु-भाइको लाभ पाउनेवाला र धर्म प्राप्त गर्नेवाला र धर्म स्थानबाट पनि लाभ पाउनेवाला र आमदानीको तागतले भाग्यमानी एवं बलशाली कहिने खालको वा सदैव साहस र हिम्मतले धन कमाउनेवाला, दिव्य लाभ पाउनेवाला र लाभको कारणले स्फूर्ति पाउनेवाला, पुरुषार्थवादी होला।

जुन व्यक्तिको मकर राशिको सूर्य लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस आफ्नू स्थानमा नै केही नीरसता युक्त लाभ प्राप्तिको योजना

कु० नं० ७४८

८ ६ ९ ७ ५ १०सू. ४ ११ १ ३ १२ २

पाउनेवाला र सुखपूर्वक लाभको योजनामा केही न्यूनता वा आलस्य झैं अनुभव गर्नेवाला र लाभको स्थितिको घेराबाट मान-सम्मान पाउनेवाला र पिता स्थानको लाभ पनि मातृ-स्थानको सहायताले प्राप्त गर्नेवाला, मातृस्थानको सुख अर्थात माताको र भवन(घर) को केही सुख नीरसता साथ पाउनेवाला, आवश्यक पदार्थहरूलाई येन-केन प्राप्त गर्ने, इज्जतदार र मान प्राप्त गर्ने खालको होला।

जुन व्यक्तिको कुम्भ राशिको सूर्य लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धियोगद्वारा खूब लाभ कमाउने खालको र विद्या ग्रहण गर्नमा अलिकति आलस्य पाउने भए पनि विद्या प्राप्त गरेर लाभ कमाउनेवाला, सन्तान स्थानबाट विशेष लाभ पाउनेवाला र सन्तान पक्षबाट कहिले काहीं अशान्ति अनुभव गर्ने किसिमको होला। लाभ प्राप्तिका कारणहरूबाट आफ्नू मस्तिष्कमा थोरै अशान्ति वा थकाई अनुभव गर्नेवाला र दिमागमा केही गर्मी भएको होला। धन लाभ सम्बन्धी मामलामा नै बर्ता ध्यान दिनेवाला, केवल स्वार्थ सिद्धिको नै कुरा गर्नेवाला तथा शीलरहित बुद्धिमान, तेज वक्ता होला।

कु० नं० ७४९

८ ६ ९ ७ ५ १० ४ ११ सू. १ ३ १२ २

जुन व्यक्तिको मीन राशिका सूर्य लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस बन्धन वा केही परतन्त्रता युक्त कर्मबाट लाभ पाउनेवाला र लाभ स्थानको सहयोगले प्रभाव र मान पाउनेवाला र कुनै झगडा-विवादबाट पनि फाइदा पाउनेवाला र शत्रु स्थानमा विजय पाउनेवाला र मावली पक्षबाट पनि आंशिक लाभ पाउने हक-दावी राख्नेवाला, खूब धन खर्च गर्नेवाला, लाभको सम्बन्धमा केही अन्य स्थानहरूको सम्पर्क पनि पाउनेवाला, आमदानीमा केही न्यूनता परेको सहेर पनि प्रभावको विशेषता प्राप्त गर्नेवाला, लाभको तागत र प्रभावले रोग र दोषमा विजय पाउनेवाला, प्रभावशाली, बहादुर प्रकृतिको र तेजस्वी व्यक्ति होला।

कु० नं० ७५०

८ ६ ९ ७ ५ १० ४ ११ १ ३ १२सू. २

जुन व्यक्तिको मेष राशिको सूर्य लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धेरै ठूलो प्रभावशाली व्यापार गर्नेवाला, व्यापारबाट धेरै लाभ प्राप्त गर्नेवाला, स्त्री र ससुरालीको महान् सहयोग र लाभ पाउनेवाला र राम्री पत्नीवाला, स्त्री पक्षबाट विशेष भोग प्राप्त गर्नेवाला र स्त्री स्थानमा ठूलो प्रभाव पाउनेवाला र आमदानीको विशेषताहरूबाट अथवा कामको बढी हुल-हालले गर्दा शरीरमा कष्ट-बाधा अनुभव गर्ने भएको र भोगको अधिकताले गर्दा केही दुर्बलता अनुभव गर्नेवाला र देहमा बढी कमजोरी (दुर्बलता) पाउनेवाला, लौकिक उन्नति र आनन्दको सामुन्ने शरीर-स्वास्थ्यको पनि वास्ता नराख्ने खालको, र व्यापार एवं आमदानीको कार्यभन्दा ठूलो प्रभाव पाउनेवाला, उच्च कार्य गर्नेवाला, बढी परिश्रमी व्यक्ति होला।

कु० नं० ७५१

८ ६
९ ७ ५
१० ४
११ १सू. ३
१२ २

जुन व्यक्तिको वृष राशिका सूर्य लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आमदानीको लागि अनेक बाधा-कष्ट सहन सक्नेवाला, विदेश आदिमा लाभको साधन पाउनेवाला र जीवनमा लाभकै कारणले केही परेशानीका साथ केही प्रभाव मान्नेवाला र धन सञ्चयको बढी ध्यान राख्नेवाला र गूढ युक्तिहरूले पनि लाभ पाउनेवाला पुरातत्त्व र मैत्रिक लाभको पूर्ति गर्नेवाला अर्थात कष्टपूर्वक लाभ पाउनेवाला, पुरातत्त्व र मैत्रिक लाभको पूर्ति गर्नेवाला अर्थात अनेक दुःख सहेर आवश्यकताहरूको पूर्ति गर्नेवाला, परिश्रमी जीवन र कुटुम्ब वृद्धि गर्नेवाला होला।

कु० नं० ७५२

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२ २सू.

जुन व्यक्तिको मिथुन राशिको सूर्य लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी र भाग्य शक्तिले युक्त जस्तै आमदानी पाउनेवाला धर्म सम्बन्धमा दूरदर्शिताको शक्तिबाट लाभ पाउनेवाला, भाग्यको तागतले धेरै ठूला-ठूला लाभ पाउनेवाला, लाभ-शक्तिबाट पुरुषार्थ र हिम्मतको वृद्धि पाउनेवाला, दाजु-भाइ दिदी-बहिनीबाट पनि लाभको योजना पाउनेवाला र दैवयोगले असम्भव लाभ पनि अर्थात जुन लाभको कल्पना पनि नहोस त्यस्तो लाभ-पनि प्राप्त गर्नेवाला र ईश्वर प्राप्तिको सम्बन्धको लाभ पनि पाउनेवाला तेजस्वी, प्रभावशाली र निस्फिक्री होला।

कु० नं० ७५३

८ ६
९ ७ ५
१० ४
११ १ ३सू.
१२ २

जुन व्यक्तिको कर्क राशिको सूर्य लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै इज्जतसाथ आमदानी पाउनेवाला, ठूलो व्यापार गर्नेवाला र पितास्थानको खूब लाभ पाउनेवाला, निकै माननीय र राज्य-स्थानबाट पनि लाभको योग पाउनेवाला, प्रभावशाली कार्य गर्नाले लाभ युक्त रहनेवाला, मातृस्थानको सुखमा न्यूनता पाउनेवाला र भूमि-भवनबाट पनि केही लाभ र नीरसताको योग पाउनेवाला, प्रभावशाली र राजसी ठट-बाट राख्ने भएको, कारबारको सम्बन्धमा निकै दूरदर्शिताबाट काम सिद्ध पार्नेवाला, बूढा-पाकाको स्थानबाट र उत्तम ढंगले लाभको योजना पाउनेवाला होला।

कु० नं० ७५४

८ ६
९ ७ ५
१० ४सू.
११ १ ३
१२ २

जुन व्यक्ति सिंह राशिको लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस बढी लाभ पाउनेवाला, बलियो आमदानी नियमित रूपले प्राप्त गर्नेवाला, ठूला-ठूला अमूल्य लाभलाई र प्रकाशवान् पदार्थहरूलाई स्वतः पाउनेवाला, सन्तान पक्षमा केही बाधा सहित फल प्राप्त गर्नेवाला, केही वैमस्यताका साथै विद्या ग्रहण गर्नेवाला र लाभ प्राप्तिको सम्बन्धमा केही नीरसता युक्त वाणी बोल्नेवाला अर्थात बोल-चालमा तेजीले र झर्को-फर्को गरेर काम सिद्ध पार्नेवाला, बुद्धिमा तेजी हुनाले आफ्नू मन्तव्य (भनाइ) लाई राम्रोसित अरूलाई बुझाउन नसक्नेवाला, आवश्यकताहरूको पूर्ति सदैव प्रत्येक स्थानमा प्रभावले नै प्राप्त गर्ने खालको होला।

कु० नं० ७५५

८ ६ ९ ७ ५सू. १० ४ ११ १ ३ १२ २

जुन व्यक्तिको कन्या राशिको सूर्य लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन खर्च गर्नेवाला, अन्यान्यस्थानको सम्बन्धबाट आमदानी पाउनेवाला, सर्वस्व लाभलाई खर्चगर्नेवाला, त्यागवृत्ति राख्ने र प्रभावशाली धन व्यय गर्ने किसिमको, अन्य स्थानमा प्रभावके शक्ति द्वारा आवश्यकताहरूको पूर्ति गर्नेवाला र शत्रु स्थानमा वा विपक्षीहरूमा मैत्री प्रभावको तागतको लाभ पाउनेवाला, अर्थात प्रभाव शक्तिलाई मित्ररूपमा प्रयोग गरेर शत्रुसित लाभ पाउनेवाला र मावली पक्षबाट पनि लाभको केही सम्बन्ध पाउनेवाला, वस्त्रादि पदार्थहरूलाई सानू रूपमा पाउने खालको होला।

कु० नं० ७५६

८ ६सू. ९ ७ ५ १० ४ ११ १ ३ १२ २

# तुला लग्नान्तर-चन्द्रफलम्

जुन व्यक्तिको तुला राशिको चन्द्रमा लग्नबाट प्रथम स्थानमा छ भने त्यो मानिस निकै प्रतापी र ऐश्वर्ययुक्त माननीय र पिता स्थानबाट उत्थान पाउनेवाला, ठूलो उत्तम र प्रशंसनीय काम गर्नेवाला, निकै राम्रो शरीरवाला, धेरै उच्च विचारहरूको योजनादि मनमा राख्नेवाला र भोग-विलासको उत्तम आनन्द लिनेवाला तथा स्त्री सुख प्राप्त गर्नेवाला, व्यापारको सम्बन्धमा निकै उदारताले काम सिद्ध पार्नेवाला एवं मानयुक्त रहने खालको होला। स्त्री स्थानबाट प्रभाव पाउनेवाला, रोजगार व्यापारबाट अर्थात सुन्दर मनोयोगका कार्यबाट मान-प्रतिष्ठा र प्रभुत्व पाउने भएको र राज-समाजमा मान पाउने प्रभावशाली, शान्त मन र स्वाभिमानी होला।

कु० नं० ७५७

८ ६
९ ७चं. ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको वृश्चिक राशिको चन्द्रमा लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धन स्थानबाट न्यूनता पाउनेवाला र पिता स्थानमा बाधा पुऱ्याउने खालको अनि पिता स्थान र व्यापार स्थानबाट कमजोरी पाउनेवाला र मान-सम्मानमा र इज्जत बेइज्जतमा दुर्बलता अनुभव गर्नमा मानसिक कष्ट सहनेवाला, उन्नतिको स्थानमा मानसिक अशान्ति र धनको अभावद्वारा न्यूनता पाउनेवाला, पैत्रिक र पुरातत्त्व शक्तिको लाभ पाउनेवाला र जीवनको दिनचर्यालाई निकै उपेक्षापूर्वक व्यतीत गर्नेवाला, आयुमा वृद्धि पाउनेवाला, धन प्राप्तिका लागि केही गुप्तरूपले काम गर्नेवाला, न्यून तागतको प्रभाव शक्ति भएको, गूढ युक्तिहरूले साधनाको फल पाउने, सानो कुटुम्बी होला।

कु० नं० ७५८

८चं. ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको धन राशिको चन्द्रमा लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै राम्रो मनोयोगद्वारा पुरुषार्थ गरेर उन्नति पाउनेवाला

कु० नं० ७५९

८ ६
९चं. ७ ५
१० ४
११ १ ३
१२ २

अर्थात सुन्दर प्रभावशाली पुरुषार्थ गरेर सम्मान र प्रतिष्ठा एवं प्रभुत्व पाउनेवाला र पिता-स्थानको शक्तिलाई आफ्नू सामर्थ्यमा धारण गर्ने खालको होला। मानसिक शक्तिबाट सदैव उन्नतिको मार्गमा हिड्नेवाला, निकै ठूला योजनाहरूको बलले प्रभाव र स्फूर्ति पाउनेवाला, दाजु-भाइ दिदी-बहिनीको उत्थानको योग पाउनेवाला, ठूलो भाग्यमानी, सफल पुरुषार्थी तथा मनमा मग्न रहनेवाला, कर्म-शक्तिद्वारा धर्म-कर्म गर्नेवाला अर्थात धर्मको पालन गर्ने र मनोयोगले ईश्वरमा पूर्णश्रद्धा एवं विश्वास राख्ने तथा आदर्श विचार भएको र आकाशी पुरुषार्थद्वारा भाग्य वृद्धि प्राप्त गर्नेवाला, निकै साहसी, हिम्मती र उद्योगी होला।

जुन व्यक्तिको मकर राशिको चन्द्रमा लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस घरको सम्पत्ति जोगाउनेवाला र आफ्नू इज्जतको रक्षा गर्नमा

कु० नं० ७६०

८ ६
९ ७ ५
१०चं. ४
११ १ ३
१२ २

समर्थ होला। माता-पिताको सुख शक्तिलाई पाउनेवाला र ठूलो कारबारको सुख प्राप्त गर्नेवाला तथा प्रभावशाली एवं माननीय र मुखले नै काम गर्नेवाला भएर पनि कार्य स्थानमा केही आलस्य अनुभव गर्नेवाला, मान-प्रतिष्ठाको वृद्धि मनोयोगले घरै बसी-बसी गर्दै रहनेवाला र कार्यकुशल, स्वाभिमानी र राम्रा-राम्रा काम गर्नेवाला, निकै उच्च मानसिक विचार राख्नेवाला तथा राज-समाजमा मानप्रतिष्ठाको बलियो साधन संग्रह गर्नेवाला, त्यही मानप्रतिष्ठाले सुखको विशेष अनुभव गर्ने होला।

जुन व्यक्तिको कुम्भ राशिको चन्द्रमा लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धेरै थरिका काम गर्ने युक्तिहरू जान्नेवाला, बुद्धियोग र मनोयोगले आफ्नू प्रभुत्व शक्ति पाउने खालको होला। त्यो शिक्षित, प्रभावशाली, निकै बाठो र रजोगुणी स्वभावको एवं मानसिक विचारहरूबाट धेरै उच्च योजनाहरू आफ्नू उन्नतिका लागि सदैव विचार राख्नेवाला अर्थात आफ्नू कुरा माथि राख्न जान्ने, जिद्दी स्वभावको होला। सन्तानको सोखीन र सन्तान द्वारा नै उन्नति पाउनेवाला तथा लौकिक कर्महरूको ध्यान र मान राख्नेवाला, पिता स्थानको सुख केही न्यूनता सहित प्राप्त गर्नेवाला एवं पिताकै शक्तिले धनको लाभ पाउने खालको होला। आफ्नू हुकुम पालन गराउन एकहरो मस्तिष्कको व्यक्ति होला।

कु० नं० ७६१

८ ६
९ ७ ५
१० ४
११ चं. १ ३
१२ २

जुन व्यक्तिको मीन राशिको चन्द्रमा लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू मान-प्रतिष्ठामा केही न्यूनता पाउनेवाला र पिता स्थान र पिताको शक्तिमा केही दुर्बलता पाउनेवाला र मनोयोगको परिश्रमी कर्मद्वारा उज्ज्वल व्यापार गर्ने खालको र खर्च गर्ने शक्तिलाई वित्त शक्तिभन्दा बर्ता पाउनेवाला तथा आफ्नू मान सम्मानको रक्षाका लागि निकै बाधा-कष्ट र अनेक अनुचित किसिमले आफ्नू काम सिद्ध गर्न जान्नेवाला र शत्रु-स्थानमा र कष्ट-बाधाको स्थानमा मानसिक अशान्ति सहनेवाला तथा मावली पक्षबाट केही शक्ति पाउनेवाला र आफ्नू उन्नतिमा अनेक बाधा पाउने र गुप्त चाल चल्नेवाला र गुप्त शक्तिबाट साहस पाउने एवं बाहिरी स्थानको सम्पर्क शक्ति राख्ने खालको होला।

कु० नं० ७६२

८ ६
९ ७ ५
१० ४
११ १ ३
१२चं. २

जुन व्यक्तिको मेष राशिको चन्द्रमा लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस निकै बाबू साहेब झैं दैनिक व्यापार गर्ने अर्थात् उज्ज्वल व्यवसाय

कु० नं० ७६३

८ ६ ९ ७ ५ १० ४ ११ १चं. ३ १२ २

गर्नेवाला, मनोयोगको प्रभाव पाएको परिश्रमी कर्ममा प्रधान उन्नति एवं प्रभुत्व शक्ति पाउने खालको होला। निकै राम्री पत्नी तथा सुन्दर सुखभोग प्राप्त गर्नेवाला, स्वयं पनि सौन्दर्यको धनी होला। विवाह भइसकेपछि मान-सम्मान र उन्नति पाउनेवाला तथा इज्जतदार ससुराली पाएको र गृहस्थ जीवनमा महान् ऐश्वर्य पाउनेवाला, बढी बाठो कुशल कर्मिष्ठ एवं उत्साह-युक्त रहने खालको तथा व्यावहारिक ज्ञानको पालन उत्तम प्रकारले गर्ने र व्यावसायिक ज्ञानमा सिद्धियोग पाएको र मानसिक शक्ति पूरा भएको र सदैव भोग-विलास रूचाउने खालको होला।

जुन व्यक्तिको वृष राशिको चन्द्रमा लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट एवं अंगमा दुर्बलता र अर्को एक अंगबाट पूरा

कु० नं० ७६४

८ ६ ९ ७ ५ १० ४ ११ १ ३ १२ २चं.

बल पाउनेवाला अर्थात पिताको र आफ्नो मान-प्रतिष्ठाको सम्बन्धमा केवल धाक लगाउने इज्जतको विषयमा केही आन्तरिक दुर्बलता वा कमजोरी अनुभव गर्ने खालको होला। मनोयोगको गूढ शक्तिको बलले उन्नति प्राप्त गर्ने किसिमको प्रभावी होला। जीवनका दिनहरू शान र प्रतिष्ठापूर्वक व्यतीत गर्नेवाला र पुरातत्त्वको लाभ पाउने, विपत्ती आइपर्दा धैर्य धारण गर्न सक्नेवाला र कुटुम्ब स्थानमा केही न्यूनता अनुभव गर्नेवाला, आन्तरिक ज्ञान राख्ने भएको विदेश आदि स्थानमा जाने-आउने मान पाउने तथा मर्नेबेलामा बढी कष्ट नपाउने र मरेपछि सबैले सम्झनी गर्ने खालको होला।

जुन व्यक्तिको मिथुन राशिको चन्द्रमा लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस निकै भाग्यमानी र धर्म-कर्मलाई मात्रै र शुभ कर्महरूमा मन लगाउनेवाला र व्यापारमा शक्ति मनोयोग र भाग्यको बलले प्राप्त गर्नेवाला, पिता स्थानको शक्तिबाट फाइदा एकदम सजिलो काइदा वा रीतिले प्राप्त गर्नेवाला, राज्य-समाजमा मान-सम्मान युक्त निवास गर्नेवाला, निकै राम्रो काइदाले पुरुषार्थको पालन गर्नेवाला, धेरै दाजु-भाइ दिदी-बहिनी भएको र खूब भाग्यमानीमा गनिने खालको परम विवेकी तत्त्वखोजी र मानसिक बलले ठूला-ठूला कार्यहरूमा सफलता पाउनेवाला र ऐश्वर्य एवं यश प्राप्त गर्ने ईश्वरवादी होला।

कु० नं० ७६५

८ ६
९ ७ ५
१० ४
११ १ ३चं.
१२ २

जुन व्यक्तिको कर्कराशिको चन्द्रमा लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस निकै प्रतापी ऐश्वर्यवान् राज्य-समाजबाट सम्मान र प्रभाव पाउने र पिताको वृद्धि गर्नेवाला तथा पिताबाट वृद्धि पाउनेवाला तथा निकै ठूलो व्यापार गर्ने, मान-प्रतिष्ठा प्राप्त गर्ने तथा मनोबलको योगले निकै उच्च योजनाहरू द्वारा प्रभुत्व शक्ति प्राप्त गर्ने भएको र सदैव उन्नति पाउने नै मनमा विचार गरिरहन्ने भएको, आफ्नू मान-सम्मानले गर्दा ठूलो सुख र शान्ति प्राप्त गर्ने खालको अनि बढी स्वाभिमानी र राजसी ढाँचाले रहने भएको ठूलो इज्जतदार र मातृ स्थानको सुख र लाभ पाउनेवाला एवं सपत्ति सुरक्षित राख्न जान्ने र आफ्नू हुकुम पालन गराइछाड्ने, कर्मिष्ठ व्यक्ति होला।

कु० नं० ७६६

८ ६
९ ७ ५
१० ४चं.
११ १ ३
१२ २

जुन व्यक्तिको सिंह राशिको चन्द्रमा लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस निकै दिव्य प्रभावशाली लाभ पाउने भएको र मनोयोगको महान्

कु० नं० ७६७

८ ६
९ ७ ५चं.
१० ४
११ १ ३
१२ २

कार्यलाई बुद्धिको सहायताले महान् सफल तुल्याउने भएको, धेरै बर्ता उच्च लाभ पाउने चेष्टा आफ्नू मनमा सदैव राख्ने राख्नेवाला, पिता स्थानको उत्तम लाभ पाउनेवाला, प्रभावशाली ठूला कर्म गर्नेवाला र आकाशी कार्यको योजनाहरू द्वारा ठूलो लाभ पाउनेवाला र विद्या एवं बुद्धिलाई उत्तम किसिमले ग्रहण गर्न जान्ने भएको र सन्तान सुख प्राप्त गर्नेवाला, प्रसन्न रहने र उत्तम कर्म गर्ने अनि कर्मेष्ठी, राज्यमानी ठूलो व्यापारी तथा समाजबाट लाभ कमाउने मानयुक्त व्यक्ति होला।

जुन व्यक्तिको कन्या राशिको चन्द्रमा लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस पिता स्थानबाट हानि पाउनेवाला र बढी धन खर्च गर्नेवाला,

कु० नं० ७६८

८ ६चं.
९ ७ ५
१० ४
११ १ ३
१२ २

व्यापारमा हानि पाउनेवाला तथा अन्य स्थानबाट कारबारको योजना पाउनेवाला, राज्य स्थानमा न्यूनता अथवा हानि पाउनेवाला अनि मान-सम्मानको अभाव अनुभव गर्नेवाला र मान-सम्मानलाई मनोयोग द्वारा खर्चले र केही अन्य स्थानको सहयोगले शक्ति प्राप्त गर्नेवाला र आफ्नू प्रभाव र अभिमानको रक्षा हेतु धन व्यय गर्नेवाला र आफ्नू खर्चमा प्रभाव र प्रभुत्व देखाउन अघिसर्नेवाला, शत्रु स्थानमा पनि खर्चकै शक्ति र मनोयोगद्वारा प्रभाव देखाउन सक्ने र मनमा प्रभावको न्यूनता अनुभव गर्ने होला।

# तुला लग्नान्तर-भौमफलम्

जुन व्यक्तिको तुला राशिको मंगल लग्नको प्रथम स्थानमा छ भने त्यो मानिस निकै धनवान र ठूलो इज्जतदार तथा शरीरमा केही दुर्बलता पाउनेवाला र ठूलो बहुमूल्य व्यापार धन्दा गर्नेवाला निकै सुयोग्य सुशील पत्नी पाउनेवाला, आदर्श सुख भोग प्राप्त गर्नेवाला र ठूलो सुख प्राप्त गर्नेवाला, भूमि-भवन आदिको विशेष इज्जत पाउनेवाला, पुरातत्त्वको लाभ पाउनेवाला, शरीरमा रक्त विकार एवं चिन्ता इत्यादिको असुविधा पाउने भएको, व्यापारमा धनको संग्रह गर्ने शक्ति प्राप्त गर्नेवाला, निकै आदर्श जन बल भएको सुख-शान्तिको लागि निरन्तर कर्म गर्ने खालको होला।

कु० नं० ७६९

८ ६
९ ७मं. ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको वृश्चिक राशिको मंगल लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस व्यापारको क्रममा धनको वृद्धि पाउनेवाल, जन-शक्ति प्राप्त भएको तथा ससुरालीबाट आंशिक लाभ पाउनेवाला र स्त्रीपक्षमा भोग सुखको न्यूनता पाउनेवाला र धन-जनको शक्तिले भोग-विलासको पूर्ति तथा अधिकता पाउनेवाला र केही पुत्र-सुखले सन्तुष्टि पाउने होला। व्यापारको सम्बन्धमा धनको वृद्धिका लागि निकै तीक्ष्ण बुद्धिले काम लिनेवाला र सन्तानबाट सहायता पाउनेवाला र सन्तान पक्षमा केही बन्धन पाउने र भाग्य एवं पुरातत्त्वबाट केही लाभ पाउने इज्जतदार र परिश्रमी व्यक्ति होला।

कु० नं० ७७०

८मं. ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको धन राशिको मंगल लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस निकै प्रभावशाली बढी परिश्रम गर्नेवाला र व्यापारको सम्बन्धमा जन-बल र धन-बल तथा बाहुबलद्वारा प्रभावशाली उत्तम र राम्री पत्नीवाला किन्तु स्त्री र मातृ पक्षमा केही बन्धन पाउनेवाला र पिता स्थानमा केही असन्तोष पाउनेवाला, भाग्य वृद्धिको बराबर चेष्टा गरिरहने खालको होला। स्त्री भोग र व्यापार एवं धनका कारणहरूबाट मान-सम्मानको उत्तम वृद्धिमा केही न्यूनता वा कमजोरी पाउनेवाला एवं राज-समाजमा केही कमी अनुभव गर्ने खालको होला। ठूलो उत्साही प्रयत्नशील, यता-उता दगुर्न सक्नेवाला तथा शत्रुस्थानको पक्षमा र बाधा-कष्टमा पनि बडो स्फूर्तिले काम सपार्न जान्ने खालको, निकै साहस र हिम्मत भएको, राम्रो कद-काठीको र परिश्रमले धन कमाउने होला।

कु० नं० ७७१

८ ६
९मं. ७ ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको मकर राशिको मंगल लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारको महानताद्वारा ठूलो सुख र धन प्राप्त गर्नेवाला र भूमि-भवनको सुख पाउनेवाला तथा विवाह भइसकेपछि धनमा वृद्धि पाउने खालको होला। घरमा स्त्रीको प्रभुता पाउनेवाला र माताको स्थानबाट सुख प्राप्त गर्नेवाला, जन-बल र धन-बलको सुख पाउनेवाला, पितास्थानमा केही कमजोरी पाउनेवाला, धेरै थोक व्यापारमा र ठूलो काममा केही वास्ता नगर्ने तथा दुर्बलता पाउनेवाला भोग-विलासको खूब आनन्द पाउनेवाला, सुखी गृहस्थी भएको व्यक्ति होला।

कु० नं० ७७२

८ ६
९ ७ ५
१०मं. ४
११ १ ३
१२ २

जुन व्यक्तिको कुम्भ राशिको मंगल लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस बुद्धिको बलले दैनिक व्यापार गरेर धन कमाउने खालको होला। बढी धन खर्च गर्ने र विद्या प्राप्त गर्नेवाला, बुद्धिमा केही दुःख र बन्धनको योग परेको, गृहस्थीको सम्बन्धमा सुख मात्रेवाला, सन्तान पक्षमा केही विरोधी भावनाहरूको योग पाउनेवाला, धनको वृद्धिको तागतले अन्य स्थानहरूको लाभ प्राप्त गर्नेवाला तथा जीवनको दिनचर्यामा केही बन्धन र 'धनी हुँ' भन्ने तागत देखाउनेवाला र स्त्री वा गृहस्थीमा केही झ्याउलाहरूले युक्त रहेर शक्ति प्राप्त गर्नेवाला, बोलचालमा छिटै तान्ने र बुद्धिमती स्त्री हुने र स्वार्थ युक्त अनुभवशील होला।

कु० नं० ७७३

८ ६ ९ ७ ५ १० ४ ११ मं. १ ३ १२ २

जुन व्यक्तिको मीन राशिको मंगल लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस व्यापार र धनको सम्बन्धमा केही न्यूनता पाउनेवाला र केही कष्ट-बाधाहरूको मार्गबाट धनको तागत प्राप्त गर्नेवाला र स्त्री एवं गृहस्थीमा केही झ्याउलाहरूले युक्त रहेर शक्ति पाउनेवाला तथा भाग्य र देहको शरीरको सहयोग लिने-दिने खालको होला। खूब धन खर्च गर्नेवाला तथा शत्रु पक्षमा निकै प्रभाव राख्नेवाला र मावलीबाट केही मद्दत पाउने र देहमा केही विकार र इज्जत पाउनेवाला रोगादि र झगडा विवाद आदि मामलामा केही लाभ पाउनेवाला अनि आफ्नू प्रभाव राख्न जान्ने हुनाले धन र व्यापारको कमजोरी पनि सहनेवाला र भोग आदि विलासको सुखमा न्यूनता पाउनेवाला, बाँगो चाल चल्न जान्नेवाला व्यक्ति होला।

कु० नं० ७७४

८ ६ ९ ७ ५ १० ४ ११ १ ३ १२मं. २

जुन व्यक्तिको मेष राशिको मंगल लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस धनको ताग्तले आफ्नू दैनिक व्यापारको पूरा लाभ प्राप्त गर्नेवाला र दैनिक व्यापारबाट धमाधम बेसरी धन कमाउनेवाला र धन प्राप्तिको लागि लगातर कर्म, उद्योग गर्नेवाला, दैनिक कर्म-बलका कारणहरूले मनको संघर्षमा केही न्यूनता पाउने र शरीरमा केही बन्धन पाउनेवाला, पिता स्थानमा र राज्यस्थानमा केही दुर्बलता पाउनेवाला, निकै इज्जतदारमा गनिने खालको, राम्री र दृढ (बलिई) स्त्री पाउनेवाला, ससुरालीबाट केही लाभ प्राप्त गर्नेवाला र उच्च प्रकारको व्यापारको सम्बन्धमा न्यूनता पाउने तथा देहमा केही बन्धन पाउने खालको जन-बल युक्त होला।

कु० नं० ७७५

जुंन व्यक्तिको वृषराशिको मंगल लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस उपस्थित धनको केही हानि पाउनेवाला, पुरातत्त्वबाट धन प्राप्त गर्नेवाला, दैनिक व्यापारमा बर्ता दुःख-कष्ट पाउने खालको होला र झ्याउला सहित गूढतासित सम्बन्धित व्यापार गर्नेवाला, धनसंग्रहमा कमी र हानि पाउनेवाला र स्त्री एवं गृहस्थ र कुटुम्बिक क्लेशमा पर्नेवाला सहसा धन पाउनेवाला, धनको लागि साना-ठूला प्रयत्न र परिश्रम गर्ने, दाजु-भाइ दिदी-बहिनीको स्थानमा केही बन्धन पाउने व्यक्ति होला।

कु० नं० ७७६

जुन व्यक्तिको मिथुन राशिको मंगल लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस आफ्नू र पत्नीको भाग्यबाट धन प्राप्त गर्ने खालको र दैनिक

कु० नं० ७७७

| | | | |
|---|---|---|---|
| ८ | | ६ | |
| ९ | ७ | ५ | |
| १० | | ४ | |
| ११ | १ | ३मं. | |
| १२ | | २ | |

व्यापारबाट धनको वृद्धिगर्नेवाला र धनजनको तागतबाट अन्य स्थानहरूको पनि लाभ कमाउने भएको र खूब धन व्यय गर्नेखालको वा ठूलो सुख प्राप्त गर्नेवाला, मातृस्थानबाट खूब फाइदा पाउने भएको र भूमि-भवनको पनि खूब सुख भोग्ने खालको र गृहस्थी सम्बन्धी धन-जन द्वारा भाग्य-बलले सुखको अनुभव गर्नेवाला, दैनिक व्यापारको सुख प्राप्त गर्नेवाला, व्यापारमा गृहस्थी सम्बन्धी कार्य भोगमा सत्वगुणी कर्म गर्ने, धर्माचरण र धर्म-पालक, सकाम कर्म गर्ने इज्जतदार भाग्यमानी न्यायोक्त धन पाउने खालको व्यक्ति होला।

जुन व्यक्तिको कर्क राशिको मंगल लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस धनको तथा व्यापारको विषयमा न्यूनता (कमी) पाउनेवाला र मान

कु० नं० ७७८

| | | | |
|---|---|---|---|
| ८ | | ६ | |
| ९ | ७ | ५ | |
| १० | | ४मं. | |
| ११ | १ | ३ | |
| १२ | | २ | |

सम्मान एवं राजसमाजबाट पाउने इज्जतमा पनि न्यूनता पाउने खालको, स्त्री र पिताको स्थानमा पनि धनको कमीले गर्दा निकै अपामानजनक वेदना सहन गर्ने खालको र पिता स्त्री तथा कोष (ढुकुटी) मा कमी र कष्ट सहने भएको तथा क्षुद्र व्यापारबाट आजीविका चलाउन बाध्य भएको अनि ठूलो काममा हानि पाउने खालको एवं मातृस्थानको सुख-शान्ति पाउने भएको र विशेष सुखको इच्छाले गर्दा व्यापारको पक्षमा योटा अनावश्यक बन्धन झैं अनुभव गर्ने भएको एवं भोग-विलासमा न्यूनता (कमी) पाउने किसिमको तथा असली अकर्मण्य झैं मानिनेवाला र अपमानको बढी वास्ता नगर्ने किसिमको गुप्त कर्मेष्ठी व्यक्ति होला।

जुन व्यक्तिको सिंह राशिको मंगल लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस दैनिक व्यापारबाट र धन-जनको तागतद्वारा धेरै जबरदस्त आमदानी पाउनेवाला तथा बढी धन कमाउन जान्ने खालको र ठूलो-ठूलो मोटो स्थूल लाभ पाउनेवाला र स्त्री सुख प्राप्त गर्ने भएको र निकै बुद्धिमान र ठूलो प्रभावशाली एवं बांगो बाटोद्वारा झ्याउलो समेतको कर्महरूबाट विशेष लाभ पाउनेवाला, बढी हिम्मत (साहस) भएको एवं विपक्षीबाट लाभ पाउने भएको, बढी सतर्कताद्वारा काम गर्न जान्ने खालको र धन कमाउनु एकदम सामान्य काम हो भन्ने विश्वास भएको तथा फिक्री-चिन्ता नगरेर प्रसन्न रहने खालको र धारा प्रवाह बोल्ने, तोकिएको आमदानी पाउने अधिकारी होला।

कु० नं० ७७९

८ ६
९ ७ ५मं.
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको कन्या राशिको मंगल लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस धन-जनको धेरै ठूलो हानि पाउनेवाला, स्त्री र गृहस्थीमा अशान्ति पाउनेवाला तथा दैनिक व्यापारमा केही अशान्ति र हानि पनि पाउने खालको होला। दैनिक व्यापारमा केही अन्य स्थानको शक्तिद्वारा खर्चको माध्यमले लाभ पाउनेवाला, बढी शारीरिक परिश्रम गर्ने र दौड-धूपले आफ्नू काम सिद्ध पार्न जान्ने भएको, धेरै धन व्यय गर्ने बानी भएको, दाजु-भाइ र दिदी-बहिनी तथा व्यापारको बाटोमा एक प्रकारको कुर्ने बन्धन आइलागे झैं योग पाउने खालको होला। विपक्षीहरूमा केही प्रभाव पार्न सक्नेवाला धनको प्रभाव अनुभव गर्नेवाला अनि व्यापारमा केही विशेषता पाउनेखालको व्यक्ति होला।

कु० नं० ७८०

८ ६मं.
९ ७ ५
१० ४
११ १ ३
१२ २

# तुला लग्नान्तर-बुधफलम्

जुन व्यक्तिको तुला राशिको बुध लग्नको पहिलो स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी मानिने खालको तथा बर्ता धन खर्च गर्ने भएको र खर्च एवं भाग्यको शक्तिद्वारा शरीरको आनन्द भोग्ने खालको र शरीरमा केही दुब्लो भाव भएको होला। अन्य स्थानको सम्पर्कको निकै उत्तम लाभ प्राप्त गर्नेवाला, स्त्रीसित सम्बन्धित गृहस्थीको आनन्द भोग्नेवाला तथा व्यापारमा खूब सफलता पाउने धर्मको सम्बन्धमा निकै उच्च विचार राख्नेवाला र मान-प्रतिष्ठा प्राप्त गर्ने खालको तथा बाठो, परम विवेकी र न्यायान्याय बुझ्ने एवं शुद्ध न्यायको शक्तिमा केही न्यूनता पाउने किसिमको होला। धेरै परको कुरा विचार गर्नसक्ने, अलिकति दुर्बलताको साथै भाग्यमानी, प्रभावयुक्त, कोमल स्वभावको होला।

कु० नं० ७८१

८ ६
९ ७बु. ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको वृश्चिक राशिको बुध लग्नबाट द्वितीय स्थानमा छ भने त्यो मानिस धनवान् एवं इज्जतदार मानिने खालको र धन संग्रह शक्तिमा केही न्यूनता पाउने भए पनि धनको आनन्द भाग्य-शक्ति द्वारा र अन्य स्थानको सम्पर्क शक्तिद्वारा पाउने भएको अर्थात भाग्य र खर्च शक्तिको द्वारा जीवनको दिनचर्यामा भाग्य शक्तिको आंशिक चमत्कार प्राप्त गर्नेवाला अर्थात् भाग्य र खर्च शक्तिको द्वारा जीवनमा आनन्द अनुभव गर्नेवाला, पुरातत्त्वबाट पनि लाभ पाउनेवाला र खर्च रोकेर पनि बढी धन खर्च गर्ने किसिमको होला तथा कुटुम्बको स्थानमा केही कमजोरीको साथै वृद्धि पाउनेवाला, धर्मको सम्बन्धमा पनि केही दुर्बलताका साथै धर्म-धन संग्रह गर्ने खालको र धर्मद्वारा नै धनागम गर्ने व्यक्ति होला।

कु० नं० ७८२

८बु. ६
९ ७ ५
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको धन राशिको गुरु लग्नबाट तृतीय स्थानमा छ भने त्यो मानिस आफ्नू बल पुरुषार्थले भाग्यको वृद्धि पाउनेवाला, ठूलो भाग्यमानी मानिने खालको, अन्य स्थानको शक्तिको सम्पर्क द्वारा उन्नतिको मार्ग बनाउन जान्ने भएको, सर्वशक्तिको योगबाट आनन्द पाउने किसिमको र धर्मको वृद्धिबाट केही कमजोरीका साथै पालन गर्नेवाला, भाग्यको सम्वन्धमा केही कमजोरी भएर पनि विवेकको शक्तिले भाग्यलाई दरिलो, बलियो तुल्याउनेवाला तथा सनातनमा प्रचलित नियम पालन गर्नेवाला, त्यो पनि भक्तिको योगद्वारा सफल तुल्याउनेवाला, अनि साहस र हिम्मत भएको, कोमलांग भएको तथा दाजु-भाइ दिदी-बहिनीबाट केही दुर्बलता सहित राम्रो सम्पर्क पाउनेवाला, धार्मिक शक्तिको ज्ञान र भाग्य-शक्तिको ज्ञानबाट प्रभाव पाउने माननीय, यशस्वी होला।

कु० नं० ७८३

८ ६ ९बु. ७ ५ १० ४ ११ १ ३ १२ २

जुन व्यक्तिको मकर राशिको बुध लग्नबाट चौथो स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यशाली सुख भोग्नेवाला, खर्च गरेर सुख मान्नेवाला, मातृस्थानमा केही कमीका साथै आंशिक रूपमा दहोपना पाउनेवाला, अन्या स्थानहरूको सम्बन्धबाट खर्चको योगद्वारा सुखपूर्वक आफ्नै घरबाट उन्नति गर्नेवाला, विवेक शक्तिको भाग्य सम्बन्धी कार्यबाट सुख र मान-प्रतिष्ठा प्राप्त गर्नेवाला र माताको र भूमिस्थानको सुख ढीलो पाउनेवाला, भाग्यशक्तिको सदैव सहयोग पाउनेखालको र विवेक एवं सुखद कार्यबाट भाग्योदय पाउनेवाला, निकै इज्जतदार र सुखी मानिने खालको होला, धर्म-कर्म मान्ने अर्थात धर्मको कर्मरूपमा पालन गर्नेवाला होला।

कु० नं० ७८४

८ ६ ९ ७ ५ १०बु. ४ ११ १ ३ १२ २

जुन व्यक्तिको कुम्भराशिको बुध लग्नबाट पाँचौं स्थानमा छ भने त्यो मानिस धर्मको सम्बन्धमा धेरै परसम्मको गहीरो ज्ञान राख्नेवाला र धार्मिक विवेकका कुराहरू निकै कोमलत्तापूर्ण केही उल्टो-सोझोले गर्न जान्नेवाला, बडो बाठो विद्यावान् र बुद्धि-विद्या र वाणीको चक्र चलाएर भाग्य-वृद्धि गर्नेवाला र केही कमी सहित राम्रो सुख प्राप्त गर्नेवाला र सन्तान पक्षमा यौटा दुर्बल र अर्को भाग्यमानी, विवेकी सन्तान पाउनेवाला, बुद्धियोगले भाग्यशक्ति द्वारा दैनिक खर्च चलाउनेवाला, ठूलो नीतिज्ञ, परम विवेकी र अन्य स्थानहरूको सम्पर्क शक्तिबाट लाभ-बुद्धि र भाग्यले यश प्राप्त गर्ने खालको होला।

कु० नं० ७८५

८ ६ ९ ७ ५ १० ४ ११ बु. १ ३ १२ २

जुन व्यक्तिको मीन राशिको बुध लग्नबाट छैठौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा महान् दुर्बलता र अपयश पाउनेवाला र बर्ता संकोची विचार भएको र विवशताको चक्रमा अल्झी बढी खर्च गरेर भाग्यमा हानि पाउनेवाला र शत्रु स्थानमा अशान्तिको योग पाउनेवाला, अनि मावली पक्षबाट दुर्बलता वा न्यूनत्ता पाउने खालको होला। धर्मस्थानमा हानि पाउने भएको तथा गुप्त र निम्न श्रेणीको धर्म पालन गर्नेवाला तथा ईश्वरको भक्ति र परलोक धर्मको वास्ता नगर्नेवाला अर्थात धर्मको सम्बन्धमा निकै कमजोरी पाउनेवाला, आफ्नू भाग्यमा अफसोस गरेर चिन्तित रहनेवाला, डर र दुःख-कष्टको योग प्राप्त गर्नेवाला, अन्य स्थानहरूबाट सदैव ठूलो र राम्रो सम्बन्ध पाउनेवाला, अनि खर्चमा अपठेरो बेहोर्नेवाला, बढी गुप्त चाल चल्ने खालको व्यक्ति होला।

कु० नं० ७८६

८ ६ ९ ७ ५ १० ४ ११ १ ३ १२बु. २

जुन व्यक्तिको मेष राशिको बुध लग्नबाट सातौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यशाली र गृहस्थीको आनन्द पाउने खालको र विवाह

कु० नं० ७८७

८ ६ ९ ७ ५ १० ४ ११ १बु. ३ १२ २

भइसकेपछि व्यापारबाट उन्नति प्राप्त गर्नेवाला, खर्च-शक्तिलाई सुचारू-रूपले गृहस्थीको सम्बन्धमा पाउने भएको, अन्य स्थानको सम्पर्कद्वारा खर्चबाट विवेक र युक्तिहरूले भाग्य वृद्धिको योग पाउनेवाला, स्त्रीको स्थानबाट केही कमजोरीको साथै निकै उत्तम आनन्द प्राप्त गर्नेवाला, मान-सम्मान पाउने खालको र भाग्य एवं खर्च-शक्तिबाट भोग प्राप्तिको राम्रो साधन पाउने खालको होला। धर्मको सम्मबन्धमा लौकिक वृद्धिका लागि सकाम कर्म गर्नेवाला तथा स्त्रीमा पनि धार्मिक स्वभाव पाउनेवाला र व्यापारमा केही हानिको साथ-साथै सुन्दर वृद्धि पाउने खालको व्यक्ति होला।

जुन पुरुषको वृष राशिको बुध लग्नबाट आठौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्यमा क्लेश अनुभव गर्नेवाला, खर्चको सम्बन्धमा

कु० नं० ७८८

८ ६ ९ ७ ५ १० ४ ११ १ ३ १२ २बु.

कमजोरी र अशान्ति पाउनेवाला, खर्च र भाग्य-शक्तिको कुनै अन्य परको स्थानबाट प्राप्त गर्ने खालको तथा धर्मको सम्बन्धमा निकै न्यूनता पाउने, निजी धर्मको पालन केही उल्टो काइदाले गर्नेवाला, पैत्रिक र पुरातत्त्वको शक्तिबाट फाइदा कमाउने तथा गुप्त र गूढ योजनाहरू वा भाग्य-बलबाट धनको वृद्धि गर्दै रहँदा पनि केही न्यूनता (दुर्बलता) पाउनेवाला, समयको दिनचर्यालाई केही राम्रो र आनन्दले बिताउने, आयमा केही बलियो योग पाउनेखाको र पारलौकिक भन्दा लौकिक जीवनको नै बढी चिन्ता गर्ने र मृत्युको सुन्दर समय पाउने व्यक्ति होला।

जुन व्यक्तिको मिथुन राशिको बुध लग्नबाट नवौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी र यश प्राप्त गर्नेवाला अन्य स्थानको सम्पर्कबाट स्वतः भाग्यवृद्धिलाई विवेक शक्ति द्वारा प्राप्त गर्नेवाला, दैवी सहायताको अधिकार पाउनेवाला, भाग्यको बलले स्वतः खर्चको संचालन शक्ति पाउने भएको र धर्मको स्थानबाट केही न्यूनताको साथ-साथै बल पाउने, ईश्वरमा विश्वास राख्नेवाला, ईमानदार कहिने भएको, भाग्यको सम्बन्धमा पनि केही न्यूनताको साथै निकै दरिलो स्थिति पाउनेवाला, प्रथम अवस्थामा भाग्यको केही चिन्ता गर्नेवाला, युवावस्था देखि वृद्धिमा प्राप्त हुनेवाला, हिम्मती, पुरुषार्थी, दाजु-भाइ दिदी-बहिनी भएको होला।

कु० नं० ७८९

८ ६
९ ७ ५
१० ४
११ १ ३बु.
१२ २

जुन व्यक्तिको कर्कराशिको बुध लग्नबाट दसौं स्थानमा छ भने त्यो मानिस ठूलो भाग्यमानी प्रतापी र ऐश्वर्य प्राप्त गर्नेवाला, भाग्य-शक्तिबाट वा अन्य स्थानहरूको सम्पर्कबाट निकै राम्रो व्यापार गर्ने भएको तथा खर्च- शक्ति द्वारा र उत्तम विचारहरू द्वारा तथा राम्रा कर्महरू गर्दै रहनाले राम्रो प्रतिष्ठा प्राप्त गर्ने भएको र पितास्थानबाट केही दुर्बलताका साथै श्रेष्ठ भाग्यको उन्नति पाउने भएको र पिताको उन्नतिका साथै केही अवनति पनि पाउने खालको र सुखका साधन भेट्टाउने र बढी धन व्यय गर्ने, धर्मको सम्बन्धमा केही कमजोरी सहित धर्मलाई कर्मको रूपमा पालन गर्ने, मातृस्थानमा केही न्यूनताका साथै राम्रो साधन पाउने, सम्माननीय, प्रतिष्ठवान् र इज्जतदार होला।

कु० नं० ७९०

८ ६
९ ७ ५
१० ४बु.
११ १ ३
१२ २

जुन व्यक्तिको सिंहं राशिको बुध लग्नबाट एघारौं स्थानमा छ भने त्यो मानिस आफ्नू भाग्य र अन्य स्थानको शक्तिबाट खूब लाभ कमाउने खालको र उत्तम विवेक बुद्धिले आफ्नू आयमा वृद्धि गर्नेवाला र आमदानीको स्थानमा सफलताको साथै साथ केही कमजोरी (न्यूनता) पनि अनुभव गर्ने भएको, विद्या र बुद्धि ग्रहण गर्नेवाला, बढी विवेकी दूरदर्शी र सन्तान पक्षमा केही न्यूनताका साथै सफलता पाउनेवाला र आम्दानीको विषयमा केही दुर्बलताका साथ राम्रो न्यायले काम सिद्ध पार्नेवाला, धर्मको सम्बन्धमा पनि केही कमजोरीका साथै राम्रो विवेकद्वारा धर्मको लाभ पाउनेवाला भाग्यमानी, बाठो होला।

कु० नं० ७९१

८ ६
९ ७ ५बु.
१० ४
११ १ ३
१२ २

जुन व्यक्तिको कन्या राशिको बुध लग्नबाट बाह्रौं स्थानमा छ भने त्यो मानिस बढी धन व्यय गर्ने खालको, भाग्यस्थानमा कैयौं पल्ट हानिहरू पाउने भएको, युवावस्था पछि अन्य स्थानहरूको सम्पर्कबाट विवेक शक्तिद्वारा महान् भाग्य वृद्धि पाउनेवाला, धर्मको यथार्थ अंगमा श्रद्धा र विश्वास राख्नेवाला, धर्मको आडम्बर रूपलाई मान्नेवाला, तीर्थयात्रा इत्यादि बाहिरी धर्ममा बढी खर्च गर्ने भएको अर्थात् देखावटी धर्मलाई श्रद्धा सहित पालन गर्नेवाला, मावली पक्षमा हानि पाउनेवाला र प्रभावमा कमी भेट्टाउने खालको, साहसको स्थानमा भय मान्नेवाला र यश प्राप्तिमा न्यूनता पाउने भए पनि भाग्यमानी मानिने तथा विपक्षको सम्बन्धमा विवेकको निम्न चाल चल्नेवाला होला।

कु० नं० ७९२

८ ६बु.
९ ७ ५
१० ४
११ १ ३
१२ २